शहीदहरूको बलिदानबाट

स्थापित बहुदलीय

व्यवस्था अन्तर्गत

जनताको हक–हितका लागि

सदा आवाज उठाउन

"गोरखा–गौरव"

पत्रिका

सधैं

क्रियाशील रहने छ भन्ने

आशा राख्दै सफलताका लागि

हार्दिक शुभ–कामना गर्दछौं ।

चितवन कोई नेपाल (प्रा) लि.

परिवार

पोष्ट बक्स न. ४८१६

फोन नं. ४१००९०, ४१४३९६

नक्साल, काठमाडौ

मुद्रक: शारदा प्रेस, केलटोल, काठमाडौ




प्रकाशक:

गोरखा–काठमाडौं प्रजातान्त्रिक समाज, काठमाडौं

# गोरखा-गौरव

वर्षः-१ मितिः- २०४७ अङ्कः-१

प्रकाशक
गोरखा-काठमाडौं प्रजातान्त्रिक समाज २०४७
काठमाडौं

| सम्पादक समूह | सल्लाहकार |
|---|---|
| नवराज कट्टेल | चिरञ्जीवी वाग्ले |
| रामजी रेग्मी | चिन काजी श्रेष्ठ |
| तीर्थराज अधिकारी | चन्द्र प्रसाद न्यौपाने |
| गौतम न्यौपाने | ध्रुवराज वाग्ले |
| प्रेम शंकर श्रेष्ठ | चैतमान श्रेष्ठ |

सहयोग स्वरूप रु

## गोरखा–काठमाण्डौ प्रजातान्त्रिक समाजका पदाधिकारीहरू




मुद्रक
शारदा प्रेस
केलटोल, काठमाडौं


## यस अङ्कमा

कविता





# गोरखा–गौरव

गोर्खाली ए ! तरुण बल हो सिर्जना मूल शक्ति ।
जागौं लागौं समय गतिमा बाँच्न स्वातन्त्र्य निम्ति ॥
पर्दा खोलौं अब नजरको आँट विश्वास फैलौं ।
आफ्नै बस्ती श्रम–शिविरमा हात गोडा उचालौं ॥

॥ १ ॥

चर्को नारा फजुल गफले पेट हाम्रो भरिन्न ।
मान्छे हैनौं पशु सरहका भावना छिन्न भिन्न ॥
हत्या हिंसा कपट छलमा भक्ति आस्था नराखौं ।
काला भाला धन र खुकुरी शक्ति हामी नठानौं ॥

॥ २ ॥

हामी मान्छे प्रगति पथमा स्वच्छ आकाश खोजौं ।
आस्था प्यारो सम-हृदयको मानवीभाव रोजौं ॥
गोर्खा हाम्रो अमर-मुटु हो प्राण यस्मै छ हाम्रो ।
यो बाँचे नै रसमय कला फिर्छ सौभाग्य हाम्रो ॥

॥ ३ ॥

–तीर्थ



# बी. पी. प्रति

मोदनाथ खनाल

चोखो आस्था हृदय तलमा सल्बलाई रहेछ ।
नौलो ज्योत्स्ना दिलतिर कतै मुस्कुराई रहेछ ।
पर्दा च्याती नव किरणले सिर्गना ल्याउदैछ ।
तिम्रै बाटो तरूण बलले मीत क्यै लाउँदैछ ॥१॥

योद्धा ! तिम्रो अमर सपना रात सक्तैन झार्न ।
अग्लो छातीसित दिन दिनै कालले पर्छ हार्न ।
बाँच्ची साँच्यौ सबल मुटुको जीतको जिन्दगानो ।
सिङ्गो आफैं युग पुरूष हो चेतनाका बिहानी ॥२॥

यै माटोको कण कण तिमो गीत ह्वौं प्रीत नौलो ।
यै माटोको रगत बल हो न्याय संग्राम पैलो ॥
आँखा चिम्ली समर विजयी हैन को भन्न सक्छ ?
तिम्रो यात्रा उदित छवि त्यो मेट्न को रोल्न सक्छ ?॥३॥

डाँडा पाखा बगर वनमा मान चर्चा छ तिम्रै ।
लाखौं मान्छे अझ नजिकिदै सास फेर्दै छ तिम्रै ॥
टाठा बन्दा अझ ननिकछौ संझना मावभित्र ।
यौटै मान्छे तर तर विविध छौ मानवा मानचित्र॥४॥

तिम्रै इच्छा अन समयमा फुल्छ यो फूलवारी ।
काँढा आफै कटु प्रलय हुन् धूर्त अल्ये अघोरी ॥
तिम्रै बोली बचनहरूका कर्मका साथ ज्यूदै ।
गर्छौ आत्मा अमर पथको शान्तिका कामना यै ॥५॥



# शुभ-कामना



(सर्वमान्य नेता
श्री गणेशमान सिंह)

"गोरखा गौरव" पत्रिका प्रकाशन हुन लागेको खबर सुन्दा खुसी लाग्यो ।

नेपालको वर्तमान राजनीतिक सन्दर्भमा यसले आफ्नो प्रजातान्त्रिक आदर्शलाई जन समक्षमा दृढताका साथ राख्नेछ भन्ने विश्वास लिन्छु ।

आजको प्रजातन्त्रको जग दरिलो बनाउने बेलामा जन-चेतना बढाउन यसले योगदान प्रदान गर्दै प्रजातान्त्रिक समाज-वादको पुनीत आदर्श अनुकूल रचनाहरू संकलन गरी मौलिक चिन्तनको स्वतन्त्र अभिव्यक्ति गर्दै, संकुचित र कुण्ठित सोचाइ पार गरी हाम्रो पार्टी संगठनमा जीवन्तः प्रेरणा दिने छ भन्ने आशा राख्छु ।

२८।६।०४७

[signature]

# शुभ–कामना



"गोरखा-गौरव" प्रकाशनको लागि शुभ-कामना व्यक्त गर्दछु ।

प्रजातन्त्र, राष्ट्रियता र समाजवादको आदर्शलाई अगाडि बढाउने हाम्रो उद्देश्यमा यो पत्रिका सहयोगी सिद्ध हुनेछ ।

प्रजातन्त्रको हाम्रो लामो इतिहासको संघर्षमय परम्पराको प्रतिफल प्रजातन्त्रको पुनःस्थापना गर्न नेपाली जनता सक्षम भएका छन्, अब यसको सम्वर्धन गर्ने अर्को अझ कठिन दिनमा पनि हाम्रो पार्टी सफल हुनेछ भन्ने विश्वास लिन्छु ।

जय नेपाल !

(सम्माननीय प्रधानमन्त्री तथा ने. कां. का कार्यवाहक अध्यक्ष-श्री कृष्णप्रसाद भट्टराई)

२८।६।०४७

कृष्णप्रसाद भट्टराई





# 'हाम्रा निम्ति जनता नै जनार्दन हुन् ।'

–महामंत्री श्री गिरिजा प्र. कोइराला

(गोरखा गौरवका तर्फबाट ने.का.का महामन्त्री श्री गिरिजाप्रसाद कोइरालासंग लिइएको अन्तरवार्ता)

१. ऐतिहासिक राष्ट्रिय जनआन्दोलन पछि मुलुकमा देखा परेको सकारात्मक राजनैतिक वातावरण र दयनीय आर्थिक अवस्थाबाट नेपाललाई अघि बढाउन बी. पी. ले परिकल्पना गर्नु भएको प्रजातान्त्रिक समाजवादलाई कसरी निर्वाह गर्नु पर्ला ?

१. बी. पी. को प्रजातान्त्रिक समाजवादी चिन्तनले एउटा यस्तो समाजको परिकल्पना गरेको छ जहाँ हाम्रो देशका बहुसंख्यक गरीब र निमुखा जनतालाई आफ्नो निम्ति एउटा ओत लाग्ने घर, गोठ, आँगनमा दुहुना गाई भैंसी, आफ्ना परिवार बालबच्चालाई शिक्षादीक्षाको सुविधा तथा बिरामी पर्दा औषधीमुलोको व्यवस्था गर्ने सुविधा होस् । जीवनका यी न्यूनतम भौतिक सुविधाहरूका साथै प्रत्येक नेपाली परिवारले अथवा नेपाली जनताले आफ्नो निजी स्वतन्त्रता आध्यात्मिक चेतना र व्यक्तित्व विकासको निम्ति पूर्णतः प्रजातान्त्रिक अधिकारहरू पनि पाउनु पर्छ भन्ने बि.पी.को दृष्टिकोण थियो । मान्छेको जीवनलाई यसरी भौतिक आवश्यकताहरू तथा स्वतन्त्रता र मानव चेतनालाई रक्षा र सम्मान गर्ने राजनैतिक, सामाजिक र सांस्कृतिक आवश्यकताहरूको समानसुविधाहरूले युक्त गराइनु पर्दछ भन्ने बी. पी. को आग्रह थियो । बी. पी.को यो संकल्पलाई पुरा गर्ने हामीले देशमा भर्खर पुःनस्थापित भएको प्रजातन्त्रलाई एकातिर रक्षा र सम्वर्धन गर्नु पर्छ भने अर्कोतिर नेपालका गाउँ-गाउँमा बस्ने, जीवनभरी सधैं कुटो-कोदालो गर्ने किसान र मजदूर तथा हरेक वर्गका शोषित र पीडित जनताको उत्थान गर्ने विकास योजनालाई पहिलो प्राथमिकता दिएर राष्ट्र निर्माणको प्रयास थाल्नु पर्दछ ।

२. प्रजातन्त्रका विरूद्ध देशमा देखिएको प्रतिगामी तत्वको शक्तिलाई कसरी मूल्यांकन गर्नु भएको छ ? हालको जनशक्तिलाई प्रजातन्त्रको सम्वर्धनको लागि सक्षम राख्न के कस्ता प्रयासहरू गर्नु पर्ला ?

२. प्रतिगामी शक्तिहरूको मूल्यांकन गर्ने नकारात्मक वा अनुत्पादक चिन्ता लिनु भन्दा देशमा प्रजातन्त्र र प्रगतिको पक्षमा लाम लागेको

त्यो विशाल नेपाली जनशक्ति तर्फ दृष्टिपात गर्नु वा त्यो प्रजातन्त्रिक शक्तिको पौरख माथि विश्वास गर्न त्यसको मूल्याकंन गर्नु म बढी उपयुक्त र सकारात्मक ठान्दछु । हाम्रो देश नेपालमा अहिले प्रजातन्त्रको पक्षमा एउटा विशाल जनशक्ति उर्क्लिएको छ । नेपाली कांग्रेसका दायित्व र चुनौती जनशक्तिको यो उर्लंदो भेललाई संगठित गर्न सक्नु हो ।

प्रतिगामी शक्तिहरू इतिहासमा कहिल्यै पनि निमिट्यान्न भएर जाँदैनन् । घात लगाएर उपयुक्त मौकाको खोजोमा पर्खेर बसि राखेका हुन्छन् ।

तर नेपाली जनतालाई प्रजातन्त्रको पक्षमा एउटा सुनिश्चित राजनैतिक चिन्तन र आर्थिक विकासको बाटोमा संगठित र आबद्ध राख्न सक्यौं भने प्रतिगामी शक्तिको हर प्रयास निष्फल हुनेछ नेपाली कांग्रेसले गाउँ-गाउँमा पहाडमा तराईमा प्रजातान्त्रिक संस्कृति र चेतना फैल्याएर जनताको शक्तिलाई संगठित र सचेत राख्ने यत्न गर्नु पर्दछ।

**३. एक जिम्मेवार प्रजातान्त्रिक राजनैतिक शक्तिकारूपमा रहेको ने. का. ले राष्ट्रिय श्रोत र साधनहरूको परिचालनका लागि जनताका सामु कस्ता सैद्धान्तिक तथा व्यावहारिक कार्यक्रमहरू प्रस्तुत गर्नु उपयुक्त होला ? अर्थात् ने. का. कस्ता किसिमका आर्थिक, राजनैतिक वा सामाजिक ढाँचाको नमूना जन समक्ष राख्न चाहन्छ ?**

३. नेपाली कांग्रेसले सधैं एउटा समानमुलुक सामाजिक ढाँचा खडा गर्ने संकल्प दोहोऱ्याइ आएको छ । एउटा यस्तो प्रजातान्त्रिक राजनैतिक पद्धति प्रति नेपाली कांग्रेसको वचनबद्धता छ जहाँ एउटा हलो बोकेको किसान देखि राजगद्दिमा आरूढ राजाले पनि नेपालको भूमि प्रति समान रूपले उत्तिकै अधिकार भएको महशुश गर्न सकुन् । भोटो र लगौटि लगाउने श्रमिक नेपालीहरू हुन् वा ठूला ठूला महल र अट्टलिकामा बस्नेहरू हुन् सबैको निम्ति देश र देशको माटो प्रति उत्तिकै अधिकारको भावना सुरक्षित गर्ने प्रजातान्त्रिक राजनैतिक ढाँचाको निम्ति नेपाली काँग्रेसले यत्रो लामो संघर्ष गरेको हो । देशको सम्पदा साधन र श्रोतहरूमा कुनै एउटा व्यक्ति वा वर्गको एकाधिकार नहोस्, सरकारको सीप, प्रविधि, र योजनाहरू शोक, गरीवी र अशिक्षा तथा रोगले पिल्सिई राखेका नेपाली जनताहरूको जीवन स्तर उचाल्ने तर्फ लक्षित हुनुपर्छ भन्ने नेपाली कांग्रेसको विकास सम्बन्धी धारणा रहेको छ । यिनै सैद्धान्तिक प्रतिवद्धताले डोऱ्याएर नेपाली कांग्रेसले कृषि, उद्योग, व्यापार, शिक्षा, स्वस्थ तथा पर्यावरणका सम्बन्धमा व्यवहार मूलक कार्यक्रम अपनाउनेछ । नेपाली कांग्रेसले धान्न नसकिने विकासको ढाँचा वा पूरा गर्न नसकिने विकास योजनाहरूको कागजी अभ्यास भन्दा गरीब नेपाली जनताको जीवनस्तरलाई तुरून्तै प्रभावित गर्ने खालका विकास कार्यक्रमलाई प्राथमिकता दिने लक्ष्य राखेको छ । नेपाली जनतालाई ठूला-ठूला संकल्प र सपना वा देखाउनुको साटो नेपाली कांग्रेस स्यानो र सिमीत स्तरकै तर पूरा गर्न सकिने वाचा वा आर्थिक विकासको ढाँचाको पक्षमा छ ।

**४. अर्थतन्त्रको मेरूदण्डका रूपमा रहेको हाम्रो कृषि क्षेत्र र यसै पेशामा आश्रित करिब ६० प्रतिशत कृषक जनसंख्याको निर्वाह स्तरमा गुज्रिएको विद्यमान अवस्थालाई माथि उठाउन ने. का. ले के कस्ता कार्यक्रमहरू अगाडि बढाउनु पर्ला ?**



४. देशका बहुसंख्यक किसानहरूको उत्थान नगरी नेपालको विकास भएको मानिने छैन । कृषि क्षेत्रमा आधारभूत परिवर्तन गर्न पंचायती शासनकालमा चलि आएको वेमेलपूर्ण र अवैज्ञानिक भूमि बन्दोवस्तमा सुधार गर्न जरूरी छ । खेती योग्य जमिन अहिलेसम्म चलिआएको द्वैध-स्वामित्वको अन्त्य नगरी भूमिको उत्पादकत्व कसैगरी पनि बढाउन सकिन्न । प्रजातान्त्रिक मर्यादा अनुरूप नेपाली कांग्रेसले जमीन जोत्ने किसान र मध्यम वर्गीय जग्गा धनीहरू दुबैलाई चित्त बुझ्ने गरी भूमिमा वैज्ञानिक सुधारको आरम्भ गर्नेछ। किसानहरूको उन्नतिको लागि जग्गाको स्वामित्व सम्बन्धी निर्णय गरेर मात्र पनि पुग्दैन । अहिले हजारौंको संख्यामा वेरोजगार र अर्धवेरोजगारीको अवस्थामा हाम्रा किसान दाजुभाईहरू तथा दिदी बैनीहरूले बस्नु परिराखेको अवस्था छ । त्यसकारण गाउँ गाउँमा पहाडमा मधेशमा रोजगारीको अवसर नजुटाई गरिब किसानहरूको आयमा वृद्धि हुने कार्यक्रम नवनाई ग्रामीण किसान जनताको उन्नति हुँदैन । यस वाहेक कृषि उत्पादन तथा वनपैदावारमा आधारित उद्योगहरूको स्थापना गरेर खेतीमा लागि राखेका पूँजी र श्रमलाई बढी उत्पादन मूलक बनाउनु पर्दछ । यसै गरी माछा पाल्ने, गाईभैंसी, भेंडावाखा, कुखुरा आदिको पालन, फलफूल सागसब्जीको खेती, निजी सामूहिक वन-जंगल लगाउने कर्यक्रम संचालन गर्न सक्नु पर्दछ यसो गर्दा किसानहरूका निम्ति आय रोजगारीका थप अवसरहरूको वृद्धि हुनेछ । यस वाहेक किसान दाजुभाइ दिदी बैनिहरूका निम्ति उपयुक्त प्रविधि र कृषि शिक्षाको प्रचार बिना कुनै भेदभाव र प्रशासनिक झंझट कृषि ऋण दिने सुविधा, मल, विउ र सिंचाईको विस्तार, कृषि उब्जनीको उचित मूल्य तथा कृषि पैदावारलाई मध्यस्थहरूको आर्थिक शोषण हुन नदिई बिक्री वितरण गर्ने गराउने इमान्दार प्रयास सरकारले गर्नु पर्दछ भन्ने नेपाली कांग्रेसको दृष्टिकोण छ । जननायक वि. पी. ले सधैं भन्नु हुन्थ्यो–नेपाल भनेको ९५ प्रतिशत नेपालीहरूको आश्रय थलो गाउँ हो तथा नेपालका उन्नति गर्न भनेको यस्तै गाउँ र ग्रामीण किसान जनताहरूको उन्नति गर्नु हो । । त्यसैले जनतामूखी सरकारले गाउँ र ग्रामीण किसान जनतालाई प्रत्यक्ष र तुरून्तै राहत पुग्ने यस्तै विकास योजनाहरूलाई प्राथमिकता दिने नेपाली कांग्रेसको संकल्प छ ।

**५. केही आलोचकहरूले एक जिम्मेवार प्रजातान्त्रिक राजनैतिक शक्तिका रूपमा रहेको ने. का. भित्र पनि संगठनात्मक सुदृढता र वाञ्छित अनुशासनको अभाव छ भन्दछन् र दल भित्र सिद्धान्तवादी र अवसरवादी शक्तिको अन्तर संघर्ष रहेको पनि चर्चा गर्दछन् । यसबारे यहाँको दृष्टिकोण कस्तो छ ?**

५. एउटा प्रजातान्त्रिक पार्टी कठोर अनुशासन र नियन्त्रणको बन्धनमा फस्टाउन सक्दैन । बिरोध र मतभेदलाई निर्मूल गर्ने अधिनायकवादी यत्न त केवल एकदलीय राजनीतिका पक्षधरले मात्र गर्छन् ।

तपाईहरूलाई थाहा छ, ४४ वर्षको नेपाली कांग्रेसको इतिहासमा अवसरवादी तत्वले पार्टीको ऐतिहासिक निर्णयहरूलाई कहिल्यै

प्रभावित पार्न सकेको छैन । त्यसैगरी नेपाली कांग्रेसको पार्टी संगठन पंचायतको त्यत्रो कठोर प्रहार र दमन चक्रमा पनि भत्किएन। आदर्श प्रति निष्ठावान् साथीहरूका एउटा सशक्त जमात छ नेपाली कांग्रेसमा जस्ले पार्टीलाई युद्ध र वाञ्छित दिशा तर्फ डोऱ्याउने छ भन्ने मलाई विश्वास छ ।

त्यो सत्य हो कि प्रजातान्त्रिक पार्टी भित्र हुनु पर्ने विचारको विविधता हाम्रो पार्टीमा पनि हुन सक्छ। यसै गरी हामीले हाम्रो पार्टीको अहिलेको संगठनात्मक स्वरूप हेरेर मात्र ढुक्क बस्ने वेला छैन । नेपाली कांग्रेसले पार्टी भित्र प्रजातान्त्रिक मर्यादा अनुरूप अनुशासन कायम राखेर अझ बढी शुद्ध र बलियो पार्टी संगठन बनाउने छ । त्यसका निम्ति तत्पर र सचेत रहन म हाम्रा साथीहरूलाई आग्रह पनि गर्दछु । बी· पी. ले एउटा ठूलो मूलमन्त्र हाम्रा साथीहरूका निम्ति सिकाएर जानू भएको छः– हृदयमा कहिल्यै बाटो बिराएको आभास भयो भने अथवा निर्णय गर्न गाह्रो भयो भने एउटा हातमा शहीदका पाउ तथा अर्को हातमा देशको माटो समाएर आफ्नो आत्मको वाणी सुन्ने आग्रह र निर्देशन गर्नु भएको थियो बि. पी. ले आफ्नो जीवनको अन्तिम घडीमा । हाम्रा साथीहरूलाई यो मूल-मन्त्रले सधैं आफ्ना आदर्श र पार्टीप्रति निष्ठावान् बनाउन प्रेरित गरिराख्ने छ ।

६. एउटा अग्रणी राजनैतिक दल ने. का. का महामन्त्री हैसियतले तपाँई राष्ट्रका नागरिकहरूबाट कस्तो सहयोगको अपेक्षा गर्नु हुन्छ ?

६. हाम्रा निम्ति जनाता नै जनार्दन हुन् । हाम्रा निर्णय र कार्यक्रममा शक्तिका श्रोत जनता नै हुन् । त्यसैले हामी जनतालाई सधैं आफ्ना अधिकारहरू प्रति सचेत र मुलुकको राजनीति प्रति चनाखो भई वस्ने आग्रह गर्दछौं । अहिले देशलाई निर्माणको बाटोमा लानु पर्ने वेला छ त्यसंले जनतालाई हामी राजनैतिक दलहरूको राजनैतिक र आर्थिक कार्यक्रममा आबद्ध र संगठित हुन पनि अनुरोध गर्दछौं । नेपाली कांग्रेसको महामन्त्रीको हैसियतले मैले जनताबाट अपेक्षा गर्ने सहयोग के हो भने हामी सबैले मिलेर प्रजातन्त्रको रक्षा र सम्वर्धन गरौं, देशमा प्रजातान्त्रिक संस्कृति र मर्यादाको विकास गरौं, देशलाई फेरि एकदलीय तानाशाहीको बन्धनमा जानबाट जोगाऔं ।

७. आगामी ग्राम-निर्वाचनमा आफ्नो पार्टीलाई विजयी बनाउन के कस्तो रणनीति सोच्नु भएको छ ?

७. हाम्रो एउटै रणनीति छ- जनताको विश्वास जित्ने । बलपूर्वक, छलकपटद्वारा वा नचाहिने नाराहरूद्वारा होइन इमानदारीपूर्वक तथा शान्तिपूर्ण प्रचारद्वारा हामी जनताको विश्वास जित्ने प्रयत्न गर्नेछौं । जातीय, धार्मिक वा क्षेत्रीय द्वेष र कलहको भावना नभड्काई जनतालाई प्रजातन्त्रको महत्व बुझाएर तथा नेपाली कांग्रेसको ऐतिहासिक भूमिका र भविष्य-को समाजवादी राजनैतिक आर्थिक कार्यक्रम प्रति आकर्षित गरी पार्टीलाई विजयी बनाउने हाम्रो रणनीति हुनेछ ।





# कार्यकारी अध्यक्ष कृष्णप्रसाद भट्टराईको उद्घाटन भाषण

**(नेपाली कांग्रेसको ०४६ कार्तिक २०, २१ र २२ गते बसेको केन्द्रीय समितिको बैठकले राष्ट्रिय एवं अन्तर्राष्ट्रिय राजनैतिक गतिविधिको विश्लेषण गरी 'राष्ट्रिय जन आन्दोलन' गर्ने निर्णय गरेको थियो । आन्दोलनका बारेमा महत्वपूर्ण पाँचवटा प्रस्ताव पास गर्दै कार्यक्रम रणनीति र तिथिमिति ०४६ माघ ५ गते हुने ने. कां. को राष्ट्रिय सम्मेलनले तय गर्ने कुराको पनि निधो भएको थियो । सो अनुसार माघ ५ गते ने. कां. का कार्यवाहक अध्यक्ष श्री कृष्णप्रसाद भट्टराईले गर्नु भएको उद्घाटन भाषण)**

स्वागताध्यक्ष महोदय,
आमन्त्रित विशिष्ट अतिथिहरू,
उपस्थित दाजु–भाइ–दिदी–बहिनीहरू !

हाम्रा आदरणीय नेता र पथ–प्रदर्शक जननायक स्वर्गीय बी. पी. को निधन पछि सम्पन्न एक राष्ट्रिय सम्मेलनले मलाई कार्यकारी अध्यक्ष छानेको र ४१ सालमा अर्को सोही किसिमको सम्मेलनले देशव्यापी रूपमा शान्तिपूर्ण सत्याग्रह गर्ने निधो गरेको र ४२ साल ज्येष्ठ १० गतेदेखि सो सत्याग्रह आषाढ ६ गतेसम्म ठूलो सफलताका साथ चलेको पनि हो । तर, यी भन्दा अघि नै ३४ सालमा पटना सम्मेलनमा बी. पी. को अध्यक्षतामा एक यस्तै भेलाले मलाई कार्यकारी अध्यक्ष छानेको थियो । उहाँको रुग्नताका कारणले कार्यकारी अध्यक्ष बनाउने उक्त प्रस्ताव सर्वसम्मतिद्वारा अनुमोदित भएको थियो, यद्यपि म चाहिं यसलाई उहाँको उदारताजन्य सहृदयता नै ठान्दछु ।

यी राष्ट्रिय सम्मेलनहरूपछि आज यो बृहत् सम्मेलन पुनः राजधानीमा हाम्रा सर्वोच्च नेता आदरणीय श्री गणेशमानजीको निवासस्थानमा अधि-अधिका जस्तै असामान्य परिस्थितिमा सम्पन्न हुँदैछ । यी विषम परिस्थितिहरूको प्रतिरोध हामी विगत २९ वर्षदेखि गर्दछौं र सामान्य र-सम्मानजनक स्थितिको सिर्जना नभएसम्म गर्दै रहनेछौं ।

तर, आजको यस बृहत् राष्ट्रिय सम्मेलनको महत्व बेग्लै किसिमले प्रभावकारी र अत्यन्त तीव्र छ । आज विश्वभरि नै मानिसको दृष्टिकोणमा ठूलो परिवर्तन हुँदैछ । विश्वका दुई महाशक्ति राष्ट्रहरू अब आफ्ना वैषम्य र मतान्तरको खाडलहरू धमाधम पुर्दछन्, एक–दोस्राका नजीक आउँदैछन् । यसले गर्दा यी दुईका चिचोमिचोमा परेका साना राष्ट्रहरू मुक्त हुँदैछन् र हिजोसम्मका राष्ट्र–राष्ट्र बीचका भयंकर विरोध र दुर्भावनाहरूलाई आज प्रजातन्त्र र स्वतन्त्रताको एक नयाँ झंझावातले कहिले नफर्कने गरी हुत्याउँदै गएको छ । यस प्रलयकारी हुरीमा पुराना सम्बन्ध र मान्यताहरू, अधिका शोषण र असमानताहरू पराकाष्ठामा पुगेका निरीह मानिसको लामो समयको निष्करुण दमन र क्रूर अत्याचारहरू एक–एक गरी समाप्त प्रायः हुँदैछन् । स्वतन्त्रता अविभाज्य हुन्छ भन्ने सत्योक्ति आज सबैतिर चरितार्थ भएको छ ।

नेपालले पनि विश्व सम्बन्धमा देखा परेका यी सकारात्मक र स्वाभाविक परिणामहरू उपर पुनर्विचार गर्नु पर्दछ भन्ने हाम्रो मान्यता छ । उदाहरणका लागि हाम्रो असंलग्नता पद्दतिको प्रतिबद्धतालाई नै लिउँ । महाशक्तिहरूका बीचका दिनदिनै बढ्दो मैत्री र सद्भावनाले विश्वयुद्धको सम्भावना समाप्त प्राय भइसकेको छ । नेटो र वार्सा संधिहरूको उपयोगिता सम्पूर्णतामा नष्ट भएको प्रमाण हालैको पूर्वी युरोपका राष्ट्रहरूको विप्लव र सत्ता परिवर्तनका अवसरमा देखिएको छ । यस दृष्टिकोणको क्रान्तिकारी परिवर्तनले असंलग्न राष्ट्रहरूको

भूमिकालाई पनि एउटा ठूलो होंक दिएको छ। हाम्रा दृष्टिमा अब यसले बढी आर्थिक पुनरूद्धारका कार्यमा आफूलाई संलग्न गराउनु बढी श्रेयस्कर हुनेछ।

त्यस्तै, हाम्रो देशको संविधानमा रहेको शान्ति क्षेत्रको प्रस्ताव बारे पनि पुर्नविचार हुनुपर्दछ। आजको विश्वमा यसको स्वीकृति वा अस्वीकृति नै नेपालको विदेशसंगको मित्रताको अनिवार्य कसी हुन सक्दैन।

अनि नेपाल – भारतको सम्बन्धको पनि हामीले पुनर्व्याख्या वास्तविकताको धरातलमा उभिएर गर्नु पर्दछ। दुई विशाल महाराष्ट्र चीन र भारतका बीचमा अवस्थित हाम्रो देशले यी दुवै राष्ट्रको वैमनश्यको फाइदा उठाउन छाडेर यिनमा हालका वर्षहरूमा देखिएको बढ्दो मैत्री र सौहार्द्रताको अभिवृद्धिका लागि प्रयत्न बढाउनु पर्दछ। हामीले स्पष्ट रूपमा भारतसंगको आफ्नो निकटतम आर्थिक, सामाजिक, धार्मिक र सांस्कृतिक सम्बन्धलाई स्वीकार गर्नु पर्दछ।

आज के स्थिति छ भने अनियन्त्रित शासक र निरंकुश राज्यहरू स्वतन्त्र विश्वको एक विशाल सागरमा लामा–लामा अन्तरमा रहेका साना–साना टापू सरह काला थोप्लाहरू जस्ता मात्र देखिन्छन् र यिनको लोप हुनमा अब धेरै समय लाग्ने छैन। हाम्रो देश यिनीहरू मध्ये नै एक हो र पञ्चायत व्यवस्थाका ठूला नेताहरूले पनि विगत २९ वर्षदेखि चलेको यस व्यवस्थाले केही गर्न नसकेको कुरालाई सार्वजनिक रूपले अब स्वीकार गर्न थालेका छन्। विगत ९, १० महिनाको भारतीय आयात–निर्यातको रोकावटले यस व्यवस्थाले देश विकासबारे यत्रो लामो अवधिभित्र गरेको अनर्गल प्रचारलाई मिथ्या प्रमाणित गरेको छ। हामीले यसो हार्दिक रूपमा कारणले प्रारम्भ देखिनै यसको विरोध गरेका हौं र नेपालमा पूर्ण प्रजातन्त्र र मानव अधिकारको स्थापना नहुञ्जेल नेपाली कांग्रेसको मुख्य कार्यक्रम यही नै रहने छ।

साथीहरू !

विगतका वर्षहरूमा देशमा पार्टीले अपनाएको राष्ट्रिय मेल–मिलापको नवीन नीतिको पश्चात् हामीले सशस्त्र संघर्षको परित्याग गरेर रचनात्मक तवरले नै जनसमक्ष जान खोज्यौं। यसै सन्दर्भमा हामीले स्थानीय तहको निर्वाचन पनि लडेर हेर्‍यौं। यसमा अन्यायपूर्ण पक्षपात बाहेक केही रहेन। यस नीतिको परिपालनका लागि हाम्रो उत्साह र समर्पणलाई अति शङ्कास्पद दृष्टिले हेरियो कि रक्तदान, वृक्षारोपण र नगर सफाइ जस्तो परोपकारी र सबैका लागि उपयोगी हुने खालका निर्दोष कार्यक्रमहरूको पनि सरकार र व्यवस्था विरोधी काममा गणना भयो र यिनमा भाग लिने देशभरिका हाम्रा साथीहरू हजारौंका संख्यामा प्रतिवर्ष पक्राउ पर्दछन। निर्दलीयताको कडा र क्रूर पञ्जामा लामो समयसम्म रहेको हाम्रो देशमा वास्तविक जन–जागरण ल्याउन सम्भवत: अझै बढी त्याग र बलिदानको आवश्यकता छ। विगत २९ वर्षका हाम्रा संघर्षहरू अझै अपर्याप्त छन्। यसैलाई विचार गरी कम्युनिष्टहरू लगायत विभिन्न प्रजातान्त्रिक समूह र व्यक्तिहरूको सहयोगले सबै किसिम र वर्गका साधारण जनताले भाग लिने एक देशव्यापी शान्तिपूर्ण जन – आन्दोलनको सञ्चालनको स्वरूप र तिथि निर्धारण गर्न केन्द्रीय कार्य समितिको निर्णय अनुसार तपाई सबै साथीहरूलाई निम्त्याइएको हो। यो जिम्मेदारी अत्यन्त गहन छ भनेर म तपाईहरूलाई प्रारम्भमै अवगत गराउन चाहन्न तर सम्पूर्ण विश्वको राजनीतिक संरचना आज ठूलो ऐतिहासिक परिवर्तनको संघारमा छ भने महत्वपूर्ण समसामयिक तथ्यका सामू अब हामीले बढी सहनशील भएर बस्ने बेला छैन, हामीले पनि केही गर्नु पर्‍यो र देश काल, परिस्थितिका अनुरूप कार्यक्रम तयार पारी यस निर्दलीय वा एक दलीय व्यवस्थालाई सदैवका लागि फाल्न तयार हुनुपर्‍यो।

साथीहरू !

विगत १२ वर्षदेखि मैले यस महान् पार्टीको नेतृत्व कार्यवाहक अध्यक्षका रूपमा गरेको छु जसका लागि म तपाई सबै साथीहरूप्रति हार्दिक रूपले कृतज्ञ छु।



प्रतिबन्धित रूपमा रहेका कारणले मैले जति बढी प्रजातान्त्रिक अभ्यास गर्नु पर्थ्यो त्यो अहिलेको अवस्थामा सम्भव भएन र त्यसकारणले धेरैजसो हाम्रा कार्यहरूमा विरोधाभास देखिएतापनि स्वतन्त्र र खुला समाज स्थापित हुनासाथ यो स्वत: र स्वाभाविक रूपमा आफैं हटेर जानेछ। मेरो व्यक्तिगत रायमा १२ वर्षको अवधि सानो होइन– यस अवधिमा जनमत संग्रह होस् वा शिक्षण शिविरहरूको आयोजना राष्ट्रिय सम्मेलनहरू हुन् वा अञ्चल भेला, जताततै हामीले भीषण संघर्ष गर्नु परेको हो। ०४२ सालको सत्याग्रहमा यो चरम चुलिमा पुगेको थियो र आज हामी पुन: एक नवीन जन-आन्दोलनका बारे विचार गर्न यहाँ उपस्थित भएका छौं। यस्तो क्षोभयुक्त र अनिश्चयको वातावरणमा हाम्रा यी उपलब्धिहरू कम उत्साहप्रद छैनन् भन्ने मेरो दृढ धारणा छ। तर, कामको लामो अवधिमा निर्णयहरू गर्दा मेरो तर्फबाट धेरै गल्तीहरू पनि भएका हुन सक्छन्, मैले धेरैको चित्त पनि दुखाएको हुन सक्छु जसका लागि म सबैसँग क्षमाप्रार्थी छु। तर, जुनसुकै निर्णय गर्दा पनि मैले सदैव पार्टी र देशको हितलाई नै सर्वोपरि राखी एउटा स्वस्थ र स्वच्छ परम्पराको विकास होस् भनेर गरेको छु।

मेरा आफ्ना उत्तरदायित्वहरू पनि छन् जसको पालना भगवानलाई साक्षी राखी मैले गर्नु पर्दछ। मेरो दृष्टिमा आज नेपाली जनता स्वतन्त्रताको संघारमा पुगिसकेको छ राजनीतिक स्वतन्त्रताको, तर, मेरो व्यक्तिगत लक्ष्य चाहि यो भन्दा अझै टाढा छ, यतिले मात्रै मलाई पुग्दैन। म सर्वरूपले स्वतन्त्र हुन चाहन्छु। सम्पूर्ण रूपले मुक्त स्वच्छन्द। पदले मलाई यसको प्राप्तिमा केही बाधा पुर्‍याएको छ, यद्यपि प्रारम्भिक अवस्थामा नित्य स्वपरीक्षाले गर्दा मलाई यसले ठूलो फाइदा पनि गराएकै हो। तर, अब चाहि म धेरै समयसम्म प्रतिबन्धित अवस्थामा रहन चाहन्न। सहृदयताकासाथ तपाईहरूले मेरो पीडा बुझिदिनु हुनेछ भन्ने मेरो विनम्र आग्रह छ।

बाहिरबाट टाढा–टाढाबाट हाम्रा अतिथिहरूले आएर हाम्रो उत्साह बढाउनु भएको छ। उहाँहरूको महत्वको अनुरूप हामीले आदर–सत्कार गर्न सकेनौं। तापनि उहाँहरूको काठमाडौं बसाइ सुखद होस् भन्ने हामी हार्दिक कामना गर्दै उहाँहरूलाई धन्यवाद चढाउँछौं।

अन्त्यमा पार्टीको यत्रो अभिभारा बोक्नमा मलाई सघाउ पुर्‍याउने कार्य समिति र जिल्लाका सबै साथीहरूलाई म धन्यवाद दिन चाहन्छु र यस सम्मेलनमा उपस्थित भैदिनु भएकोमा हार्दिक अभिनन्दन गर्दछु। हाम्रा आदरणीय नेता श्री गणेशमानजी र महामन्त्री श्री गिरिजाप्रसाद कोइरालाको सहयोग नभएको भए मैले मात्र बोक्न सक्ने यो अभिभारा होइन। अतएव उहाँहरूको म सदैवको लागि ऋणी छु।

जय नेपाल !

**कृष्णप्रसाद भट्टराई**
कार्यकारी अध्यक्ष

काठमाडौं
माघ ५, ०४६



ईश्वर छ तर प्रचलित अर्थमा होइन जस्तो कि हाम्रो नियतिको निर्माताको रूपमा होइन...... ईश्वर कवितामा हुन्छन्, ईश्वर सपनामा हुन्छन्। ईश्वरलाई विज्ञानको माध्यमले व्याख्या गर्न सक्नु हुन्न। भौतिक आधारमा व्याख्या गर्न सक्नुहुन्न। ईश्वर भन्ने एक आध्यात्मिक अनुभव हो।

**--वी. पी. कोइराला**

# बी. पी. को संक्षिप्त जीवनी र प्रजातान्त्रिक समाजवाद

स्वर्गीय बी. पी. को पूरा नाम बिश्वेश्वर प्रसाद कोइराला हो। उहाँको पिताको नाम कृष्ण प्रसाद कोइराला र आमा दिव्य कोइराला हुनुहुन्थ्यो। श्री कृष्ण प्रसाद कोइराला सचेत नागरिक हुनुहुन्थ्यो। उहाँले जहाँनिया (राणा) शासनको विरोध गर्दा राणा सरकारले उहाँलाई जेल हाली जेलमा नै मार्‍यो। यस्ता सुयोग्य माता–पिताको छोरा हुनुहुन्थ्यो बी. पी. कोइराला।

बी. पी. कोइरालाको पुर्खौंली इतिहास लमजुङको कोइराला फाँटमा रहेको छ तापनि उहाँलाई विराटनगरको एक प्रबुद्ध कोइराला परिवारमा जन्मिएको हामी पाउँदछौं। राष्ट्र, राष्ट्रियता, प्रजातान्त्रिक समाजवाद र संवैधानिक राजतन्त्रका लागि उहाँले जीवनभर संघर्ष गर्नु भयो र उहाँको अथक संघर्ष र जीवन्त चिन्तनले उत्प्रेरित भई देशका सचेत नागरिकहरूले तानाशाही पञ्चायती अराजनैतिक व्यवस्थालाई मिल्काएर देशमा पुनः बहुदल व्यवस्थाको स्थापना गर्न सफल भएका छन्।

महामानव बी. पी. कोइरालाको जन्म बि. सं. १९७१ भदौ २४ गते काशीमा भएको थियो। उहाँको न्वारनको नाम चूडामणि थियो र "काशीमा" जन्मेकाले काशीका आदिदेवको प्रसादको रूपमा बोलाउने नाम बिश्वेश्वर प्रसाद कोइराला राखियो। पिताजीको राजनीतिको कारण बी. पी. कोइराला ४ वर्षको उमेरदेखि नै विदेशमा बस्न बाध्य हुनुभएको थियो।

बी. पी. सानै उमेर देखिनै प्रतिभाशाली देखिनु हुन्थ्यो। विद्यार्थी अवस्थादेखि नै उहाँले साहित्यिक तथा राजनैतिक क्षेत्रमा प्रवेश गरेर जीवन्त बन्न सक्नु भएको छ।

बि. सं. १९८७ मा हिन्दीका प्रसिद्ध कथाकार प्रेमचन्दद्वारा सम्पादित 'हंश' मा बी. पी. को पहिलो कथा छापियो। वि. सं. १९९१ मा प्रकाशित "शारदा" नामक पत्रिकामा उहाँको पहिलो नेपाली कथा "चन्द्रवदन" छापियो।

भारतबाट अंग्रेज हटाउने सन्दर्भमा भएको आन्दोलनमा सन् १८३० मा १५ वर्षको उमेरमा नै बी. पी. जेल पर्नु भयो। त्यसपछि सन् १९३१–१९३२ मा भारतीय समाजवादी नेताहरू जय प्रकाश नारायण र डा. राम मनोहर लोहियासँग राम्रो सम्पर्क भयो। अनि उहाँ कांग्रेस सोसलिष्ट पार्टीको सक्रिय सदस्य हुनु भयो। यतिबेला उहाँले आई. ए. उत्तीर्ण गरिसक्नु भएको थियो।

सन् १९३४ (बि. सं. १९९१) सालमा बी. पी. ले राजनीति र अर्थशास्त्रमा स्नातक गर्नु भयो। वि. सं. १९९३ मा कलकत्ता विश्वविद्यालयबाट कानूनमा पनि स्नातक बन्नु भयो।

सन् १९४२ मा कांग्रेस सोसलिष्ट पार्टी बिहार शाखा संगठनको सचिव भई "भारत छोडो" आन्दोलनमा बी. पी. ले सक्रिय भाग लिनु भयो। उहाँलाई पटनामा गिरफ्तार गरियो। त्यसपछि जेलभित्र नै उहाँको डा. राजेन्द्र प्रसादसँग राम्रो सम्पर्क भयो। २ वर्षको अवधि पछि सन् १९४५ मा हजारी बाग जेलबाट उहाँलाई मुक्त गरियो। यही वर्ष पिता श्री कृष्ण प्रसाद कोइरालाको जेलमा निधन भएको कुरा बी. पी. ले टेलिग्रामबाट थाहा पाउनु भयो। उहाँलाई पनि क्यान्सरको आशंका गरियो र सन् १९४६ सालमा उहाँ बम्बैको अस्पतालमा उपचार



का लागि जानु भयो। त्यसै समयमा त्यहाँ नेपालीहरूसित सम्पर्क कायम गरी नेपालमा प्रजातान्त्रिक जन–आन्दोलन चलाउने विचार विमर्श गर्नु भयो।

वि. सं. २००३ सालमा वर्तमान प्रधान मन्त्री श्री कृष्ण प्रसाद भट्टराईसित घनिष्टता कायम गर्नु भयो। यही सालमा "अखिल भारतीय नेपाली राष्ट्रिय कांग्रेस" को स्थापना र त्यसको संयोजक पनि आफैं बन्नुभयो। यसैवर्ष लौह पुरुष श्री गणेशमान सिंह सित पनि सम्पर्क भई घनिष्टता कायम भयो। त्यसपछि कलकत्ता भवानीपुर स्थित खाल्सा कलेजमा देश भित्र र बाहिरका क्रान्तिकारी युवाहरूको सम्मेलन गरी नेपाली राष्ट्रिय कांग्रेसको स्थापना गरियो। सभापति श्री टंकप्रसाद आचार्य जेलमा भएकोले बी. पी. यसको कार्यवाहक सभापति हुनु भयो।

बी. पी. को नेतृत्वमा सन् १९४७ मा विराटनगरमा मजदूर आन्दोलन गरियो र उहाँलाई गिरफ्तार गरी २९ दिनसम्म हिंडाएर काटमाडौंमा ल्याइयो। वि. सं. २००५ मा बी. पी. लाई काठमाडौंमा पुनः गिरफ्तार गरियो।

वि. स. २००६ मा उक्त दुई पार्टीलाई मिलाई नेपाली कांग्रेस पार्टीको जन्म भयो। बी. पी. ले पार्टीको नीति, भावी कार्यक्रम र घोषणा पत्रको तर्जुमा गर्नु भयो। त्यसपछि बैरगनिया सम्मेलनको आयोजना गरियो। उहाँ पूर्वी क्षेत्रको सशक्त कमाण्डर हुनु भयो।

वि. सं. २००७ मा बी. पी. कै नेतृत्वमा विराटनगर कब्जा गरियो। आन्दोलन देशव्यापी भयो। श्री ५ त्रिभुवनबाट प्रजातन्त्रको घोषणा भयो। अन्तरिम सरकारमा उहाँ गृहमन्त्री रहनु भयो।

वि. सं. २०१० मा बर्माको राजधानी रंगुनमा भएको 'एशियाली समाजवादी सम्मेलनमा' नेपाली कांग्रेसका तर्फबाट बी. पी. ले पर्यवेक्षक भई भाग लिनु भयो। त्यसपछि वि. सं. २०११ सालमा जापानमा भएको समाजवादी सम्मेलनमा उहाँले सक्रिय रूपमा भाग लिनु भयो।

बि. सं. २०१२ मा उहाँकै सक्रियतामा तरूण दल खोलियो। २०१४ को "भद्र अवज्ञा" आन्दोलनमा उहाँले सक्रिय भूमिका निभाउनु भयो। २०१५ सालमा भएको आम चुनावमा १०९ सीट मध्ये नेपाली कांग्रेसले ७४ सीट प्राप्त गर्‍यो र उहाँ विराटनगर क्षेत्रबाट विजयी हुनुभयो। उहाँ जनताले चुनेको पहिलो प्रधान मन्त्री र पार्टीको अध्यक्ष हुनु भयो। छोटो अवधिमा उहाँले भारत, चीनसित राम्रो सम्बन्ध स्थापना गर्नु भयो। जिमीदार प्रथाको उन्मूलन, बीर्ता उन्मूलन आदि कार्यक्रमको घोषणा गर्नु भयो।

तानाशाही संस्कार भएका षडयन्त्रकारी व्यक्तिको सहयोग लिई स्वर्गीय राजा महेन्द्रबाट देशमा २०१७ साल पौष १ गते नेपाली कांग्रेसको सरकारलाई अपदस्थ गरी दलमाथि प्रतिबन्ध लगाइयो। त्यसपछि बी. पी. लाई ८ वर्षसम्म जेलमा राखी वि. सं २०२५ मा जेल मुक्त गरियो। उहाँ उपचारका लागि तुरुन्तै बम्बै जानु भयो। उपचारका लागि भारत बाहिर जान दिल्लीबाट Visaको निवेदन नेपाल पठाउनु भया, किन्तु यसलाई पञ्चायती सरकारले वास्ता गरेन। मानवताको नाताले दिल्लीबाटै भिसा लिएर उहाँ युरोप जानु भयो।

देशको राष्ट्रियतामा नै आँच आएको महसूस गरी श्री गणेशमान सिंह सहित वि. सं. २०३३ मा बी. पी. मेलमिलापको नीति लिएर स्वदेश फर्कनु भयो। र उहाँलाई गौचर हवाइअड्डाबाटै गिरफ्तार गरियो। वि. सं. २०३४ मा उपचारका लागि उहाँ अमेरिका जानु भयो। त्यसपछि २०३६ को जनमत संग्रहको घोषणालाई एक ऐतिहासिक प्रजातान्त्रिक कदम भन्नु भयो। २०३७ को बहुदलको पक्षको मतलाई अभूतपूर्व मत भनी प्रजातन्त्रको आदर्श अनुरुप स्वीकार्नु भयो। त्यसपछि उहाँले देशको विभिन्न भागमा गएर प्रजातान्त्रिक समाजवादको व्याख्या र भाषण दिनु भयो। वि. सं. २०३७ माघ २१ मा अष्ट्रेलियाको सिड्नीमा आयोजित "एशियाली प्रशान्त समाजवादी सम्मेलनमा" सहभागी भई प्रजातान्त्रिक

(बाँकी १५ पेजमा)

# प्रजातान्त्रिक समाजवाद

विश्वेश्वर प्रसाद कोइराला

सान्दाजु, समाजवाद समाजवाद सबै भन्छन्, तर समाजवाद भनेको के हो ? भारत, चीन, रूस, नेपाल र अमेरिकाको समाजवादमा के भिन्नता छ ?

समाजवादको एउटा मुख्य लक्ष्य छ, जसले यस महान् आन्दोलनलाई प्रेरणा दिन्छ, त्यो हो–समानता ।

समानता भनेको–राजनीतिक तथा आर्थिक समानता । समानताको दुईटा पूर्वास्था छन् -

१. समाज दैवी संरचना होइन। त्यो शुद्ध भौतिक व्यवस्था हो, जसको उद्देश्य हो–समाजका सदस्यहरूको सर्वाधिकार कल्याण र सुरक्षा । कल्याण र सुरक्षाको अर्थ शुद्ध भौतिक छ–आध्यात्मिक होइन ।

२. समाजका सदस्यहरूका आकांक्षा र आवश्यकताहरू प्रायः समान हुन्छन् । अर्थात्, सदस्यहरूको खाने, लाउने, बस्ने आवश्यकता प्रायः सबैको समान हुन्छ । उनीहरूको कला या विज्ञानको वृति पनि प्रायः समान हुन्छ, जसका लागि आफ्नो वृत्तिको विकास गर्न सबैले समान अवसर पाउनु पर्छ ।

अब समानताका यी दुई स्वयंसिद्ध निरोपण (पूर्वास्था) पछि हामी समानताको अर्थलाई स्पष्ट भएको पाउँछौं–

समानता राजनीतिक र आर्थिक अर्थमा। समाजवादले स्वीकार गरेको छ । राजनीतिक अर्थमा समाजवाद भनेको–प्रजातन्त्र हो । अर्थात् समाजको सर्वोपरि शक्ति जो सरकार या राज्यमा निहित छ, त्यसको संचालन जनताका प्रतिनिधिहरूले गर्नु पर्छ । ऐन-कानूनको व्यवस्था दण्ड विधान आदि जनप्रतिनिधिहरूबाट हुनुपर्छ । समाजको सार्वभौमिक शक्ति राज्य (सरकार) मा निहित हुन्छ । त्यसले बनाएको विधान या ऐन समाजका अरू समूह या तत्वहरूले बनाएको नियम कानूनभन्दा बेसी अधिकार सम्पन्न हुन्छ । त्यस सार्वभौमिक शक्तिले समाजका प्रत्येक स्तरमा आफ्नो शक्ति प्रदर्शन गर्न सक्छ र समाजका प्रत्येक सदस्यलाई आफूले बनाएको विधान या ऐनलाई मान्न बाध्य गराउन सक्छ। यत्रो सम्पन्नता भएको शक्तिको सञ्चालन एउटा व्यक्ति विशेष–राजाले होस् चाहे कुनै तानाशाहले गर्नु हुन्न भन्ने प्रजातन्त्रको सिद्धान्त हो । यस सिद्धान्तबाट केही व्यवहारिक राजनीतिक परिणाम निस्किन्छन्-

१. जनताको प्रतिनिधिको सरकार गठन हुनुपर्छ ।

२. चुनाववास्तविक हुनुपर्छ, अर्थात् जनतालाई आफ्नो प्रतिनिधि रोज्ने स्वतन्त्रता हुनुपर्छ । उसले राम शर्माको ठाउँमा पूर्ण बहादुर या पूर्ण बहादुरको ठाउँमा देवेन्द्र श्रेष्ठलाई चुन्न पाउने स्वतन्त्रता हुनुपर्छ । चुनाव भनेको विभिन्न व्यक्तिहरूका बीचको चुनाव ।

३. चुनाव स्वतन्त्रताको प्रश्न हुनेबित्तिकै यसैसँग जोडिएको अर्को प्रश्न, वाद-विवादको स्वतन्त्रता पर्दछ। वादविवादको स्वतन्त्रता भनेको वाक स्वतन्त्रता–प्रत्येक नागरिकलाई अभिव्यक्तिको स्वतन्त्रता हुनुपर्छ । विभिन्न विचारधारा या मतहरूको चर्चा भएपछि मात्र चुनाव भन्ने प्रश्न उठ्छ –कुन विचारधारा वा मतको पक्षमा जनताले आफ्नो भोट दिने ?

४. यसका साथसाथै यसैसँग संलग्न अर्को पनि प्रश्न छ, त्यो हो–संगठनको स्वतन्त्रता । एकै मत या विचार भएका व्यक्तिहरूले सम्मिलित आवाज उठाउन पाउने अधिकारलाई संगठनको स्वतन्त्रता भन्दछन् । संगठनको अधिकार नभएपछि मतमतान्तरमा जनमत कतापट्टि रहेछ भन्ने कुरा थाहा पाइन्न । त्यस अवस्थामा



चुनाव अर्थहीन हुन्छ । त्यसो हुनाले पार्टी खोल्न पाउने स्वतन्त्रता हुनुपर्छ, नागरिकहरूलाई ।

५. चुनाव चार-पाँच वर्षको अवधिमा भइरहनु पर्छ । एकचोटि चुनाव भएर जित्ने पार्टीलाई सदाकालका लागि राजकीय अधिकार प्राप्त होइरहँदैन । सरकारमा रहेको पार्टीले आफ्नो कार्यकलापको लेखाजोखा, वही बुझाउन, जनताको समक्ष आउनु पर्छ । यसको अर्थ हुन्छ, सरकारमा रहेका पार्टी र विरोधमा रहेको पार्टीलाई समान अधिकार उपलब्ध हुनु र चुनावको समान अवसर दुवैले पाउनु ।

६. यी माथि उल्लेख गरिएका अधिकारहरू सबै नागरिकले समान रूपले पाउनुपर्छ । धनीलाई मात्र होइन कि गरीबलाई पनि, शिक्षितलाई मात्र होइन कि अशिक्षितलाई पनि, 'तागाधारी' लाई मात्र होइन कि 'मतवाली' लाई पनि, लोग्ने मानिसलाई मात्र होइन कि स्वास्नी मानिसलाई पनि, गोरालाई मात्र होइन कि कालालाई पनि कुनै किसिमको भेदभाव नराखेर यी अधिकार सबैका लागि सुरक्षित रहनुपर्छ ।

व्यक्तिगत स्वतन्त्रता, मौलिक अधिकार, चुनाव, पार्टी संगठनको अधिकार आदि प्रजातन्त्रका अभिन्न अंग हुन् । जहाँ यी सब अधिकार एवं स्वतन्त्रतामा कुनै किसिमको पनि बन्धन रहन्छ, त्यहाँ प्रजातन्त्रमाथि नै बन्धन छ भनिठान्नु पर्छ । समाजवादको यो एउटा मुख्य पक्ष– प्रजातन्त्रको पक्ष हो । प्रजातन्त्र समाजवादमा निहित समानताको राजनीतिक रूप हो ।

समाजवादमा निहित समानताको अर्को रूप आर्थिक समानता हो । सबै नागरिकहरू आर्थिक दृष्टिमा समान हुनुपर्छ । समाजवाद आर्थिक विषमताको घोर विरोधी छ । आर्थिक समानताको प्रश्न राजनीतिक समानताको जस्तो एउटा क्रान्तिकारी कदममा– एउटै निर्णायक कारवाहीमा सीमित छैन । अर्थात् राजनीतिक समानताको निर्णय हुने बित्तिकै त्यो एकैचोटि कार्यान्वित हुन पनि सक्छ, किनभने मुख्यत: यो नैतिक निर्णय हो । एउटै ठूलो व्यापक क्रान्तिकारी विधानद्वारा राजनीतिक अधिकार सबैका लागि उपलब्ध गराउनु सकिन्छ । तर आर्थिक समानता समाजको उत्पादन शक्तिमा निर्भर गर्छ । समाज यदि उत्पादनको दृष्टिबाट पिछडिएको छ भने आर्थिक समानता सम्भव छैन । मैले एउटा उदाहरण दिने गरेको छु–दूधको । यदि एउटा समाजमा एक लाख मानिस छन्, र त्यसमा दूधको उत्पादन सय माना मात्र छ भने गणितको न्यायले समानता गर्ने नाउँमा सबलाई एक-एक चम्चा दूध दिन सकियोस्, तर त्यस्तो समानता सामाजिक न्यायले समानता ठहरिन्न, अपव्यय ठहरिन्छ । यस्तो स्थितिमा केही मुट्ठीभरिका मानिसले दूध पाउँछन्, अरूले विना दूधकै रहनुपर्छ । उत्पादनको यो न्यायलाई एउटै चोटले, घोषणाद्वारा बदर गर्न सकिन्न । दूधको उत्पादनको वृद्धि गर्नपट्टि लाग्नुपर्छ, अनि मात्र पर्याप्त मात्रामा दूधको उत्पादन भएपछि समान वितरणको प्रश्न आउँछ । उदाहरणका लागि दूधको चर्चा मैले यहाँ गरें । जुनसुकै जिनिस भए पनि यो न्याय त्यसमा लागू हुन्छ । त्यसो हुनाले आर्थिक समानतामा उत्पादनको अभिवृद्धि अपेक्षित छ । यही आर्थिक समस्यालाई नबुझेर समानता चर्चा गर्ने या समानतालाई व्यवहारमा ल्याउन खोज्ने मार्क्स पूर्वका समाजवादीहरूलाई इन्जेल्सले काल्पनिक समाजवादी भनेका छन् । मार्क्सले समाजवादको आर्थिक पक्षलाई खूब राम्ररी बुझेका थिए, त्यसो हुनाले उनले पूँजीवाद, जसमा उत्पादनको क्षमताको अत्यधिक अभिवृद्धि हुन्छ, त्यसलाई ऐतिहासिक आवश्यकता मानेका छन् र पूँजीवादलाई खास ऐतिहासिक कालका लागि प्रगतिशील हुन्छ पनि भनेका छन् । मार्क्सको यस्तो विचारलाई– एन्जेल्सले, अरू मार्क्स पूर्वका समाजवादीहरूको विचारसँग दाँज्दा, वैज्ञानिक समाजवादको संज्ञा दिएका छन् । आर्थिक समस्याहरूको समाधान एउटै कार्य र एकचोटिको नियमले हुँदैन । यो एउटा लामो प्रक्रिया हो । रूसमा क्रान्ति भएको ६० वर्षभन्दा बढी भैसक्यो,- आर्थिक समानतापट्टि दृढतासँग र सैद्धान्तिक आधारमा पाइलो चाल्दा पनि अझै समानताको लक्ष्य त्यहाँ प्राप्त भैसकेको छैन । यस सन्दर्भमा विचारणीय कुरो के छ

अने समाजवादमा उत्पादन र वितरणमा नीति-निर्धारण गर्दा समाजको कल्याणमाथि विशेष जोड दिइन्छ, अरू व्यवस्थामा त्यतापट्टि ध्यान रहँदैन ।

यसरी समाजवादको मौलिक आधारलाई ध्यानमा राखेर मलाई सोधिएको प्रश्न–भारत, चीन, रुस र नेपालको समाजवादमा के फरक छ र वास्तविक समाजवाद के हो, को उत्तर हुन्छ–विभिन्न मुलुकमा राजनीतिक समानता र आर्थिक समानताको उपलब्धि या मात्रामा अनुपलब्धिमा फरक पर्दछ । समाजवाद एउटै कुरो हो, जहाँका लागि पनि ।

अमेरिकामा समाजवादको लक्ष्य भनेको काला गोराको भेदको लोप हुनु, अझ व्यापक आर्थिक समानता जनतालाई उपलब्ध हुनु, उद्योग धन्दाको सामाजिकरण र तिनको त्यस्तो सञ्चालन जसमा आम जनताको धेरै भन्दा धेरै कल्याण होस्, दुषित वातावरण हुन नदिनु, उत्पादनको एकहठ्ठी हुन नदिनु आदि आदि छन् । त्यहाँ राजनीतिक समानता छ, त्यसो हुनाले समाजवादको एउटा मुख्य लक्ष्य त्यहाँ प्राप्त भैसकेको छ । आर्थिक समानताका सम्बन्धमा उत्पादन प्रचूर मात्रामा त्यहाँ सम्भव भइसकेको छ, वितरणको सम्बन्धमा पनि त्यहाँ त्यस्ता श्रमिक नियमहरू बनिसकेका छन्, जो इमान्दारी-सँग लागु गरिएमा केही हदसम्म समानताको लक्ष्य नजिकै त्यो समाज पुग्न सक्छ । यस दृष्टिबाट स्वीडेनमा समाजवादको लक्ष्यपट्टि समाज धेरै हदसम्म पुगिसकेको छ । रूसमा समाजवादको अर्थ हुन्छ–प्रजातन्त्र, जसको मौलिक लक्षणको चर्चा मैले अघि गरिसकेको छु–त्यसको प्राप्ति, किनभने आर्थिक समानतापट्टि उनीहरूको ध्यान छ र त्यसका सम्बन्धमा कार्यक्रम पनि पञ्चवर्षिय योजना अन्तर्गत बन्दै गएको छ । तर प्रजातन्त्र भने त्यहाँ जनतालाई प्राप्त छैन । समाजवादको यो अंग अपुरो छ । रूसको दृष्टान्तले यो मेरो भनाइलाई पुष्टि गरेको छ कि आर्थिक समानता बारम्बार प्रयोग र कार्यान्वित भइरहने कार्यक्रमको क्षेत्र अन्तर्गत पर्ने विषय हो । त्यहाँ अझै धनी गरीब छन्, अझ वेतनमा असमानता छ, वास-गाँसमा पनि नागरिकहरूमा, कतिले राम्रो व्यवस्था पाएका छन्, कतिको त्यति राम्रो छैन, यद्यपि रूसमा १९१७ को क्रान्तिपछि सैद्धान्तिक रूपबाट समानतालाई शीघ्रातिशिघ्र समाजमा ल्याउने प्रयत्न भइरहेको छ । चीनमा पनि त्यही कुरा छ, प्रजातन्त्र छैन । त्यसो हुनाले राजनीतिक समानता छैन, आर्थिक समानताका लागि प्रयत्न हुँदैछ । प्रजातन्त्रविहीन व्यवस्था कुनै पनि हालतमा समाजवाद होइन । जनताले राजनीतिक स्वतन्त्रताको उपभोग गर्न पाएन भने आर्थिक समानता पनि केवल प्रोपगन्डाको विषय भएर जान्छ ।

हिन्दुस्तानमा प्रजातन्त्र छ । तर आर्थिक विषमताको स्तर पनि अत्यन्त निम्न छ । हिन्दुस्तानमा समाजवादी दिशापट्टि देशलाई अग्रसर गराउन आर्थिक नीति, कर नीति आदिका सम्बन्धमा उग्र वाद–विवाद छ । आर्थिक समस्या प्रोग्राम अन्तर्गत पर्ने हुनाले लक्ष्य प्राप्तिका लागि व्यवहारिक कुनचाहिं नीति या योजना ठीक छ भन्ने कुरालाई लिएर हिन्दुस्तानमा मत भिन्नता छ । प्रजातान्त्रिक देश भएकोले यो मत भिन्नता व्यापक रूपमा जनताको सामु आउँछ ।

मैले समाजवादको मौलिक आधार प्रष्ट्याउने प्रयत्न गरें । त्यस आधारलाई बुझेपछि नेपालका लागि समाजवाद भनेको के हो, भन्न एकदम सजिलो पर्छ । नेपालमा राजनीतिक समानता पनि छैन, आर्थिक समानता पनि छैन– त्यसो हुनाले दुवै प्रकारका समानताका लागि प्रयत्नशील हुनु, संघर्ष गर्नु, समाजवाद हो । नेपालमा यस प्रकार अहिलेको सन्दर्भमा प्रजातन्त्रको स्थापना समाजवादको मुख्य ध्येय छः आर्थिक समानताको प्राप्ति एउटा लामो प्रक्रिया हो । एउटा निर्णयद्वारा त्यसलाई साकार गराउन सकिदैन । जुनसुकै सिद्धान्त या नाराको दुहाइ दिए तापनि, यदि त्यसबाट देशको राष्ट्रिय आम्दानीको वृद्धि भएको छ भने समाजवादको दिशातिर चालिएको यो एउटा गहकिलो र दरिलो



पाइलो हो । आर्थिक क्षेत्रमा समानताको आधारशीलाको स्थापनाको जिम्मेवारी अहिले नेपाली समाजवादीहरूलाई छ ।

तसर्थ, नेपालमा समाजवाद भनेको :

१. व्यक्तिगत स्वतन्त्रता ।

२. मौलिक अधिकार ।

३. पार्टी गठन गर्न पाउने अधिकार ।

४. वालिग मताधिकारबाट चुनावको व्यवस्था ।

५. प्रधानमन्त्री तथा मन्त्रीमण्डलको संसदप्रति उत्तरदायित्व ।

६. राजाको वैधानिक स्थान ।

७. कानूनी शासन ।

८. जाली फटाहाहरूको उन्मुलन ।

९. पिछडिएका वर्ग र जातिलाई उनीहरूको उन्नतिका लागि हर क्षेत्रमा विशेष र तात्कालिक प्रोत्साहन ।

१०. शासनको विकेन्द्रीकरण ।

११. जोरा समस्याको नयाँ बसोवासको तत्कालीन समाधान । जोत्ने व्यक्तिहरूका नाउँमा जमीनलाई दर्ता गराएर ।

१२. भूतपूर्व सैनिकहरूलाई, राष्ट्रिय हितलाई ध्यानमा राखेर विकास कार्यमा बढी से बढी मौका दिने ।

१३. उत्पादन वृद्धिका लागि राष्ट्रिय पूँजिलाई दुरुपयोग हुनदेखि जोगाउने व्यवस्था ।

१४. किसानहरूको कानूनी अधिकारको दृढतापूर्वक संरक्षण ।

१५. शिक्षा पद्धतिमा प्रजातान्त्रिक नियमानुसार सुधार र शिक्षण संस्थाहरूको स्वतन्त्रताको रक्षा ।

१६. मजदूरहरूको कामको सुरक्षाद्वारा शोषणको अन्त्य ।

१७. अक्षरशः तथा इमान्दारीपूर्वक तटस्थ परराष्ट्र नीतिको पालन ।



# कृषक–जननी

– चन्द्रप्रसाद न्यौपाने
गोरखा, छोप्राक

बाँधी सानो कमर तटमा एक सेतो पटुकी ।
लामो स्यूँदो भर चहकिलो लाल सिन्दूर बोकी ॥
खुर्पी नाम्लो छिरबिर बुटे साथ आफ्नै लिएकी ।
राता गाला बदन हँसिली कम्ति छैनन् खिलेकी ॥

॥१॥

हाल्छिन् साह्रै मधुर लयमा भावनाका सुसेली ।
सुस्केरामै विरह मनका पोख्दछिन् दिव्य लोली ॥
गर्छिन् यात्रा भरदिन उतै कर्म आफ्नै थलामा ।
ती झुल्किन्छिन् किरण रविका साथ आफ्नै कलामा ॥

॥२॥

खाँदै खाजा मर मर मर्कै पाउ चढ्छिन् उकाली ।
सन्ध्या फिर्दा घरतिर उनी आउँछिन् साँझ बाली ॥
काखी च्याप्छिन् नरम शिशु त्यो प्यारले सुम्सुम्याई ।
भुल्छिन् बाधा विपद दिनका दूध धारा चुसाई ॥

॥३॥

हेर्छिन् राम्रो शिशु वदन त्यो सिर्जनाको स्वरूप ।
कोर्छिन् रेखा विविध मनमा देख्दछिन् विश्वरूप ॥
मेरो स्वप्ना सफल गर लौ ज्ञानको बाल ज्योति ।
भन्छिन् बाबा बढ दिनदिनै मान कर्यै राख कीर्ति ॥

॥४॥

पोखी माया शिर पयरमा स्नेहले चुम्चुम्याई ।
मेरो बाबा चिउ गर तिमी भन्दछिन् घुम्घुम्याई ॥
आशा नौलो नव-किरण त्यो काख आफ्नै अँगाली ।
लेट्छिन् थौटी कृषक–जननी रात कर्यै अति बाली ॥



### प्रजातान्त्रिक संघर्षप्रति उदासीनता–

# समाजवादका अनुयायीहरूका लागि अपराध हो–वी. पी.

१९८१ को फेब्रुवरीको पहिलो हप्तामा एशिया तथा प्रशान्त क्षेत्रका समाजवादी (सोसियलिस्ट अर्गनाइजेशन) संघको सिडनो अष्ट्रेलियामा आयोजित सम्मेलनमा बी॰ पी॰ कोइरालाले दिनु भएको भाषणको सार संक्षेप (संपादक)।

म यहाँहरू समक्ष नेपालको राजनीतिक स्थिति बारे संक्षिप्त रिपोर्ट प्रस्तुत गर्न चाहन्छु।

विगत २० वर्षसम्म हामीहरू निरंकुश शासनको अधीनमा रहन बाध्य भएको थियौं। वि. सं. २०१७ मा जनताद्वारा निर्वाचित (प्रधान मन्त्रीको रूपमा) मेरो अध्यक्षतामा गठित सरकारलाई सैनिक बल प्रयोग गरी हटाइयो। यी २० वर्षहरूमा जनतामाथि भय र त्रासको वातावरणमा शासन गरियो त्यही पञ्चायती तानाशाही शासनका विरुद्ध संघर्षको दौरानमा हाम्रा धेरै साथीहरूले आफ्नो अमूल्य जीवन समेत बलिदान गरे, हजारौं कार्यकर्तालाई जेल हालियो र विदेशमा भारतीय भूमिमा निर्वासनको जीवन बिताउन बाध्य पारियो। उक्त बल प्रयोगपछि मलाई ८ वर्षसम्म बन्दी बनाइयो, भने केही मेरा सहयोगीहरूले यस बढी समय जेलमा बिताउनु पऱ्यो।

गत १८ महिनामा हामीलाई सीमित रूपमा राजनीतिक गतिविधिमा संलग्न हुने छुट श्री ५ बाट दिइयो। एक प्रकारको चलाखीपूर्ण ढंगले जनमत संग्रह भएपछि विस्तारै स्थितिमा सुधार देखा पर्दछ। श्री ५ बाट जनमत हुनु अगावै सारा राजनीतिक बन्दीहरूको छुटकारा (उग्रवादी आरोप लागेको केही व्यक्ति बाहेक), को घोषणा गरियो, राजनीतिक आरोपबाट निर्वाचनमा बसेकाहरूलाई नेपाल फर्कन दिइयो र हामीहरूमाथि लगाइएका केही मुद्दाहरू खारेज गरियो। दुई महिना अघि श्री ५ बाट केही सकारात्मक बुँदाहरू समाविष्ट गर्दै सम्विधानमा केही परिवर्तनको घोषणा भयो। तर उक्त घोषणामा परेका नकारात्मक प्रावधानले सकारात्मक बुँदाहरूलाई बेकार सावित गरिदिएका छन्। यिनै कुराहरूमा हामीले श्री ५ बाट स्पष्टीकरण चाहिरहेका छौं र नयाँ संविधान अन्तर्गत निर्वाचनमा भाग लिनु अघि केही अप्रिय प्रावधान माथि संशोधन (सुधार). हुनु पर्ने कुरामा जोड दिइरहेका छौं। हामीले निर्वाचनमा भाग लिने निर्णय भएमा पनि हामी हाम्रो समेत प्रभावपूर्ण प्रतिनिधित्व भएको नयाँ अन्तरिम सरकारको व्यवस्था हुनुपर्ने कुरामा जोड दिन्छौं जसबाट स्वतन्त्र र निष्पक्ष निर्वाचन सम्पन्न गराउन सकियोस्। हामी सरकार बनाउन चाहिने पर्याप्त प्रतिनिधि सहित आम निर्वाचनमा विजयी हुने उमेद राख्छौं। म यस अवसरमा हाम्रो प्रजातान्त्रिक संघर्षमा एकवद्धता देखाउने र मलाई सात–सात वटा राजद्रोहको आरोप लागेको बेला जब कि हरेक अभियोग मा मृत्यु दण्ड तुण्डिएको थियो–मेरो वैयक्तिक राजनीतिक प्रति चिन्ता प्रकट गर्ने विश्वभरका तमाम समाजवादी साथीहरू प्रति धन्यवाद प्रकट गर्न चाहन्छु। हाम्रो सौंचिकै कठीन परिस्थितिमा पनि हामीलाई समर्थन दिइरहनु भएकोमा वहाँहरूप्रति हामी आभारी छौं। भविष्यमा पनि हामी हाम्रा साथीहरूबाट निरन्तर सहयोग र मद्दतको आशा राख्दछौं।

नेपालमा प्रजातान्त्रिक अधिकारको निम्ति २० वर्षसम्मको कठीन संघर्षको अनुभवबाट हामीले केही महत्वपूर्ण पाठ सिकेका छौं जुन सबै समाजवादीहरूको



लागि चासोको कुरा हुनेछ भन्ने मैले ठानेको छु। म ती अनुभवलाई संक्षिप्त रूपमा प्रस्तुत गर्न चाहन्छु:–

१) जनताको चाहना र स्वार्थलाई प्रतिनिधित्व गर्ने उचित राजनीतितिक माध्यम (संस्था) को अभावमा आर्थिक विकास मात्र पनि सम्भव हुँदैन। २०१७ सालमा सैनिक बल प्रयोग गर्दा एउटा तर्क थियो–आर्थिक विकास कार्यक्रम राजनीतिबाट अलगै राख्न सकिन्छ र निरंकुश शासनको माध्यमबाट विकास प्रक्रया छिटो सञ्चालन गर्न सकिन्छ। तर यसो हुन सकेन। साँच्चै भन्ने हो भने निरंकुश शासनको शुरूवात भए पछि हाम्रो देशको आर्थिक अवस्था धराशायी हुने अवस्थामा पुगेको छ। सत्ताको केन्द्रीकरण भएपछि देश झन् गरीब भएको छ। हाम्रो अनुभवमा नेपालको आर्थिक परिप्रेक्ष्यमा विकास भन्नाले जनतालाई विकास कार्यमा जागरूक बनाउने हुनु पर्छ– विकास कार्यक्रमको लागि निर्णय गर्ने तहदेखि लिएर कार्यान्वयन तहसम्म जनतालाई सम्बद्ध गराइनु पर्छ। वास्तवमा यो राजनीतिक उत्तरदायित्वको कुरा हो। निरंकुश शासनले केवल प्रशासन यन्त्रको महल बनाउन सक्छ जसप्रति जनताको कुनै सरोकार रहन सक्दैन।

२) यस्तो अवस्थामा विदेशी सहायताले विकास प्रक्रियामा मद्दत पुऱ्याउनको सट्टा केवल यस्तो समृद्ध वर्गको मात्र सिर्जना गर्छ। जसको रहन सहन देशको सामान्य आर्थिक अवस्थासँग बिलकुलै मेल खान सक्दैन। यो नवोदित वर्ग न त सामन्ती चरित्रको छ न पूँजीवादी स्वभावको, देशको आर्थिक वास्तविकतासँग यसको कुनै नाता पाउन सकिन्न। वैदेशिक सहायतामा धाँधली गरेर भ्रष्टाचार अपनाएर, अवैध व्यापार आदिको सहाराबाट मात्र यो वर्ग उभिन सकेको छ।

३) हाम्रो जस्तो असम्पन्न देशको लागि विकसित पश्चिमी देशहरूबाट नक्कल गरिएको विकासको ढाँचा कहिल्यै सुहाउँदिलो हुन सक्दैन। पश्चिमी ढाँचामा आधारित विकास प्रकृया सञ्चालन गर्न हामी ज्यादै असक्षम छौं। उन्नत विकसित प्रविधि आयात गरेर मात्रै हाम्रो समस्या समाधान हुन सक्दैन। हाम्रो लागि आफूले प्रयोग गरिआएको प्रविधि भन्दा केही सुधारिएको प्रविधि त्यसलाई हाम्रा अपगठित दाजुभाईहरूले उपयोग गर्न सक्छन्– चाहिएको छ। जहाँ हामीले पश्चिमी ढाँचाको अन्धानुकरण गरेका छौं। त्यहाँ गरीब झन् गरीब हुने र धनी अझ धनी हुने स्थिति आइपरेको छ। जसबाट यस्तो सम्पन्न वर्ग जन्मेको छ जसको देशप्रति न कुनै ममता छ न त वास्तविक रूपमा राष्ट्रको आर्थिक पुनरूत्थान प्रति चोखो सद्भाव नै।

४) विश्वभर जनताको प्रजातान्त्रिक संघर्षप्रति उदासिन हुनु जस्तो अपराध समाजवादका अनुयायीहरूलाई अरू केही हुने छैन। प्रजातन्त्रको संस्थापन उनीहरूको मुख्य ध्येय हुनु पर्छ। प्रजातन्त्र भन्नाले म उदारवादी प्रजातन्त्रको लक्ष गरिरहेको छु। कहिले काहि केही समाजवादी साथीहरूमा यस प्रश्नलाई आर्थिक विकासभन्दा दोस्रो कोटीमा राख्ने प्रवृत्ति देखिएकोले म यस कुरालाई विशेष जोड दिन चाहन्छ।

५) अन्तमा, समाजवाद भविष्यको लागि एक महानदी हो भन्ने कुरामा हामी विश्वस्त छौं। समाजवाद तेस्रो विश्व र असंलग्न राष्ट्रहरूको लागि नैसर्गिक मार्ग हो। समाजवादको दरो आधार बिना तेस्रो विश्वका देशहरू या त फासिष्ट सैन्यवादको शिकार बन्ने छन् या तानाशाही साम्यवादमा परिणत हुने छन् या प्रतिगामी प्रतिक्रुयावादी रूढीवादी अन्धविश्वासको शिकार हुने छन्। कार्ल मार्क्स र उनका संगातीहरूले पनि कल्पना नगरेको सफलतापछि समाजवादको मुख्य भूमि यूरोपबाट तेस्रो विश्वका देशहरूमा सरिसकेको छ जहाँ समाजवाद आज जीवनको प्रेरणादायी आदर्श र विकासको लागि मूल ढाँचा र अभिलेखको रूपमा सार्थक भएको छ।

---

राजनीतिमा सानो मानिसलाई पनि पोशाक चाहिन्छ, साहित्यमा भने सम्राट पनि निर्वस्त्र हुन्छ।

– स्व. वी. पी.

हाम्रो हालको सन्दर्भः-

# विकासका लागि प्रजातन्त्र र प्रजातन्त्रका लागि नेपाली कांग्रेस नै किन ?

–चिरञ्जीवी वाग्ले



विगत जन आन्दोलनले नेपालमा पुनः बहुदलीय व्यवस्था स्थापना गरेको छ। मानव जातिले अतीतमा धेरै राजनीतिक व्यवस्थाहरूको अनुभव र परीक्षण गऱ्यो। आजसम्म संसारमा प्रचलित भएका र अनुभव एवं परीक्षण गरिएका राजनीतिक व्यवस्थाहरू मध्ये कम दोष भएको–साँच्चै भन्ने हो भने दोषरहित व्यवस्था प्रजातन्त्र हो। आज सारा विश्व जन मानस प्रजातान्त्रिक बहुदलीय व्यवस्था तर्फ उन्मुख छ। जहाँ एकदलीय (कम्युनिष्ट) व्यवस्था र अन्य तानाशाही (अप्रजातान्त्रिक) व्यवस्था थियो त्यहाँ जनताका अदम्य साहसले गर्दा बहुदलीय प्रजातान्त्रिक व्यवस्था स्थापित हुँदै गएको छ। विश्वमा अब चीन, क्यूबा, बङ्गलादेश आदि केही मुलुक छन् जहाँ अप्रजातान्त्रिक व्यवस्था कायम छ, त्यो पनि त्यहाँका प्रजातन्त्रकामी लाखौं जनतालाई ट्याङ्कले पेलेर र बन्दूकले भुटेर प्रजातन्त्र विरोधी तसर्थ, जन विरोधी व्यवस्था कायम राखिएको छ। तर, अब भविष्यमा प्रजातन्त्रका लागि हुने कुनै पनि जन विष्फोटनबाट जनतालाई दबाई ती मुलुकमा एकदलीय वा अन्य कुनै पनि प्रकारका तानाशाही व्यवस्था कायम राख्न सम्भव छैन। अब एउटा प्रश्न उठ्छ त्यसो भए सारा मानवजातिले किन बहुदलीय प्रजातान्त्रिक व्यवस्था नै चाहेको त ? यसका पछाडि केही निश्चित लोक कल्याणकारी कारणहरू छन् जसले गर्दा विश्व मानव समाजले बहुदलीय प्रजातान्त्रिक व्यवस्था मात्रै एकमात्र बाटो हो भनेर स्वीकार गरिसकेको छ। हामीले ती कारणहरूको चर्चा गर्दा मानवजातिको चाहना के हो त्यो भुल्न हुँदैन। सर्वप्रथम त मान्छेले चाहेको सुख प्राप्ति हो–चरम सुख प्राप्ति। यो सुख प्राप्ति मानसिक र भौतिक दुई पक्षमा आधारित छ। मानसिक पक्षमा मान्छेको चेतनाको विकाससंग सम्बद्ध यावत् कुराहरू आउँछन् भने भौतिक पक्षमा मानिसलाई आवश्यक सबै ती सामग्रीहरू पर्दछन् जसको अभावमा जीवन यापन सम्भव हुँदैन। यी दुबै पक्षसंग व्यक्तिको स्वतन्त्रताको प्रश्न गाँसिएको छ र व्यक्तिको स्वतन्त्रतासंग राष्ट्रको स्वतन्त्रताको प्रश्न पनि गाँसिएको छ। यसका लागि प्रजातन्त्र नै एकमात्र बाटो हो जसले व्यक्ति र राष्ट्रको स्वतन्त्रताको संरक्षण र सम्वर्द्धन गर्दै मानिसको चरम सुख प्राप्तिका कारकतत्व मानसिक र भौतिक अर्थात्



आध्यात्मिक र आर्थिक पक्षको पूर्ण विकास गर्दछ।

यति कुरा भनिसकेपछि के स्पष्ट हुन्छ भने विकासका लागि प्रजातन्त्र मात्रै एउटा विकल्प हो अर्थात् प्रजातन्त्र विना विकास सम्भव छैन। यो कुरा हामी अल्पविकसित वा अर्ध विकसित मुलुकका व्यक्तिहरूले गर्दा विकसित मुलुकहरूको नजीर भुल्न हुँदैन। उनीहरू कहाँ विकासको माध्यम किन प्रजातन्त्र मात्रै हुन सक्यो ? सत्तरी वर्षको कटु अनुभव पछि रूसले विकासका लागि कम्युनिजम होइन प्रजातान्त्रिक बहुदलीय व्यवस्था नै एकमात्र बाटो हो भनेर किन स्वीकार गर्नुपऱ्यो ? रूस संगसंगै विश्वका दर्जनौं राष्ट्रहरूले किन साम्यवादी व्यवस्थालाई परित्याग गरी बहुदलीय व्यवस्था तर्फ आफूलाई अग्रसर गराए ? यसका पछाडि मूलभूत रूपमा दुईओटा कुरा छन्। सर्वप्रथम त मानिसको आर्थिक पक्ष जहाँ राम्रो खाने लाउने व्यवस्था गर्न सकियोस्। सबै मानिसले राम्रो खाना पेटभरी खान पाउन् र राम्रो एवं न्यानो लुगा सजिलैसँग उपलब्ध गर्न सकून्-यो कुरा साम्यवाद (कम्युनिजम) लगायत अन्य कुनै पनि अप्रजातान्त्रिक तानाशाही व्यवस्थाले दिन नसकेको र बहुदलीय प्रजातान्त्रिक व्यवस्था अन्तर्गत विकसित मुलुकहरूमा यी कुराहरू उपलब्ध भएकाले नै रूस लगायतका सबैजसो साम्यवादी मुलुकहरू बहुदलीय प्रजातान्त्रिक व्यवस्था तर्फ अग्रसर भएका हुन्। दोस्रो कुरा मानवीय भावनाको संरक्षण अर्थात् मानव अधिकारको सुरक्षा बहुदलीय प्रजातन्त्रमा मात्र सम्भव रहेको कुरा पनि विश्व मानव समाजको अनुभवले सावित गरिसक्यो, तसर्थ, मानवीय भावना अर्थात् मानव अधिकारलाई हनन् गर्ने साम्यवाद लगायतका सबै अप्रजातान्त्रिक व्यवस्थाहरू मानव जातिलाई अग्राह्य भयो। विश्वमा प्रचलित अनेकौं राजनीतिक व्यवस्थाहरूलाई गुण दोषका आधारमा छानवीन र परीक्षण गर्दै अहिलेसम्म आइपुग्दा बहुदलीय प्रजातान्त्रिक व्यवस्था विश्व मानव समाजले एक मात्र उत्तम र लोक कल्याणकारी व्यवस्थाका रूपमा ग्रहण गरिसकेको छ। यो व्यवस्था कायम गराउन मानवजातिले धेरै ठूलो परिमाणमा रगत पसिना पनि बगाइसकेकोछ। आज मानव जातिको एउटै साझा नारा छ कि गास वास र लत्ता कपडाको व्यवस्थाका साथै मान्छेको स्वतन्त्रताको संरक्षणका लागि बहुदलीय प्रजातान्त्रिक व्यवस्था एक मात्र बाटो हो।

माथिका कुराहरूबाट के स्पष्ट हुन्छ भने सभ्य र सम्बृद्ध समाजको निर्माण प्रजातान्त्रिक व्यवस्थाबाट मात्रै हुन सक्छ। त्यसैले हामीले हाम्रो देश नेपालमा पनि लामो सङ्घर्ष र ठूलो बलिदानबाट बहुदलीय व्यवस्था स्थापना गरेका हौं। यहाँ रहेको पञ्चायती व्यवस्था वास्तवमा जन विरोधी र राष्ट्र विरोधी व्यवस्था थियो र यसका सञ्चालकहरू पनि जन विरोधी थिए। अब हामीले पञ्चायतलाई पर्याकिसकेका छौं। यसलाई हामीले किन पर्याकेको भन्दा सर्वप्रथम त देश विकास र जनताको सुख–सुविधाका लागि नै पर्याकेको हो भन्ने बुझ्नु पर्दछ। अर्को कुरा मानव अधिकारको स्थापना–जससंग हाम्रो स्वतन्त्रताको प्रश्न गाँसिएको थियो त्यसलाई पनि

समाप्त गरेकाले हामीले यो पनि बिर्सनु हुन्न कि पञ्चायतले राष्ट्रको अस्तित्व र स्वतन्त्रतालाई पनि मेटाउन थालेको थियो– त्यसका लागि पनि पञ्चायतलाई नपर्याँकी भएको थिएन र फ्याँकियो। अब जनताले पञ्चायतका अवशेषलाई तिरस्कार गर्नुपर्नेछ र त्यो गर्ने नै छन्।

मयूरको प्वाँख घुसार्दैमा काग मयूर हुन नसके जस्तै हिजो पञ्चायतलाई सञ्चालन गरेर बसेकाहरू आज प्रजातन्त्रका नाउँमा पार्टी खोल्दै-छन्। वास्तवमा उनीहरूको प्रवृत्ति जनविरोधी प्रवृत्ति हो। त्यस्तो फासिष्ट प्रवृत्ति भएका व्यक्तिहरूले पुनः जनतालाई ठग्न बाहिरी आवरण बदलेर प्रजातन्त्रको कुरो गर्दैमा जनताले विश्वास गर्न सक्दैन। काग मयूर हुन नसक्नुका पछाडि प्रवृत्ति विद्यमान छ। आज प्रजातान्त्रिक राष्ट्रिय पार्टी बनाउनेहरूको प्रवृत्ति यथार्थमा प्रजातन्त्र विरोधी, तसर्थ, जन विरोधी प्रवृत्ति हो। त्यो प्रवृत्ति उनीहरूको तत्कालै बदलिन सक्दैन। विगत जन–आन्दोलनका बखत पञ्चायती सत्तामा रहेकाहरू एकातर्फ निर्ममतापूर्वक दमन गरी जन हत्या गर्दै थिए। जनताले पाएको दुःख कष्टको त सीमा नै थिएन। अर्कोतर्फ राष्ट्रिय पञ्चायत मै रहेका कतिपय सदस्यहरू जो मन्त्री प्रधान मन्त्रीको पद पाउन तड्पेर बाँचेका थिए, उनीहरू पनि आन्दोलन दबाउन सरकारले गरेको कार्यका लागि सहयोगी थिए।

तर, बहुदल आएको लगत्तै पछि उनीहरू पनि पार्टी खोल्ने कुरामा सक्रिय रहे र आज भोलि जिल्लाहरूमा संगठन बनाउन हिंड्दैछन्। सत्ता प्राप्तिका लागि अवसरको खोजीमा रहनु र त्यसका लागि जुनसुकै खाले राष्ट्रिय–अराष्ट्रिय ताकतहरूसंग हातेमालो गर्न पनि नमान्नु उनीहरू जस्ताको चरित्रगत स्वभाव हो। राजनीतिक जीवनको प्रारम्भिक दिन देखिनै अवसरको खोजीका लागि उनीहरूले के मात्र गरेनन् र ? त्यत्रो जन–आन्दोलनका बखत जनतालाई दबाउन अहोरात्र लागिपर्नेहरू पुनः जनतालाई ठग्न सक्रिय हुँदैछन्। तर, उनीहरूका शब्दहरूबाट अब जनता ठगिनै छैनन्। त्यो जन विरोधी–फासिष्ट प्रवृत्तिबाट प्रजातन्त्रको सुरक्षा हुँदैन। यो कुरा जनताले बुझ्नेछ।

नेपालको अहिलेको सन्दर्भमा प्रजातन्त्रको सुरक्षा र सम्वर्द्धनका लागि नेपाली कांग्रेस मात्रै एउटा जिम्मेवार राजनीतिक पार्टी हो। नेपालमा प्रजातन्त्रको जन्मका लागि हामीले धेरै रगत पसिना बगाएका छौं–त्यसैले यसका प्रति हाम्रो स्नेह र ममता पनि छ। तर, जो स्वाभाविक रूपमा प्रजातन्त्रका विरोधी छन् र प्रजातन्त्रकामी जनताका विरूद्ध तरवार र बन्दूक प्रहार गरी नेपाल भूमिलाई रक्तरञ्जित पार्न सक्रिय रहे र त्यसका लागि सहभागी भए उनीहरू प्रजातन्त्रका विरोधी ताकत हुन्। उनीहरूले नचाहँदा नचाहँदै र कत्तिकै जबर्जस्ती गर्दापनि रोक्न नसक्दा जन्मिएको 'शिशु' हो प्रजातन्त्र, तसर्थ, मौका पाउना साथ त्यो प्रजातान्त्रिक 'शिशु' को घाँटी निमोठ्न उनीहरू उद्यत हुनेछन्। सचेत नेपाली नागरिकहरूले यस कुरालाई हृदयङ्गम गरी कुनै पनि खाले प्रजातन्त्रमा विरोधी पक्षहरूको हात मजबूत हुन नदिन चनाखो हुनु परेको छ। साथै प्रजातन्त्रको पक्षधर नेपाली कांग्रेसको हात मज-



बूत गर्नु हालका लागि एकमात्र बाटो हो।

माथिका कुराहरूबाट दुईओटा कुरा स्पष्ट भै सकेकोछ। पहिलो कुरा विकासका लागि प्रजातन्त्र अनिवार्य तत्व हो। प्रजातन्त्र विना विकास सम्भव छैन। जो हाम्रो देश लगायत प्रजातन्त्र नभएका देशहरूमा विकास हुन सकेको छैन। हामीले देशमा प्रजातन्त्र स्थापना गरेका छौं, अब यसलाई देशको विकास र निर्माणका लागि माध्यम बनाउनु पर्‍यो। दोश्रो प्रश्न छ लो विकासका लागि प्रजातन्त्र त अनिवार्य तत्व मानियो। त्यसको सुरक्षा पनि त हुनुपर्‍यो। यस सन्दर्भमा हामीले मुलुकमा देखा परेका राजनीतिक पार्टीहरूको प्रवृत्तिगत स्वभावलाई विश्लेषण गर्दा नेपाली कांग्रेसको हातबाट मात्रै हालका लागि प्रजातन्त्रको संरक्षण र सम्वर्द्धन सम्भव छ। आउने दिनहरूमा नेपाली जनताले देश विकासका लागि प्रजातन्त्रको संरक्षणका खातिर नेपाली कांग्रेसलाई सहयोग गरी आपनो राष्ट्रिय कर्तव्य पूरा गर्नेछन्।

नेपाली कांग्रेस प्रजातान्त्रिक समाजवादमा विश्वास गर्दछ। नेपाली जनता भोको नाङ्गोछ छ र उसले स्वास्थ्य तथा शिक्षाको उचित अवसर पनि पाएको छैन। प्रजातान्त्रिक समाजवादी नीति र कार्यक्रमबाट मात्रै आफ्ना मूलभूत समस्याहरू समाधान हुने छन् भन्ने विश्वासमा नेपाली जनता छन्।

प्रजातन्त्र स्थापना गर्ने ऐतिहासिक जिम्मेवारी नेपाली कांग्रेसले वहन गर्नु परे जस्तै जनताको राम्रो खाने लाउने र बसोबासका साथै उचित स्वास्थ्य एवं शिक्षाको बन्दोवस्त गर्न सक्षम हुने आर्थिक अवस्था कायम गर्ने गहनतम जिम्मेवारी पनि नेपाली कांग्रेसकै काँधमा छ। यसर्थ, त्यो महान जिम्मेवारी पूरा गर्न सक्षम संगठनात्मक ढाँचाको निर्माण गर्दै प्रजातन्त्रलाई राष्ट्र निर्माणका लागि माध्यम बनाउने ऐतिहासिक दायित्व पनि अहिलेका सन्दर्भमा नेपाली कांग्रेसले नै निर्वाह गर्नुपर्दछ।

(५ पेजको बाँकी)

समाजवादको बारेमा महत्वपूर्ण भाषण दिनु भयो। क्यान्सर रोगले ग्रस्त गर्दै गयो र २०३९ साउन ६ गते उहाँले हामीलाई छोड्नु भयो।

बी. पी. नेपालको अमर इतिहास र प्रजातान्त्रिक समाजवादका प्रखर चिन्तक हुनुहुन्छ। वास्तवमा विदेशका राजनेता तथा चिन्तकले उहाँलाई जति सम्मान गर्न सके त्यति हामीले सकेनौं। बी. पी. को चिन्तन पक्ष यथार्थ र जीवन्त छ। उहाँको चिन्तनलाई बी.पी. वादको रूपमा प्रजातान्त्रिक मुलुकहरूले स्वीकारेका छन् भने धेरै साम्यवादी देशहरूमा उहाँको चिन्तनको यथार्थता देखिएको छ। उदाहरणार्थ रुसा, रोमानिया, जर्मनी, हंगेरी आदि देशलाई लिन सकिन्छ।

★

# नेपाली कांग्रेसको समाजवादी आन्दोलन
## कानूनी दस्तावेजबाट

– कृष्ण देवकोटा

एक शताब्दी पुरानो निरंकुश जहाँनिया शासन समाप्त गरी नेपाली माटोमा प्रजातन्त्रको जग बसाउने क्रान्तिकारी अभियानलाई सफल बनाउने उद्देश्यले वि.सं. २००४ सालमा एक राजनैतिक संगठनको रूपमा नेपाली कांग्रेसको जन्म भएको थियो। त्यसैले वि. सं. २००७ सालको परिवर्तनद्वारा नेपालको राजनैतिक इतिहासमा एक प्रजातान्त्रिक अध्यायको थालनी हुन पुग्यो। त्यसो त नेपाली कांग्रेसले छेडेको उक्त क्रान्तिको उद्देश्य राणा शासन हटाउनु र प्रजातन्त्र स्थापना गर्नु मात्र थिएन। बरु नेपाली समाजमा जरो गाडेर बसेको शताब्दियौं पुरानो पूँजीवादी सामन्ती संस्कारलाई समाप्त गरी आर्थिक समानतामा उभिएको स्वतन्त्र राजनैतिक व्यवस्थाबाट नेपाली जनताको जीवन स्तर उकास्नु थियो। अर्को शब्दमा भन्नें हो भने प्रजातान्त्रिक मूल्य र मान्यता-हरूलाई विघ्न नदिई देशको सामाजिक र आर्थिक विकासमा क्रान्तिकारी भूमिकाको निर्वाह गर्नु थियो। यिनै राजनीतिक र आर्थिक सिद्धान्तहरूको पृष्ठभूमिलाई आध्यनजर राख्दै नेपाली कांग्रेसले वि. सं. २०१२ सालको वीरगन्ज अधिवेशनको अवसरमा समाजवादी नीतिलाई आन्दोलनको रूपमा अगाडि बढाउने घोषणा गरेको हो।

दोस्रो विश्व युद्धपछि दुई शक्ति राष्ट्रहरू अमेरिका र रूस सँगसँगै विश्वको राजनीतिक धरातल पनि दुई ध्रुवमा विभाजित हुन पुग्यो। एकातिर अति दक्षिणपन्थी पूँजीवादी विचारधाराले जरा गाड्न थाल्यो भने अर्कोतिर उग्र वामपन्थी साम्यवादी विचारधाराको हाँगाबिगा फैलन थाल्यो। तर यी दुबैथरीको राजनैतिक सिद्धान्त पछाडि नलागी तेस्रो राजनीतिक ध्रुव या मध्यमार्गको खोजी र चिन्तनमा विश्वका कैयन राजनीतिज्ञहरू दिन रात लागिरहे। फलतः उनीहरूले खोजेको तेस्रो राजनैतिक विकल्पको रूपमा आधुनिक प्रजातान्त्रिक समाजवादलाई स्वीकार गरे, जसमा राजनीतिक स्वतन्त्रताका साथै आर्थिक समानताको सुखद अनुभूति भेटिन्छ। समाजवादी आन्दोलनका कट्टर अनुयायी जननायक स्व. बी. पी. कोइरालाले भन्नु भएको छ "...... समाजवाद तेस्रो विश्वमा भर्नो या असंलग्न विश्वको नैसर्गिक मित्र हो। समाजवादी मियोमा बाँधिएनन् भने यी तेस्रो विश्वका देशहरू या त फासिष्ट सैनिक तानाशाहीतिर जान्छन् या कम्यूनिष्ट तानाशाही या कुनै सुधार विरोधी प्रतिक्रियावादी धार्मिक भौतिकवादी तानाशाही तिर।" उपर्युक्त विश्व राजनीतिक स्थितिलाई बुझेर नै प्रजातान्त्रिक समाजवादप्रतिको आफ्नो अडान र प्रतिबद्धतालाई नेपाली कांग्रेसको २०१२ सालको वीरगन्ज अधिवेशनको घोषणामा यसरी व्यक्त गरिएको छ "हामीले समाजवादी व्यवस्थामात्र नेपालको बाटो हुन सक्छ भनी आफ्नो पक्ष बनाएका छौं। समाजवादी व्यवस्था प्रजातन्त्रात्मक साधन र उपायबाट प्राप्त गर्ने संकल्प गरेका छौं। समाजवादी शिखरमा पुग्ने प्रतिबद्धताबाट कहिल्यै मोडिने र फर्किने काम हुने छैन।" यसरी राजनीतिक पार्टीले आफ्ना नीति र सिद्धान्तहरूको घोषणा मात्र गरेर त्यसको केहि अर्थ रहन्न। लक्ष्यमा पुग्नको लागि हमेसा लागि रहनु पर्ने हुन्छ। त्यसमा पनि आर्थिक समानताको एउटै धरातलमा देश र जनताको आर्थिक अवस्थालाई उभ्याउनु त्यतिकै चुनौतिपूर्ण कार्य हुनजान्छ किनकि आर्थिक समानताको प्राप्ति एउटा लामो प्रक्रिया हो। जसलाई पूरा गर्न कैयन गौडा र घुम्तीहरू पार गर्नु पर्ने हुन्छ।



तर नेपाली कांग्रेस सिंगो समाजवादको पछाडि दौडिएको छैन। प्रजातन्त्र र राजनीतिक स्वतन्त्रतालाई साथ लिएर मात्र समाजवादको शिखरमा पुग्ने जमर्को गर्दछ।

नेपाली कांग्रेसको समाजवादी आन्दोलनको क्रमलाई केलाएर हेर्न एक चोटी २०१५ सालको राजनितीक इतिहासको पाना पल्टाउन करै लाग्छ। २००७ सालको परिवर्तन अनुसारको नयाँ सम्विधान २०१५ सालमा आएर नेपाली जनताले पाउन सके। यसै संविधान अनुसार भएको महा–निर्वाचनमा नेपाली कांग्रेसले प्रतिनिधि सभामा बहुमत प्राप्त गर्न सकेकोले पाँच वर्षका लागि स्व. बी. पी. कोइरालाको प्रधान मन्त्रीत्वमा मन्त्री परिषद्‌को गठन भयो। यस किसिमको राजनीतिक वातावरण सृजना भएको बखत कांग्रेसको सरकारले आर्थिक क्षेत्रमा आफ्नो समाजवादी नीतिहरूलाई बजेटको माध्यमबाट नेपाली जनता समक्ष प्रस्तुत गर्न पछि हटेन।

नेपाली कांग्रेसले सरकार गठन गरेको तीन महीना पछि अर्गात ६ अगष्ट १९५९ का दिन अर्थ मन्त्री सुवर्ण शमशेरले संसदमा पेश गर्नु भएको बजेट भाषणमा समाजवादी समाजको निर्माण गर्न प्रत्यक्ष वा परोक्ष रूपबाट सहयोग पुऱ्याउने उद्धेश्यले पाँचवटा आर्थिक कार्यक्रमहरू पनि समावेश गरिएको देखिन्छ। ती पाँचवटा आर्थिक कार्यक्रमहरू अन्तर्गत (क) देशको राष्ट्रिय आय बढाउने, (ख) कृषि उत्पादनमा मौलिक परिवर्तन ल्याउने, (ग) जनतालाई समुचित लोक कल्याकारी कार्यक्रम उपलब्ध गराउने, (घ) बेरोजगारीको समस्या हल गर्ने (ङ) आयको स्तरमा व्याप्त असमानतालाई घटाउने र सम्पत्तिको न्यायोचित वितरण गर्ने, रहेको थियो। यी आर्थिक नीतिहरू सरकारको आगामी पाँच वर्षका लागि तय गरिएका थिए।

यसरी उपयुक्त आर्थिक कार्यक्रमहरूलाई गति र शक्ति प्रदान गर्ने उद्देश्यले २०१६ सालमा विभिन्न ऐन कानूनहरूको तर्जुमा गरेको देखिन्छ। कुनैपनि दीर्घकालीन योजना र कार्यक्रमहरूको सञ्चालनमा सुनिश्चितता र प्रभावकारीता ल्याउनको लागि सम्वन्धित नियम कानूनहरूको तर्जुमा गरी लागू गर्नु नितान्त आवश्यक हुन्छ। यही आवश्यक्तालाई पूरा गर्ने क्रममा समाजवादी लक्ष्य अनुरूपका करीव एक दर्जन जति ऐन कानूनहरूको निर्माण भएको देखिन्छ। ती ऐनहरूमा खास गरी बिर्ता उन्मूलन ऐन २०१६ सरकारी संस्था ऐन, २०१६, नेपाल कारखाना र कारखानामा काम गर्ने मजदूर सम्बन्धी ऐन, २०१६, भूमि सम्बन्धी (संशोधन) ऐन, २०१६, आय र कर न्याय व्यवस्था ऐन, २०१६, आर्थिक ऐन, २०१६, सम्पत्ति कर ऐन २०१७, जग्गा कर ऐन, २०१७ कर लगाउने ऐन २०१७, आदि मुख्य छन्। यस कदमबाट नेपाली कांग्रेसको समाजवादी आन्दोलनको बाटोमा अर्को एक कोसढुङ्गा (Mile stone) को स्थापना गरेको महसूस हुन्छ।

प्रस्तुत ऐनहरूको कार्यान्वियनबाट केही हदसम्म भए पनि परम्परागत सामन्ती संस्कारको अन्त हुने, मजदूर वर्गको हक हितको संरक्षण हुने, भूमिहीन किसानको लागि जोति आएको जग्गामा स्वामित्व स्थापित हुने, मोहियानी हक कायम हुने, उत्पादन वृद्धिका लागि राष्ट्रिय पूंजीलाई दुरूपयोग हुन देखि जोगाउने, आयमा कर निर्धारण गरी आर्थिक विषमता हटाउने जस्ता विभिन्न समाजवादी लक्ष्यहरूलाई टेवा पुऱ्याउन सक्ने विश्वास गरिएको थियो।

नेपाली कांग्रेसको समाजवादी आन्दोलनलाई व्यवहारिक रूपमा उतार्ने प्रयासको थालनी बिर्ता उन्मूलन ऐनको थालनी घोषणाबाट भएको थियो भन्दा अत्युक्ति नहोला। श्री ५ पृथ्वीनारायण शाहको शासनकाल देखि चली आएको 'बिर्ता' जस्तो सामन्ती प्रथा माथिको कानूनी प्रहारले भूमिहीन किसानहरूलाई जोती आएको जग्गा उपर भूस्वामित्व स्थापित गराउनको साथै सरकारको आय (राजश्व) वृद्धिमा पनि ठूलो टेवा पुग्न सक्थ्यो। उक्त ऐनको प्रस्तावना हेर्दा ऐनको उद्देश्यहरूलाई यस प्रकार किटान गरिएको पाइन्छ। (क) नेपाल अधिराज्यको विभिन्न वर्गका जनतामा समनाताको भावना सृजना गर्ने, (ख) जनताको सुविधा र आर्थिक हितलाई

कायम राख्ने, (ग) राज्य कर नतिरी जग्गा जमिन भोग गर्ने सामन्त प्रथालाई समाप्त गर्ने। यसरी नेपालको त्यस बखतको आर्थिक र सामाजिक परिवेशमा बिर्ता उन्मूलन जस्तो ऐनको जारी गराउनु ज्यादै साहसिलो एवं क्रान्तिकारी कदम थियो। तत्कालको लागि यस कदमबाट सरकारले बिर्तावालहरूलाई क्षतिपूर्ति बापत ठूलो मूल्य चुकाउनु परेको थियो भन्ने कुरा सोही ऐनको अनुसूची (१) बाट थाहा हुन्छ।

समाजवादी लक्ष्यमा पुग्ने मुख्य आधार आर्थिक समानता हो भने आर्थिक समानतामा पुग्नको लागि अपनाइने प्रक्रियाहरू मध्ये साझा सरकारी संस्थाहरूको स्थापना र संचालन गर्नु पनि एक हो। यस किसिमका ग्रामीण सामुदायिक एवं व्यवसायिक संगठनको माध्यमबाट कम आय र लगानी क्षमता भएका कृषक परिवारको आर्थिक उत्थान गर्नमा प्रत्यक्ष रूपबाट सहयोग पुऱ्याउने हुंदा सहकारी संस्था ऐन, २०१६ लागू भएको पाइन्छ। कृषि क्षेत्रमा कर्जा लगानी गर्ने अन्य कुनै संस्थाहरू नभएको तत्कालीन स्थितिमा श्री ५ को सरकारको समेत शेयर लगानी हुन सक्ने यस्ता सहकारी संस्थाले आफ्ना सदस्यहरूलाई सहुलियतपूर्ण ब्याजदर ऋण सहयोग प्रदान गरी कृषि उत्पादनमा वृद्धि गराई राष्ट्रिय अर्थतन्त्रमानै टेवा पुग्न सक्ने दृढ विश्वासका साथ उक्त ऐन लागू गरिएको थियो।

समाजका विभिन्न क्षेत्रमा अलग्ग परेर रहेका शोषित पिडित र निमुखा वर्गलाई संरक्षण र राहत दिन नसकेमा आफ्नो समाजवादी नीतिको केही अर्थ रहन्न भन्ने कुरा नेपाली कांग्रेसको तत्कालीन सरकारले राम्रोसंग बुझेको थियो। त्यसबखत कल कारखानाहरूको संख्या ज्यादै कम भएता पनि कारखानाहरूमा काम गर्ने मजदूर वर्ग समाजकै सबै भन्दा शोषित र पीडित वर्गमा पर्छन् भन्ने तथ्यलाई स्वीकार गरी मजदूरहरू माथी उद्योगपति (व्यवस्थापन) तर्फबाट भैराखेको र हुन सक्ने शोषणलाई समाप्त गरी मजदूर वर्गको हक हित र सुविधा कानूनी संरक्षण प्रदान गर्ने अभिप्रायले नेपालमा कारखाना र कारखानामा काम गर्ने मजदूर सम्बन्धी ऐन, २०१६ जारी गरिएको थियो। यस ऐनले मजदूर र व्यवस्थापक बीच भैराख्ने झगडाको निप्टारा गर्नुका साथै मजदूरवर्गको स्वास्थ्य र सुरक्षा सम्बन्धी कारखाना भित्र मिलाउनु पर्ने न्यूनतम प्रबन्धहरूको निर्धारण, एवं काम गर्ने समय र कल्याणकारी व्यवस्थाहरू पनि निर्धारण गरिदियो। न्यूनतम वेतन, निवृत्तिभरण, बोनसका साथै ट्रेड युनियनको गठन गर्न पाउने अधिकारको प्रत्याभूति पनि सोही ऐनले गरिदियो। यसरी नेपाली कांग्रेसले आफ्नो समाजवादी आन्दोलनको गतिलाई कानूनी पक्षबाट नै अगाडि बढाउनु पर्ने समय बाध्यतानै थियो भन्ने कुरालाई स्वीकार गर्न करै लाग्छ।

समाजवादी आर्थिक सिद्धान्त अनुसार धनी र गरीब बीचको दूरीलाई कम गर्ने प्रभावकारी माध्यम कर प्रणाली नै हो। पूंजीवालहरूको आयमा कर लगाउनको लागि प्रजातान्त्रिक सिद्धान्त अनुसार पनि कानून बनाएर मात्र कर लगाउन र उठाउन सकिने हुंदा कर सम्बन्धी विभिन्न ऐनहरूको तर्जुमा गर्नु आवश्यक थियो। यही आवश्यक्ताको उपजको रूपमा आय कर न्याय व्यवस्था ऐन, २०१६, कर लगाउने ऐन,२०१७ सम्पत्तिकर ऐन २०१७ जग्गा कर ऐन २०१७ व्यापार मुनाफा र पारिश्रमिक कर ऐन २०१६. आदि ऐनहरू नेपाली कांग्रेसकै सरकार छंदाको अवस्थामा लागू गरिएका थिए।

कुनैपनि विषयमा कानून बन्दैमा त्यस सम्बन्धी सबै समस्या स्वतः समाप्त भएर जान्छन् भन्नेपनि होइन। पारित कानूनले लिएको मनसाय पूरा गर्दै जाने जिम्मेवारी त्यसको कार्यान्वयन पक्ष वा कार्यपालिकालाई सुम्पिएको हुन्छ। तर समयको विडम्बना भनौं या नेपाली जनताको दूर्भाग्य नेपाली कांग्रेसको संसद र सरकारद्वारा जारी गरिएका उपर्युक्त ऐन कानूनहरूको कार्यान्वयन कांग्रेसको सरकारले पाएन। अशिक्षा, अभाव र दरिद्रतालाई आफ्नो नियति ठानेर बांच्न विवश भएका नेपाली जनताको घर आंगनमा परिवर्तनको उज्यालो किरण पुग्न नपाउदै २०१७ साल पौष १ गतेको राष्ट्रघाती कदमले परिवर्तनको मार्गनै अवरुद्ध गराइदियो। यस कदमबाट नेपाली कांग्रेसको समाजवादी आन्दोलन मात्र नभई देशको राजनीतिक व्यवस्था, आर्थिक अवस्थाका साथै नयाँ युगमा प्रवेश गर्न लागेको सामाजिक मूल्य र मान्यताहरू समेत तानाशाही हुन पुगे। प्राकृतिक स्रोत र साधनहरूले सम्पन्न भएर पनि नेपालीको वर्तमान विपन्नता बांच्न बाध्य गराइदियो। धनी र गरीब बीचको आर्थिक विषमताको खाडल पूरा गर्न वर्षौं लामो संघर्ष र थुप्रै आरोह अवरोहहरू पार गर्नु पर्ने बाध्यतालाई छोडेर पञ्चायती शासन ढलेको छ।

समष्टिमा नेपाली आकाशबाट पञ्चायती शासन अस्ताएर प्रजातान्त्रिक बहुदलीय व्यवस्थाको उदय भएको छ। तर राष्ट्र निर्माणको ठूलो हाँक चुनौती लिएर आलस्यलाई पालेर नागरिक कर्तव्यनै बिर्सिसकेका कैयन नेपाली जनताको मानसिकता मेहनत गर्ने आँट र अठोट अनि जोस र जाँगर भर्दै राष्ट्र निर्माणको सृजनात्मक धरातलमा उभ्याउनु पर्ने पहिलो जिम्मेवारी वर्तमान राजनैतिक पार्टी र कार्यकर्ताहरूको काँधमा आईपरेको छ बहुदलीय व्यवस्था भनेको नबुझ्ने ७० प्रतिशत निराक्षरी जनताको घर आँगनमा पुगेर सामाजिक र राजनैतिक चेतना भर्नुपर्ने बाध्यतालाई पनि निर्विवाद रूपमा स्वीकार्नु परेको छ। यस किसिमको देशले सामना गर्नु परेका विभिन्न राजनैतिक, आर्थिक एवं सामाजिक वातावरणको पृष्ठभूमिमा राष्ट्रियतालाई शिरोधार्य गरी प्रजातान्त्रिक समाजवादको बाटोबाट राष्ट्र निर्माणको उचाईमा पुग्न दृढतापूर्वक फेरि एकपटक संकल्प गर्नु परेको छ





# हामी प्रजातन्त्रका सिपाही हौं

– गणेश देवकोटा
पालुङटार, गोरखा

यो उन्मुक्तिपछि
जनशक्तिहरू
हर्षको राँको बाली
माटोमा नव संगीत सुसेलिरहेका छन्
चिसो तुषारोले कठांग्रिएका कलिला बिरुवाहरूमा
वसन्तको सञ्जीवनी छरिरहेका छन्
यो शहीदको उत्सर्ग हो
अब दमनले यात्रा रोक्न सक्तैन कसैको
चङ्गा उडी तारा छुन खोज्नेहरू
आफै हुरीमा हुत्तिएका छन्
बाजका विषालु नंग्रा र धमिला पखेटाहरू
कालो आफै, संग्राम यो युद्धले मरिसकेका छन्
के गर्नु अब यी नीच अधमका कुरा
के गर्नु अब यी अभिशाप मृत्युका कुरा !
हामी त मान्छे हौं अब जीवनकै कुरा गरौं
हाम्रा त सुन्दर इच्छा र इरादाहरू छन्
हामीमा त सुन्दर सपना र विपनाहरू छन्
उकाली यात्रा उक्लिदै
हामी अब तिनलाई पूरा गरौं,
विश्वासको शिर हामी आफै हिमाल बन्न सकौं
भावना अब हामी सल्लिदै कलकलाउनु पर्छ
अठोट आफ्नै मन कर्मले धर्ती रसाउन सकौं,
हामी प्रजातन्त्रका सिपाही हौं
युद्धमा हामीले कहिल्यै हात धुनु हुँदैन
कोल्टो फेरेर पुनः निर्माणको युद्ध उठ्नु पर्छ
हामी पहरा बसौं प्रजातन्त्रको
हामी सुरक्षा गरौं स्वतन्त्रताको
हामी जीवन बाँचौं समानताको
हामी मुटु बनौं राष्ट्रियताको



**गोरखा भूमिलाई अराजक नबनाउ**

# गोरखाबासीहरू प्रजातन्त्र, विकास र स्थायित्वको पक्षमा

– रामभद्र उपाध्याय

यो भनिरहनु पर्दैन कि नेपाल राष्ट्रको एकीकरणमा हामी गोर्खालीहरूका पुर्खाहरूले आफ्नो गच्छेनुसार रगत–पसिना बगाई योगदान पुऱ्याएका हुन् । त्यो राष्ट्र बनाउने पुर्खाहरूका हामी सन्ततीहरू वर्तमान नेपाल राष्ट्रको आधुनिकीकरणका लागि पनि आफ्नो गच्छे अनुसार योगदान पुऱ्याउन प्रतिबद्ध छौं । राष्ट्रको आधुनिकीकरण गर्ने भन्ने बित्तिकै प्रजातान्त्रिक मूल्य र मान्यताहरूको प्रश्न स्वतः आइहाल्दछ । विश्वमा उन्नत र विकसित राष्ट्रहरू छन् । तिनीहरूले बहुदलीय प्रजातान्त्रिक व्यवस्थामा जुन सार्वभौम मूल्य र मान्यताहरू हुन्, तिनीहरूलाई अंगीकार गरी राष्ट्रिय जीवनमा तिनलाई उतार्दै जनताको जीवन पद्धतिका रूपमा व्यवहारमा प्रयोग गरेर मात्र ती राष्ट्रहरूले आफ्नो समाजलाई शिष्ट, सभ्य र समुन्नत पार्न सकेका हुन् । यो कुरालाई हृदयङ्गम गरी आधुनिक नेपाल राष्ट्रको निर्माणको लागि प्रजातान्त्रिक मूल्य र मान्यताको स्थापना गरी जनतालाई सर्वोपरी पार्न नेपाली कांग्रेसले २००७ साल मा क्रान्ति गरेको हो त्यो २००७ सालको क्रान्तिको उपलब्धिलाई समाप्त पार्न त्यसै बखतदेखि प्रतिगामी तत्वहरू सक्रिय रहे । नेपाली कांग्रेसले २००७ साल पछि पनि धेरै अप्ठ्याराहरू पार गर्दै मूलतः प्रजातन्त्रका लागि लड्दै मुलुकलाई २०१५ सालको निर्वाचनको अवस्थामा पुऱ्यायो । प्रजातन्त्रका विरोधी प्रतिगामी तत्वहरू विभिन्न पार्टी र ग्रुपहरूका माध्यमबाट निर्वाचनमा खडा भए, तर ती सबैले पराजयको सामना गर्नु पऱ्यो । त्यसपछि पुनः प्रजातन्त्रका विरुद्ध षड्यन्त्र शुरू भयो । मुलुकका विभिन्न ठाउँमा लुट–पाट र आतङ्क मच्चाउने काम गरिन थाल्यो । त्यसमध्ये गोरखालाई पनि एउटा प्रयोग भूमिका रूपमा लिई आतङ्कको थलो बनाउने काम गरियो । २०१७ साल कार्तिक ६ गते गोरखाकाण्ड गराई अराजक स्थिति सिर्जना गर्ने काम गरियो । त्यसको दुःखद परिणाम ७ जना मानिस मरे र कतिपय घाइते भए । यसका लागि प्रत्यक्षत नरहरि र राजेश्वर देवकोटा जस्ता मान्छेको हात थियो । त्यो गरे गराएको र प्रजातन्त्रलाई समाप्त पार्न मद्दत गरी ठूलो गुन लगाए बापत २०१७ सालको काण्डपछि राष्ट्रिय पञ्चायतमा गोरखाबाट राजेश्वर देवकोटालाई निर्विरोध ल्याइयो ।

हिजो पञ्चायतमा काम गरेका मान्छेहरूमध्ये सबैभन्दा प्रतिगामी, जन विरोधी, प्रजातन्त्र विरोधी र प्रतिक्रियावादी व्यक्तिहरूको गणना गर्दा राजेश्वरको नाउँ पहिलो पंक्तिमा आउँछ । यथार्थमा भन्ने हो भने उनको राजनीतिक जीवन नै धोका षडयन्त्र र अवसरवादिता हो । उनलाई बलियो शक्तिले नेपाली कांग्रेस भित्र मूलत बी. पी. कोइरालाका विरुद्ध प्रयोग गर्न चाह्यो र उनी मोटो थैलीको अनुचित प्रभावमा प्रयोग भए । उनले नेपाली कांग्रेसलाई मात्र धोका दिएनन् । २०१५ सालको चुनावमा टक प्रसादलाई पनि धोका दिई भद्रकाली मिश्रको दाहिने हात भएर चुनाव लडे । भद्रकाली हिन्दुस्थानको नजिकको मानिस भएकाले राजेश्वरले भद्रकालीसंग नजिक भएर रहनुमानै आफ्नो कल्याण देखे । राजेश्वरले २०१५ साल र अझ त्यो भन्दा पहिला २००८ सालमै हिन्दुस्थानसंग बाँधेको लगन गाँठो अझै कायमै राखेका छन् ।

राजनीतिक घटनाक्रमलाई हेर्दा २०१७ साल र २०३६ सालमा गोरखावासीहरूलाई प्रजातन्त्रका विरुद्ध प्रयोग गर्ने दुष्प्रयास राजेश्वरले गरे । २०३६ सालमा ठाँटी पोखरीमा सबैभन्दा पहिले कीर्तिनिधि विष्ट माथि हमला गराइयो । ठाँटी पोखरी राजेश्वरको आफ्नो गाउं इलाका र राजेश्वर पनि कीर्तिनिधिसंगै गएका थिए । तर, उनी चाहिं आफ्नो घरमा बसी सभामा गएनन् र कीर्तिनिधि माथि हमला भयो । त्यहाँ कीर्तिनिधि माथि किन हमला भयो होला भन्दा त्यसका तीनवटा कारण छन् । प्रथमतः कीर्तिनिधिले राजेश्वरलाई पञ्चायतको चुनावमा प्रधानमन्त्री हुँदा हराउन शक्तिको प्रयोग गरेका थिए र त्यसैको बदला लिने काम राजेश्वरले गरे । अर्को पक्ष कीर्तिनिधि भारत विरोधी पक्षमा गनिन्छन् र संभवत त्यो शक्तिको इसारामा राजेश्वरले कीर्तिनिधि माथि हमला गराए होलान् । तेस्रोपक्ष बहुदलका विरुद्ध गोरखा भूमिलाई प्रयोग गर्नु थियो त्यसका लागि ठाँटी पोखरीबाट त्यो अभियान शुरू गराइयो । ठाँटी पोखरी काण्ड पछि राजेश्वरले पुरानो इबी पनि साधना गरेर प्रजातन्त्रका विरूद्धको युद्ध पनि शुरू गरे । त्यसपछि त्यहाँ सबैमाथि हमला भयो र जनमत संग्रहमा गोरखा अधिराज्यभरिमै एउटा अराजक भूमिका रूपमा चर्चित रह्यो ।

२०४७ सालमा पुनः गोरखालाई अराजक भूमिका रूपमा परिणत गराउने दुश्चेष्टा राजेश्वर देवकोटा जस्ता गैर जिम्मेदार व्यक्तिहरू गर्दैछन् । २०१७ साल पछि प्रजातन्त्र स्थापनाका लागि नेपाली जनताले धेरै ठूलो त्याग र बलिदान गरेको छ । प्रजातन्त्रका लागि धेरै रगत पसिनाहरू बगे । यसै पटकको जन-आन्दोलनमा पनि जनताले धेरै रगत बगायो । त्यसको फलस्वरूप प्राप्त प्रजातन्त्रलाई संरक्षण गरी जनहितका लागि काम गर्नु पर्नेमा प्रजातन्त्र भयो भने जनता बलियो हुन्छ भनी प्रजातन्त्रका विरूद्ध जुन षड्यन्त्र मुलुकमा भइरहेछ त्यसका लागि गोरखालाई अराजक भूमि बनाई आफ्नो दुनो सोझ्याउने प्रयत्न राजेश्वरहरू गर्दैछन् ।

गोर्खाली जनता शान्त र संयमशील छ । जुन जनताले नेपाल राष्ट्रको एकीकरण गरी एउटा मुलुक निर्माण गऱ्यो । त्यो जनता राष्ट्रको निर्माणका लागि पनि समर्पित हुन चाहन्छ । प्रजातन्त्रको माध्यमबाट मात्र विकास हुन्छ । र त्यसका लागि स्थायित्व प्रथम शर्त हो भन्ने कुरा पनि सचेत गोरखावासीहरूले बुझेका छन् । हामी गोर्खालीहरूले हामीलाई प्रयोग गरेर हाम्रो मूल्यमा राजेश्वरहरू जस्ता व्यक्तिले लिंदै आएको अनुचित लाभ र त्यसबाट नेपाल राष्ट्र एवं नेपाली समाजलाई पुग्न गएको क्षतिबारे पनि बुझ्नु पर्ने बखत आइसक्यो ।

२०१७ साल पछि यिनीहरूले आफ्नो स्वार्थका लागि के मात्र गरेनन् । सगरमाथाको आधा शिर चिरेर आधा चीनलाई दिई पञ्चायतलाई समर्थन गराई नेपाली जनतालाई सैनिक बलको बूठले कुल्चेर अथाह सम्पति जोर्ने काम राजेश्वर जस्ता पञ्चहरूले गर्दै आएका हुन् । अहिले प्रजातन्त्र आएपछि चर्को कुरा गर्ने र आफूलाई राष्ट्रवादी देखाउन खोज्ने पञ्चहरू १९२५ (२०२२) मा भारतसंग १९५० को भन्दा पनि खराब अत्यन्त अपमान जनक सन्धी गरी सुरक्षाको जिम्मा नै भारतको हात सुम्पने काम गरेर चीनलाई सगरमाथाको आधा शिर दिएको बदला स्वरूप भारतलाई सुरक्षाको जिम्मा लगाई दुबै महादेशबाट पञ्च र पञ्चायतलाई समर्थन गराउने जनतालाई लुट्ने र धन सम्पति थुपार्दै जाने काम यिनीहरूले गरे । १९६५ मा भारतसंग सन्धी गर्दा के राजेश्वर देवकोटा सत्ताको चुलिया थिएनन् ? त्यसबेला उनले राष्ट्रियता बिर्से । उनलाई केवल महाराजगञ्जमा घरहरू थप्नु थियो र घर आँगन अगाडि लह–लह धान फल्ने फाँट जोड्नु थियो । उनीहरूले त्यो गरे । देश बेचेर भए पनि धन सम्पत्ति थुपार्ने र सत्तामा बस्ने काम गर्नु थियो त्यो गरे । राजेश्वरहरूले पञ्चायतमा लागेर २०१७ साल देखि २०४७ संम जे जति अपराध गरेका छन् – अहिले

अरू पार्टी खोलेर चोखिन खोजेता पनि तिनहरू अपराध-बाट मुक्त हुन सक्दैनन् ।

२०४६ साल फाल्गुण ७ गतेबाट शुरू भएको जन आन्दोलनको सन्दर्भलाई लिएर हेर्‍यो भने पनि राजेश्वर प्रवृत्ति व्यक्तिहरूको अवसरवादिता र नीचता स्पष्ट देखा पर्दछ । मरिचमानहरू सत्तामा थिए र जन आन्दोलन दबाउन पाशविक दमन जनतामाथि उनीहरूले गरे र सयौं निर्दोष नेपालीहरू मारिए । पञ्चायतको उच्च तहमा रहेका र प्रधानमन्त्रीका दाबेदार रहेका राजेश्वर देवकोटा जस्ता पञ्चहरूले के गरे त त्यसको पनि मूल्याङ्कन हुनु जरूरी छ । एकातर्फ जनता प्रजातन्त्रका लागि आन्दोलन गर्दछ र आन्दोलनकारीमाथि सत्तासीन पञ्चहरू गोली चलाउँदै छन् भने अर्कोतर्फ प्रधानमन्त्री हुने भनी गोर्खाली जनतालाई ठगी माननीय हुन पुगेका राजेश्वर देवकोटा पञ्चायत नै प्रजातन्त्र र प्रजातन्त्र नै पञ्चायत हो, तसर्थ पञ्चायतमा परिवर्तन हुन सक्तैन अझ बहुदल भनेको लोटा हो र निर्दल भनेको गाग्री हो । हामी पञ्च-हरू बहुदलमा अट्दैनौ भन्ने जस्ता पाखण्डपूर्ण कुरा गरी मरीचमानलाई हटाए मात्र पुग्छ । परिवर्तन त के सुधार पनि गर्नु हुन्न भनी प्रकारान्तरले मरिचमानले मानिस मारेका कुरालाई ठीक साबित गर्ने धृष्टता गरी उनले जघन्य अपराध गरेका छन् । प्रधानमन्त्रीको कुर्सीका लागि न्याल चुहाएर त्यत्रो जन–आन्दोलनमा जनता विरुद्ध उभिने राजेश्वर देवकोटा अहिले पुनः प्रजातन्त्रका नाउँमा पार्टी संगठन गर्दै जनतालाई ठग्न गोर्खावासीहरूलाई भ्रम पार्ने दुष्प्रयास गर्दैछन् र गोर्खाभूमिलाई अराजक बनाई गोर्खाली जनतालाई प्रजातन्त्र विकास र स्थायित्वका विरूद्ध उभ्याउने दुष्चेष्टा गर्दछन् । यदि राजेश्वर जस्ता अराष्ट्रिय एवं जनविरोधी धारणा र स्वभाव भएका व्यक्तिले गोर्खाली जनतालाई राष्ट्रियताका नाउमा ठग्न र झुक्याउने दुष्चेष्टा गर्ने काम जारी राखे भने उनको अरू कच्चा चिट्ठा खोल्ने कुरा गर्नु जरूरी हुने छ । जन आन्दोलन र जनताको रगतको मूल्यमा राजेश्वर जस्ता व्यक्तिले पनि पार्टी संगठन गर्ने अधिकार पाएका छन्, त्यही व्यक्ति केही हजार व्यक्तिले घेरेर ल्याएको प्रजातन्त्र भनी आन्दोलन र शहीदहरूको रगत प्रति घृणा व्यक्त गर्दछन् । उनलाई जनताले ठम्याई सकेको छ कि अहिले राजेश्वर मसालसँग घाँटी जोड्दैछन् र उनका भनाइहरू-लाई हेर्दा उनी हालका लागि मसालबाट राष्ट्रिय प्रजा-तान्त्रिक पार्टीमा काजमा आएका हुन् । खबरदार! शान्त र प्रजातन्त्रका प्रति समर्पित गोर्खाली जनतालाई आफ्नो तुच्छ स्वार्थका लागि झुक्याउने घृणित कार्य नगर ।



राष्ट्रिय एकता प्रजातन्त्रको जगमा मात्र खडा हुन सक्छ र प्रजातन्त्रको जग देशको उत्तरोत्तर आर्थिक विकास र न्यायपूर्ण आर्थिक व्यवस्थामा मात्र बलियो हुन सक्छ । तसर्थ हाम्रो दृष्टिमा राष्ट्रियता, प्रजातन्त्र र विकास उन्नति एक अर्कामा आधारित तत्त्व हुन् ।

—महामानव वी० पी० कोइराला



# नेपाली साहित्यको इतिहासमा गोरखा

– तुलसीमान श्रेष्ठ

"बत्ती मुनिको अँध्यारो" भने झैं शूरता, वीरता, धीरता एवं ऐतिहासिक, राजनैतिक जुनसुकै दृष्टिले पनि स्वदेशमा मात्र नभै विदेशी भू-भागमा समेत एउटा गर्विलो इतिहास कायम गरेको गोर्खाली शक्ति साच्चै नै साहित्यक क्षेत्रमा भने अँध्यारो कोठामा जकडिएको आभास हुन्छ । नेपाली साहित्यको यात्रालाई विहंगावलोकन गर्दा हामी दार्जीलिङ्ग तर्फ चियाउन पुग्छौं । साहित्यको जुन सुकै विधामा कलम चलाएर नेपाली साहित्यको मोड परिवर्तन गर्ने क्रममा दार्जीलिङ्ग निकै सशक्त रूपमा देखा परेको छ । नेपाली काव्य गगनकादेदीप्यमान तारा महाकवि लक्ष्मीप्रसाद देवकोटा पनि गोरखा साहित्य संस्कृति बोकेर आधुनिक नेपाली साहित्यलाई अगाडि बढाउन सफल भएको कुरा इतिहासबाट छिपेको छैन ।

नेपाली साहित्यको गद्य फाँटलाई सिंहावलोकन गर्दा वि.सं. १८२७को शक्ति बल्लभ अर्यालको महाभारत विराट-पर्व सम्म पुग्छौं भने पृथ्वी नारायण शाहले नेपालको एकीकरण गर्ने सिलसिलामा र राज्य संचालन गर्ने क्रममा आफूले देखेका, सुनेका र भोगेका आधारमा दिव्योपदेश-को सिर्जना गरे । हुन त पृथ्वीनारायण शाहले साहित्यक मान्यताको लागि नभै राजनीतिक, धार्मिक र सामाजिक परिवेश झल्काउनुको साथै नीति उपदेश प्रदान गर्ने उद्देश्यले 'दिव्योपदेश' को निर्माण गरे पनि परन्तुमा त्यसले साहित्यिक महत्त्वलाई पनि अलभ्याउनसकेन । यसरी वि. सं. १८३१ मै गोरखाका राजाबाट नै साहित्यिक यात्राको प्रारम्भमा भइसकेको थियो । यिनै गोरखाली राजा पृथ्वीनारायण शाहले एकीकरण गरेको सिङ्गो नेपालका नेपालीले गोरखालीका नाममा साहित्येतर क्षेत्र-मा आफ्नो गौरव संसारमा स्थापित गरेको छ ।

नेपालीहरूको गर्विलो संम्पत्तिको रूपमा रहेको गोरखाले आधुनिक नेपालको बोध गराउँछ । गोरखाले नेपालको प्रतिष्ठा र मर्यादामा महत्वपूर्ण भूमिका निभाउँदै आएको छ । यसरी ऋषिको तपोभूमि वीरताको उद्गमस्थल, प्राकृतिक सौन्दर्यको भण्डार यस पवित्र भूमिमा काव्य साधनाको अभाव भएको महशूस हुन गइरहेको छ ।

गोरखाली साहित्य यात्रालाई विचरण गर्दा साहित्यको पृष्ठभूमि कालदेखि नै साहित्यकारहरू मन्द रूपमा देखा परेका छन् । मौखिक रूपमा चल्दै आएको प्राचीन कविताको रूप यस्तो छ–

"डडाङ्ग र डुडुङ्ग डरलाग्दो बाजा
रातीराती हिड्ने गोरखाली राजा
गोरखाली राजालाई धनैले पुगेन
बाहुनको टण्टा कहिल्यै टुटेन ।"

उपर्युक्त पंक्तिबाट पनि पृथ्वीनारायण शाहको राज्य विस्तारको क्रममा हातहतियार खरिद गर्ने धनको अभाव भएको र राज्य संचालनको गतिविधिलाई आत्मसात् गरेको पाइन्छ । यस्तै पद्य क्षेत्रमा पनि "धायको छ लमजुङ्ग भकुण्डो" कविता लेखेर साहित्यको प्राचीन कालमा नै गोरखा निवासी शक्ति बल्लभ अर्यालले कवित्व शक्तिको परिचय दिएका छन् । पृथ्वीनारायण शाहले नेपाल एकीकरण गरेपछि जसरी राजधानी काठमाडौं बन्यो त्यसरी नै गोरखाली साहित्यले पनि बसाँई सरेको आभास हुन्छ र गोरखाली साहित्य थाँतो रहन गएको प्रतीत हुन्छ । आधुनिक नेपाली साहित्यमा गोरखाका पूर्णप्रसाद ब्राह्मण, राजेश्वर देवकोटा, बिनोद प्रसाद धिताल आदिको नाम आउँछ । गोरखाको साहित्यकारहरू-मा यसै प्रसङ्गमा नाम जोड्नु पर्ने अर्को व्यक्ति गायत्री गणेश अर्याल पनि आउँछन् ।

यी माथिका पुराना पुस्ताका प्रतिभाहरू बाहेक नयाँ पुस्तामा पनि केही साहित्यिक प्रतिभाहरू देखापरेका

छन् । सङ्गठानात्मक रूपले साहित्य सम्बन्धी केही हुन नसकेकोले यथार्थमा नयाँ पुस्ताका व्यक्तिहरू फेला पर्न भने सकेका छैनन् तैं पनि अहिलेका यी व्यक्तिहरूलाई भने यस प्रसङ्गमा बिर्सन सकिदैन । गोरखाका साहित्यिक नव चेतनाका पक्षधरहरूमा–चिरञ्जीवी वाग्ले, तुलसीमान श्रेष्ठ, सीताराम अधिकारी, तीर्थराज अधिकारी, शिव-हरि मरहट्टा, वाचस्पति देवकोटा, चन्द्रकान्त अधिकारी, भोजराज वाग्ले, वी. पी. गोरखाली (दिवंगत) गौतम न्यौपाने; डा.राजेन्द्रराज वाग्ले, यदु भट्ट, जीवनराज वाग्ले धनञ्जय भट्ट, कमलापन्त, नवराज कट्टेल, सुमन कट्टेल, होमनाथ ढकाल (दिवंगत) आदि पर्दछन् ।

गोरखाली साहित्यकारहरू जन्मेका त छन् तर स्याहार सुसार नपाएर कठाङ्ग्रिएका छन । त्यसैले आफ्नै जिल्लामा साहित्यक परिषद् गठन गरेर, छापाखानाको व्यवस्था गरेर, साहित्यिक कार्यक्रम संचालन गरेर, आफ्ना काव्यकारितालाई वेलावेलाका पत्र-पत्रिकाको माध्यमबाट देखाउदै आएका यी नयाँ प्रतिभाहरूलाई उत्साहित पार्न सके र नयाँ प्रतिभाको अझ खोजी गर्न सके गोरखाको यो साहित्यको इतिहासमा गोरखाली साहित्यक प्रतिभाहरूको साहित्यिक व्यक्तित्वले पनि हातेमालो गर्न सक्ने छ भन्ने कुरामा विश्वस्त हुन सकिन्छ ।

★

## अनन्त क्रम

– स्व. वी. पी. गोर्खाली

तिमीले समातेका हातहरू मेरा हात थिए
र तिमीले छामेको क्षितिज मेरा आँखा थिए
अझै पनि म स्पष्ट भन्छु–
तिमीले बालेको दियो मेरा पाइलाहरू थिए
बिस्तारै चूक घोप्टियो र यौटा आँसी जन्मियो
बिस्तारै कम्प भयो र यौटा विस्फोटन आयो
शायद तिमी अहिले पनि यही सोच्दै हौली
कि यौटा वैशाख आयो
र नर्भेटिदै उराठी यौटा चैत आयो
तर कम से कम विश्वास गर
सृष्टि अनन्त छ
र धर्तीको अंगालो अमर छ
विश्वासको यही न्यानो मायाँमा भन्छु
यौटा गर्जन आयो
    र, नयाँ जन्मको बिगुल फुक्यो
यौटा विष्फोटन आयो
    र, गर्भको नयाँ ढैलो उघान्यो ।

साभार: (कविताको डायरीबाट)

---

हाम्रो देशमा १०० मा नब्बे जति मानिसहरू गरीब छन् । जसलाई खान लगाउन पुग्या छैन । उनीहरू कुटो–कोदालो गरेर गाउँमा बस्छन् । नेपाल भनेको तिनै १०० मा नब्बे मानिसहरू हुन् । जब म नेपालको कल्पना गर्न थाल्छु, त्यसबेला तिनै गरीव दाजु–भाइ दिदी बहिनीहरूको तस्वीर मेरो अगाडि आउँछ । मैलो लुगा लगाएको, खान नपाएको र रोगी अनुहारको तस्वीरमा अनि मलाई लाग्छ, यी रोगीका खान नपाएका ओठमा हाँसो आवस्, केटाकेटीहरूले पढ्न पाऊन्, रोगी छन् भने औषधी मुलोको व्यवस्था होस् भनेर नै हामी राजनीतिमा लागेका हौं । मन्त्री हौंला, ठूला-ठूला कुर्सीमा जाऔंला भनेर राजनीतिमा लागेका हैनौं ।

–बी. पी. कोइराला



# गोरखाको विकास बिगत, वर्तमान र भविष्य

– तुलसी न्यौपाने

विकास मानव चेतना, शीप, ज्ञान र क्षमताको आधारमा क्रमिक र निरन्तर रूपले अगाडि बढ्ने विषय हो । मानव मस्तिष्कको विकास नै सबै क्षेत्रको विकासमा प्रभावकारी माध्यम बनेको छ । सामग्री, रकम र जन-शक्तिलाई ठीक तरिकाले उपयोग गर्ने, मानव हितमा परिचालन गर्ने शीप, ज्ञान र क्षमता भएकै मानिसको खाँचो पर्छ । नयाँ नयाँ प्रविधिको विकास गर्ने र नयाँ र पुराना प्रविधिको प्रयोग आफुले गर्ने र अरूलाई सिकाउने काम ज्ञानवर्धक व्यक्तिबाट मात्रै संभव हुन्छ । कुन कुरा ठीक र कुन कुरा बेठीक, कुन काम असल र कुन काम खराब, कुन उपयोगी र कुन अनुपयोगी भन्ने विवेक सक्षम मानिसबाटै हुन्छ । त्यसैले विकास मानिसबाटै मानिसका लागि गरिने काम हो र यो समयको परिवर्तनसंगै जनताका चाहना अनुसार अगाडि बढ्दछ ।

आजको विश्व गरिब र धनी राष्ट्रहरू, साम्यवाद र पूँजीवाद तथा समाजवादमा विभाजित रहेको छ । राजनीतिक सिद्धान्त र आर्थिक प्रणाली नै यी राजनीतिक व्यवस्थाको तराजु हुन पुगेका छन् । पश्चिमेली प्रजातान्त्रिक मुलुक पूर्वी युरोप र एशियाबाट रहेका केही साम्यवादी मुलुकमा हाल देखापरेको राजनैतिक र आर्थिक परिवर्तन त्यस भागका जनताका चाहना र माग संग सम्बन्धित छन् । नेपालमा भर्खरै भएको जन–आन्दोलन पनि जनताकै चाहनाबाट भएको हो । आर्थिक उन्नति भएन र गरिब वर्गको हितमा काम भएन भने सिद्धान्त मात्र पनि निरर्थक हुने रहेछ भन्ने कुरा पूर्वी युरोप र सोभियत संघमा भएका परिवर्तनले प्रष्ट पारेको छ । अमेरिका र युरोप तथा तेस्रो विश्वका कम विकसित मुलुकका आवश्यकता फरक–फरक किसिमका छन् । अमेरिका विश्वमा आफ्नो शक्ति देखाउन चाहन्छ, आफ्ना जनताका नयाँ पुराना माग पूरा गरेर उनीहरूलाई संसारका जनता भन्दा सुखी, सम्पन्न बनाउन चाहन्छ । पृथ्वीको साधन बढी उपयोग गरेर विश्व बजारमा आफ्नो प्रभुत्व कायम गर्न चाहन्छ । तर नेपाल जस्ता अति कम विकसित मुलुकले गाँस, बाँस, लुगा फाटो, पिउनेपानी, शिक्षा र स्वास्थ्य जस्ता अत्यावश्यक कुरा परिपूर्ति गर्नमा ठूलो प्रयास गर्नु परेको छ ।

विश्वको मानचित्रमा सानो मुलुक नेपालको निर्माण देखि स्थायित्व बिनानै हालसम्म जनताले विकास लाई गति दिन सकेको पाइँदैन । नेपालका समस्यालाई हामी मोटा–मोटी रूपमा निम्न अनुसार वर्गीकरण गर्न सक्छौं जुन समस्या प्रायः सबै जिल्ला र समाजलाई मिल्ने किसिमका देखिन्छन्:–

(क) करीब ६० प्रतिशत जनता अशिक्षित भएको कारणबाट जनताका सोचाइमा तीव्र परिवर्तन आउन नसक्दा जन जागरणको अभाव हुनु, ठीक बेठिक छुट्याउन समय लाग्नु,

(ख) तीव्र रूपले बढिरहेको जनसंख्या नियन्त्रण भएना, परिवार नियोजन गरेमा परिवार पनि सुखी, राष्ट्र पनि धनी हुन सक्छ भन्ने ज्ञानको अभावले गर्दा झन् गरिबी बढ्नु, उत्पादन र जनसंख्या बृद्धि दरमा सन्तुलन नहुनु,

(ग) जनसंख्या र पशुधनको चाप जंगलमा पर्दा, इन्धनको विकल्प नहुदा पर्यावरण (वातावरण) बिग्रनाले वन नाश, बाढीपहिरो बढी भई प्राकृतिक सन्तुलन बिग्रदा त्यसको असर जनजीवनका सबै क्षेत्रमा पर्नु,

(घ) यातायातको असुविधा, स्वच्छ पिउने पानीको अभावले गर्दा र दिसापिसाब ठिक ठाउँमा नगर्ने बानीले त्यसबाट पैदा हुने किटाणुबाट अनेक रोग फैलिन्छ भन्ने चेतनाको अभाव,

(ङ) कृषि पेशामा सुधार गरी बढी उत्पादन गर्ने तर्फ सकारात्मक प्रयास नहुनु तर त्यो पेशालाई हेला गर्ने बानी हुंदा पढेलेखेका व्यक्तिहरू कृषि पेशामा काम आकर्षित भै शहर तर्फ सानो तिनो काममा बसाई सर्ने प्रवृतिको विकास हुनु,

(च) स्थानीय स्तरमा कार्यरत कर्मचारी, अध्यापक र समाजसेवीद्वारा उनीहरूको मर्यादा उचाल्ने काम नहुनु. र

(ज) स्थानीय स्तरमा रोजगारीका अवसरको विकास हुन नसक्ने।

माथि उल्लेखित भएका सबै विषय राजरीतिक निर्णय र आर्थिक विकास प्रक्रयासंग सम्बन्धित रहेको छ। गत वर्ष नेपाल भारत व्यापार र पारवहन सम्झौता हुन नसक्दा जनताले भोग्न परेका कठिनाई यस्तै विषयमा आधारित थिए।

विकासका बारेमा कुरा गर्दा मलाई संयुक्त राज्य अमेरिकाको सम्झना आउंछ। काम जस्ले जे गरेपनि हुन्छ, काम गरेबापत घृणा गर्न हुदैन भन्ने भावना त्यहाँ छ। शिक्षामा, शीपमा र ज्ञानमा प्रतिस्पर्धा छ। त्यसैले योग्य व्यक्तिले योग्य स्थान पाउँछ र राम्रो काम गरेर आफ्नो क्षेत्रमा सफलता पाउँछ। यिनै कारणले गर्दा त्यहाँ हरेक क्षेत्रमा राम्रो उन्नति हुन सकेको छ। माष्टरको काम आफ्ना छात्रहरूलाई असल शिक्षा दिने हो, कृषि विशेषज्ञको काम किसानहरूलाई बढी उत्पादन गराउन सहयोग गर्ने हो, भन्ने भावनाको त्यहाँ विकास भएको छ। विकास तिनै मानव मस्तिष्कका नयाँ उपजबाट तीव्र रूपले वृद्धि हुन सकेको हो।

जर्मनी र जापानले विश्वयुद्धमा भोग्न परेका कठिन अवस्थालाई संझेर, ठूलो दृढ लिएर गरेको भौतिक र मानसिक प्रगति संसारमा उदाहरण बनेकाछन्। त्यहाँका जनताले गरेका वैज्ञानिक साथै प्रविधि विकासका काम आज संसारभर प्रभावित भएका छन्। आखिरमा मानिसकै विकसित र खारिएको मस्तिष्कबाट नै विज्ञानको जग बस्ने यथार्थता बुझिएकोले स्वतन्त्र मस्तिष्क विकासका लागि प्रजातन्त्र नै आवश्यक पूर्वाधार हो भन्ने कुरामा आज दुई मत कसैको नरहेको पाइन्छ।

चीन जस्तो धेरै जनसंख्या भएको मुलुकले आवश्यक आधारभूत माग पुरा गर्न कठिन राजनीतिक नियन्त्रणद्वारा अफिमको प्रभावमा परेका जनतालाई विकास र उत्पादनका क्षेत्रमा लगाउन निकै प्रयास गरेको देखिन्छ। तर आर्थिक विकासमा तिव्रता नआउँदा र जनताका आकांक्षा वृद्धि हुँदा गत वर्ष तेनमेन स्क्वायरमा भएको नरसंहार र त्यहाँको आर्थिक विकासमा जापान, अमेरिका, सिगापुर, कोरिया जस्ता मुलुकहरूका ठूला ठूला कम्पनीले चीनमा संयुक्त लगानी गर्न थालेकाले माओको नियन्त्रित राजनीतिक र आर्थिक प्रणाली तथा साँस्कृतिक क्रान्ति धारासाही भएको छ। त्यस्तै पूर्वी यूरोप र सोभियत रूसको आर्थिक र राजनीतिक पद्धति जनताका माग पुरा गर्न असक्षम रहेकाले पूर्नविचार र नवीकरण तथा सुधारमा संघर्षरत रहेको देखिएको छ। यसरी जनताले आ-आफ्ना स्वतन्त्र इच्छा र चाहना अनुरूप गरेको कामलाई सफलता मिल्ने कुरा निर्विवाद रहेको देखिन्छ र नियन्त्रित कुरा सफल हुन सकेको देखिदैन। नेपालको पञ्चायत व्यवस्था पनि यस्तै एउटा ज्वलन्त उदाहरण बनेको छ।

यसरी विवेचना गर्ने क्रममा हामीले विश्व, राष्ट्र र जिल्ला सम्मलाई लिन सक्दछौं। म मेरो जन्मथलोका रूपमा रहेको गोरखा जिल्लाको विकास किन हुन सकेन र अब के गर्नु पर्छ भन्ने बारेमा पनि विवेचना गर्न खोज्दछु। नेपाल राष्ट्रको एकीकरणमा महत्वपूर्ण योगदान दिने जिल्ला हो गोरखा। यो विभिन्न जनजाती र भौगोलिक विभिन्नतामा बाँडिएको जिल्ला हो। यहाँका परम्परागत सामाजिक प्रचलनले नेपालको राष्ट्रिय प्रचलनलाई फैलाएकाछन्। यस जिल्लाको भौगोलिक बनावट उत्तरमा अन्तर्राष्ट्रिय सीमाना चीनसंग छ भने पूर्वमा धादिङ्ग, पश्चिममा लमजुङ्ग र तनहुं, दक्षिणमा चितवन र तनहुँ पर्दछन्। नदीहरूता बुढीगण्डकी दरौदी, त्रिशूली, चेपे र मर्स्याङ्दी यसै जिल्ला



छोएर र भएर बग्दछन्। यस जिल्लाका अग्ला हिमशिखरहरू गणेश हिमाल ७१११ फीट, मनासूल ८१६९ फीट, लापून्यून हिमाल ५९६० फीट, छाबुन र द्विजेन क्रमशः ५९९६ र ५५२१ फीट, साम्दो हिमाल ६९९५ फीट जस्ता अनेकौं हिमशिखर यस जिल्लामा रहेका छन्। त्यस्तै लार्के भञ्ज्याङ्ग तिब्बत जाने महत्वपूर्ण बाटो हो भने अनेकौं कस्ता ग्वाला, लाजिङ्ग, मपूल, ल्याजुङ पर्दछन्। पूर्वी भागमा भने थाप्ले, मेलाटेसाचीङ्ग र लार्दे विशेष चालु मानिन्छन्। यस भागमा बूढीगण्डकी, स्यारखोला, सान्दुनदी र लार्के सोताङ किनारका बसोबास थोरै जनसंख्याले ढाकेको भए पनि रमणीय तर अति कठिन क्षेत्र मानिन्छ। पर्यटन आकर्षण गराउने यहाँ प्रशस्त ठाउँ छन्। यहाँको जीवन पशुपालन, तिब्बतसँग केही व्यापार र आलु वा फापर जस्ता खेतीबाट चलेको छ।

उत्तर पश्चिमी भागमा पर्ने बार्पाक, लाप्राक, ध्याचोक जस्ता ठाउँका घना गुरूङ वस्ती यहाँको निकै आकर्षण केन्द्र मानिन्छ। यहीका युवकहरू विश्वप्रख्यात बृटिश पल्टनमा काम गरेर भिक्टोरिया क्रससम्म पाउन सफल हुन सकेका छन्।

यसरी गोरखा जिल्लालाई हेर्दा विभिन्न जनजाति र सामाजिक विभिन्नता पाइन्छ भने अग्ला हिम शिखर देखि पहाडी र टारका मैदानी वस्तीमा फैलिएको जनजीवन अर्को महत्वपूर्ण पक्ष ठानिन्छ।

यो जिल्लाको विकासको कुरा गर्दा बत्तीमुनि अँध्यारो जस्तो लाग्छ। हुन पनि विशाल मर्स्याङ्दी विद्युत योजना यसै जिल्लाको सिमानामा रहेको नदीबाट उत्पादन भए पनि यहाँको सदरमुकाम बाहेक अन्यत्र पुगेको छैन। यहाँको बाटोमा सदरमुकाम जोड्ने एक सडक बाहेक अरू केही छैन। यहाँ बनेका खानेपानी आयोजनाका कति ठाउँमा आयोजना सके पनि पानी जनताले पिउन पाएका छैनन्। कतिपय सिचाई आयोजना सकिए पनि सिचाईलाई जनताले पानी पाएका छैनन् र त्यस्तै घोडेटा बाटामा भएको ठूलो लगानीको प्रगति नगण्य रहेको छ। झोलुंगे पूल बनेका ठाउँमा कतै पूल बटारिएका छन् र फलेक खसेका छन् भने कयौं ठाउँमा पूलका आवश्यकता पूरा हुन सकेको छैन। खाद्यान्न उत्पादनमा आधुनिकता यहाँ छैन। राष्ट्रले गरेका थोरै लगानीको फल पनि जनताले पाउन सकेको छैन। यहाँ विशाल टारहरू सुख्खा रहेका छन्, तर किनारबाट बहने नदीको पानी सिचाई र विद्युतमा आउन सकेको छैन।

विगतका अनुभव हेर्दा आर. सी. यु. पी. आयोजनालाई अमेरिकाको सहयोग थियो। यो सफल हुन सकेन। कारणमा त्यहाँको राजनीतिक नेतृत्वले साधन ठीकसँग खर्च गर्न नदिनु, जनताको संलग्नता नरहनु र विदेशी विशेषज्ञको मात्र प्रभाव बढी हुनुले गर्दा केही ठूलाबडाले मात्र फाइदा उठाउन सकेको व्यापक गुनासो रहेको छ।

अब भविष्यमा गोरखाको विकास कसरी गर्ने त? यो प्रश्न सबै गोरखा निवासीको लागि हो। त्यहाँको चेतनशील समाज जो पढेलेखेका र जानेबुझेकाहरूले जनतालाई सचेत गराउन पऱ्यो, जनहितका काममा सक्रियता ल्याउन पऱ्यो र साधनलाई ठीक तरीकाले ठीक ठाउँमा प्रयोग गराएर उत्पादन वृद्धिबाट किसानलाई लाभ र रोजगारी उपलब्ध गराउने काम गर्नु पर्ने हुन्छ। विकासमा प्रत्यक्ष रूपमा जनता नै संलग्न हुनुपर्छ। स्कूलमा पढाउने मास्टरहरू, गाउँका राजनीतिक कार्यकर्ताहरू, जिल्लाका चेतनशील र सामाजिक सेवामा समर्पित व्यक्तिहरू, जिल्लासँग सम्बद्ध कर्मचारीहरू सबैको प्रयास सामूहिक रूपमा व्यक्तिगत स्वार्थभन्दा माथि उठेर विकासको काममा चाख देखाएर दिन दिन सक्नु पर्दछ।

हाल जर्मन सरकारको सहयोगमा "गोरखा जिल्ला विकास आयोजना" कार्यान्वयन हुने क्रममा छ। त्यस्तै उत्तरी भेगमा केयर नेपालको सहयोग हुने भएको छ। यी दुवै आयोजनालाई जनताको सक्रिय सहयोग बिना जनहितमा ल्याउन सकिदैन।

यसरी सरसर्ती हेर्दा गोरखाको परम्परागत आर्थिक विकासलाई आधुनिकीकरण गरी उत्पादन वृद्धि गर्ने,

सडक निर्माणबाट आवागमन वृद्धि गरी आर्थिक लाभ दिने, पर्यटन विकासका लागि उपयुक्त क्षेत्र पत्ता लगाई कामका अवसर वृद्धि गर्ने, परम्परागत सीपलाई विकास गराएर जनतामा सक्रियता ल्याउन जस्तैं राडी, पाखी, गलैंचा, घरबुना बनाउने, काममा सहयोग गर्ने, महिला बालकको स्वास्थ्य, सीप र आम्दानी विकासका काम गर्ने परिवार नियोजन कार्यक्रमलाई सक्रियताका साथ स्वीकारी जनसंख्या नियन्त्रण गराउने, गुणस्तरीय शिक्षा र सुलभ स्वास्थ्य व्यवस्था गर्ने कुराका अतिरिक्त पिउनका लागि स्वच्छ पानी सबैले पाउने र चर्पी बनाएर सबैले दिशा गरेमा रोगबाट बच्न सकिन्छ भन्ने ज्ञानको विकास गराउने खाँचो आजको विकासमा देखा परेको छ। बिग्रँदै गएको वातावरण, वन विनाश र इन्धनको अभावलाई कसरी सुधार्ने भन्ने विषयमा सानातिना खोलाबाट विद्युत निकाल्ने, सौर्यशक्तिको माध्यमबाट इन्धन प्राप्त गर्ने, गोबरग्यासको विकास गराउने, फलफूल खेती, जडिबुटी खेती, उन्नत पशुपालनका आधुनिक तौरतरिका विकास गराउने जस्ता कुरामा हाम्रो भविष्यको विकास निर्देशित हुनु पर्ने देखिन्छ।

विकास जनतालाई फाइदा हुने, स्वच्छ र स्वतन्त्र आश्वासन र नेतृत्व प्रदान गर्ने राजनीतिक शक्तिले नै बाटो देखाउने विषय भएकाले जनतालाई बढी जागरूक बनाइनुमा नै विकासको सफलता निर्भर गर्दछ। हालको बदलिंदो राजनीतिक परिवर्तन पछि गरिबलाई माथि उठाउने प्रयास राजनीतिक पक्षले गर्नु पर्दछ। स्वतन्त्रता प्रजातन्त्र र समाजवाद आजको नेपालका व्यवहारिक मर्यादा हुन सक्ने आशा सबैले लिएका छन्। प्रजातन्त्रको अभ्यास शान्तिपूर्ण तरिकाले भएको कुरा सुन्ने र आफ्नो कुरा भन्ने अनि जनतालाई नै निर्णय गर्न दिने प्रक्रियाबाट नै गर्न सकिन्छ। र विकास पनि यसैका आधारमा स्वच्छ किसिमले हुन सक्दछ भन्ने कुरा सबैले बुझ्नु पर्दछ। आजको हाम्रो दयनीय आर्थिक अवस्थालाई मध्यनजर राख्दा हाम्रो सन्दर्भमा समाजवादी कार्य व्यवस्था र प्रजातान्त्रिक राज्य व्यवस्था अङ्गाल्ने तथा राजनीति र आर्थिक दुवै पक्षमा समानता हुनुपर्ने युगको मागलाई अङ्गीकार गर्ने नेपालको राजनैतिक क्षेत्रमा अग्रणी भूमिका निर्वाह गर्दै आएको नेपाली कांग्रेस नै मौलिको हाम्रो एकमात्र सही बाटो हो भन्न सकिन्छ।





# गाउँको विकास – आजको आवश्यकता

– प्रेम शंकर श्रेष्ठ

ग्रामीण जन-जीवन स्तर उठाउनु ग्रामीण युवाहरूलाई रोजगार प्रदान गर्ने तथा एक स्वावलम्बन ग्रामीण अर्थ व्यवस्था कायम गर्नु निश्चय पनि एक चुनौतिपूर्ण कार्य हो।

जबसम्म गाउँले युवाशक्तिलाई गाउँ क्षेत्रमा नै कार्यरत गराउँन सकिदैंन तबसम्म आदर्श समाजको परिकल्पना निरर्थक हुनेछ। आज हाम्रा गाउँ किन उराठ भैरहेका छन्। काम र मामको खोजीमा हजारौं युवाशक्ति किन विदेशिन पुगेको छ? निश्चय पनि हाम्रो ग्रामीण क्षेत्रमा नै उचित रोजगारको सृजना गर्न सकेको हो भए देश विदेशमा युवाहरू भौतारिंदै हिंड्नु पर्ने अवस्था सिर्जना हुने थिएन। उपयुक्त राष्ट्रिय नीति नहुनाले यो अवस्था आएको हो भनेर निर्भीकता र निश्चयका साथ भन्न सकिन्छ।

विगत ३० वर्षसम्म लादिएको व्यवस्थाले सृजना गरेको यी दुष्परिणामहरूलाई हठात् हटाउन पनि सकिदैंन। यस व्यवस्थाले हरेक क्षेत्रमा गलत नीति अंगीकार गरेको फलस्वरूप नै आज हाम्रो ग्रामीण व्यवस्था यसरी तहसनहस हुन पुगेको हो भन्न करै पाल्दछ।

हामी कहाँ सामन्ती संस्कार अझै घटेको छैन। झन् झन् बढिरहेको छ। हाम्रो शिक्षा नीति यति अस्पष्ट र गलत छ कि पढेलेखेको व्यक्तिले काम गर्न नहुने भन्ने गलत संस्कारको विकास भैरहेको छ। भैंनभई ऋण काढी, खेतबारी, बेची छोरालाई शहर बजारमा लगि पढायो लेखायो छोरा तथाकथित शिक्षित भएपछि परम्परादेखि गर्दै आएको पेशा अब उसले गर्न नहुने र यसरी पढे लेखेका व्यक्तिले स्वतन्त्र पेशा (उद्योग धन्दा) नगरी जागीर खाने प्रवृतिको विकास भएकोले यस्ता शिक्षितहरू रोजगारी (जागीर) को लागि शहर तिरै मुख ताक्ने प्रवृत्तिको विकास हुनु पनि विगत ३० वर्षे निरंकुश व्यवस्थाको देन हो भन्नु पर्ने हुन्छ।

यसरी हाम्रो समाजमा श्रमप्रति घृणा हुने प्रवृतिको विकास भैरहेको छ भने दिनभर काम गरी पसिना बगाउने वर्गलाई अपहेलित गर्ने संस्कारको विकास भैरहेको छ। उता काम चोर गफास्टकहरूलाई आदर तथा सम्मान गरिन्छ। विकसित देशहरू आजको उच्च स्थानमा पुग्न सक्नुका निश्चय पनि ती देशहरूमा श्रमप्रति सम्मानको कारणले नै भएको हो। हाम्रो समाजमा एक पटक फर्केर हेरौं हामीलाई आवश्यक पर्ने कुरो, कोदालो, लुगा–फाटो, जुत्ता बनाउने कामी, दमाई, सार्की वर्गलाई यो समाजले कसरी अपहेलित गरेर दबाएर राखेको छ। यो गलत प्रकारको सामन्ती संस्कारलाई जरैदेखि पर्याक्न नसकुन्जेल हामी विकासको सही मार्गमा जान सक्दैनौं।

हामी १०० मा ९० जना गाउँमा नै बसोबास गर्दछौं। आजसम्म हाम्रो मुख्य पेशा बाबुबाजेले गर्दै आएका खेतीपातीमा नै हामी निर्भर हुँदै आएका छौं। न त यहाँ कुनै उन्नत प्रविधिको प्रवेश भएको छ। न त आधुनिक उद्योग धन्दाको नै विकास भएको छ। बढ्दो जनसंख्याको भार यो परम्परागत पेशाले अब थाम्न सक्दैन। गाउँघरको स्थिति अत्यन्त कहालि लाग्दो भएको छ। दैनिक जीवनमा आवश्यक पर्ने दाउरा, स्याउँला घाँस–पात काटिंदै जानाले बनजंगल सखाप हुँदै छ भने यसको गम्भिर परिणाम भूक्षय, बाढी–पहिरोको प्रकोप बढिरहेको छ। आधुनिक यातायात, सञ्चार, विद्युतसेवा, स्वास्थ्य जस्ता आजको न्यूनतम आवश्यक सेवा प्राप्त गर्नु पनि अधिकांश गाउँको लागि टाढाको कल्पना भएको छ। ३० वर्षसम्मको एकदलीय पञ्चायती व्यवस्थाले उक्त अवधिमा रू. ८२ अरब विकासको नाउँमा खर्च गरेको देखाएता पनि वास्तविक रूपमा गाउंको विकास भएको

छैन, बरु त्यसबाट केही सीमित प्रभावशाली वर्गले फाइदा उठाएको छ र यस अवधिमा केही नव धनाढ्य अरबपतिहरूको जन्म भएको छ । व्यवस्था भित्रका केही प्रभावशाली व्यक्तिले देश विदेशबाट प्राप्त वैदेशिक ऋण, अनुदान आदिमा कमिशनतन्त्र, तस्करी, भ्रष्टाचार जस्ता महाजाल फिजाई आफ्नो स्वार्थको लागि दुरूपयोग गरी राष्ट्रिय ढुकुटीको अन्धाधुन्ध लुट मच्चाए । ६ रूपैंया डेरा गरी बस्ने व्यक्ति आज यही व्यवस्थामा कमिशनतन्त्रको जालबाट अरबपति बन्न सकेका छन् ।

अब मुलुकलाई आत्म निर्भर बनाई विकास-पथमा लैजान उद्योग धन्दाको विकास नगरी सम्भव छैन । तर, कस्ता खाले उद्योग धन्दाको विकास गर्ने ? कुन मोडेलको प्रविधि लगाउने यो पनि विचारणीय छ । हाम्रो देशको भू:बनोट, आकार, प्रकार अवस्थिति तथा बजारको सीमितता तर्फ विचार गर्दा यहाँ पूँजीवादी ढाँचाका ठूला उद्योगको विकास गर्नु वाञ्छनीय छैन भने यस्ता उद्योगको विकासबाट केही सीमित वर्गको हातमा आर्थिक शक्ति केन्द्रित हुनजानाले शोषणको सम्भावना कायमै रहन्छ । उता साम्यवादी व्यवस्थामा राज्यद्वारा नियन्त्रित श्रोत र साधन परिचालन गरी ठूला कल–कारखाना चलाउदा पनि नोकरशाहीको विकास भै काम गर्ने प्रेरणा र जाँगर मर्न गै उत्पादन ह्रास हुने प्रकृतिको विकास हुन्छ । अत: ग्रामीण क्षेत्रको विकास गर्ने प्रजातान्त्रिक समाजवादमा आधारित कार्यक्रम नै उपयुक्त हुन्छ । आज प्रजातान्त्रिक समाजवाद एक विश्वव्यापी सिद्धान्तको रूपमा विकास भैरहेको छ । पूर्वी यूरोपका साम्यवादी मुलुकहरू प्रजातन्त्र बिना विकास हुन नसक्ने कुरामा एकमत छन् । पोलैण्डबाट सुरू भएको १९८८ देखको साम्यवादी विरूद्ध आन्दोलन एकपछि अर्को गरी साम्यवादी व्यवस्थाको सट्टा बहुदलीय व्यवस्थामा आधारित प्रजातन्त्रको स्थापना भैरहेको छ । साम्यवादको केन्द्र सोभियत रूस आज साम्यवादी प्रणाली समाप्त गरी बहुदलीय व्यवस्था तिर उन्मुख हुँदैछ । साम्यवादको केन्द्रीकृत योजना परित्याग गरी खुला बजार व्यवस्थामा आधारित आर्थिक कार्यक्रम लागू हुँदैछ ।

यस सन्दर्भमा जननायक श्री बी. पी. कोइरालाको महान विचार छ – "समाजवादको मियोमा बाँधिएनन् भने यी तेस्रो विश्वका देशहरू या त फासिष्ट सैनिक तानाशाहीतिर जान्छन् या कम्युनिष्ट तानाशाही या कुनै सुधार विरोधी प्रतिक्रियावादी धार्मिक भौतिकवादी तानाशाही तिर"

आज नेपाली कांग्रेसले श्री बी. पी. कोइरालाका प्रजातान्त्रिक समाजवाद सम्बन्धी विचारलाई समष्टि रूपमा बी. पी. वादका संज्ञा दिएको छ । नेपाली कांग्रेसले २०१२ सालमा वीरगञ्ज अधिवेशनमा यस कार्यक्रमलाई आफ्नो नीतिगत रूपमा समावेश गरेको हो । "हामीले समाजवादी व्यवस्था मात्र नेपालको बाटो हुन सक्दछ भनी आफ्नो पक्ष बनाएका छौं । समाजवादी व्यवस्थामा प्रजातन्त्रात्मक साधन र उपायबाट प्राप्त गर्ने संकल्प गरेका छौं । समाजवादी शिखरमा पुग्ने प्रतिवद्धताबाट कहिल्यै मोडिने र फर्किने काम हुने छैन ।"

तानाशाही साम्यवादी व्यवस्थामा जहाँ प्रजातन्त्र हुँदैन । मानिसलाई जड प्राकृतिक श्रोत जस्तै परिचालन गर्न सकिन्छ भन्ने भ्रमात्मक धाराणामा आधारित विरोधीको अस्तित्वलाई स्वीकार गर्न नसक्ने सर्वहारावर्गको तानाशाही वर्गको नाउँमा मुट्ठिभर कम्युनिष्टहरू सेना तथा पुलिसको आडमा विशाल जनसमुदाय उपर तानाशाही चलाउँछन् । यस व्यवस्थामा काम गर्ने जाँगर र र प्रेरणाको अभावमा एकातिर उत्पादनमा ह्रास भै जनजीवन अत्यन्त दयनीय हुन्छ भने अर्कोतिर नागरिक जीवनको प्रत्येक क्षेत्रमा सरकारले हस्तक्षेप गर्ने हुँदा व्यक्ति आफ्नो पेशा रोज्न र शैक्षिक मार्गसम्म रोज्न समेत स्वतन्त्र हुँदैन । हरेक पक्षबाट साम्यवादले सर्वसत्तावादको रूप लिएको हुन्छ ।

अत: नेपालको विकास परिप्रेक्ष्यमा पूँजीवाद र साम्यवादको बीचको मध्यममार्ग न त उग्र दक्षिणपन्थी



न त उग्र वामपन्थी रूप भएको: नेपाली कांग्रेसको प्रजातान्त्रिक समाजवादी कार्यक्रम नै उपयुक्त रहेको छ । यो देश, काल, परिस्थिति अनुसारको यथार्थवादी कार्यक्रम हो । देशको आर्थिक नीति सम्बन्धमा श्री बी. पी. कोइराला भन्नुहुन्छ – "म एउटा निम्न मध्यम वर्गीय आर्थिक स्तरको मानिस हुँ, मेरो धारणा १५ वर्ष भित्रमा नेपालको प्रत्येक परिवारलाई मेरो जत्तिको आर्थिक अवस्थामा ल्याउन सकिएला । म जस्तै एउटा मध्यम वर्गीय परिवार जस्तै सम्पन्न सबैलाई बनाउन सकिन्छ जसलाई खान लाउन पुगोस्, सफाघर होस्, १-२ गाई भैंसी पनि होउन् । आफ्नो छोराछोरी पढाउने सामर्थ्य सबैको होस् । बिरामीपरे औखतीमूलो गर्न सकून् ।"

यस्तो कार्यक्रम लिएर ९० प्रतिशत गाउँको विकास गर्ने अठोट लिएर अघि बढिरहेको जनताद्वारा निर्वाचित नेपाली कांग्रेसको सरकारलाई आफ्नो कार्यक्रम लागु हुन नपाउदै (१८ महिना मै ) महत्वाकांक्षी निरंकुश शासकबाट हटाई आफूलाई सुहाउदो तानाशाही व्यवस्था नेपाली जन-जीवनमा लादेको ३० वर्ष वितिसक्दा पनि आज अधिकांश नेपालीको स्तर जुन अवस्थामा छ यसबाट ग्रामीण विकासको लागि उक्त कार्यक्रम उपयुक्त छ भन्ने पुष्टि हुन्छ ।

नेपालको विकास गर्नु भनेको गाउँको विकास गर्नु हो । अत: हाम्रो विकास नीति ९० प्रतिशत जनता बसोबास गर्ने गाउँको विकासलाई मध्य नजर राखी ग्रामीण मुखी हुनुपर्दछ । अब हाम्रो योजना गाउँ-गाउँका झुपडी र किसानलाई लक्षित गरी बनाउनु पर्दछ ।

भरखरै २०४६ सालमा जन आन्दोलनबाट ३० वर्ष निर्दलीय (एकदलीय) तानाशाही व्यवस्था समाप्त गरी बहुदलीय प्रजातन्त्रको सूत्रपात भएको वर्तमान सन्दर्भमा अब विगतका भूलहरू दोहोरिन नदिई राष्ट्रलाई एक उपयुक्त विकास पथमा लैजानु अपरिहार्य भएको छ। आज काम र मामको खोजमा गाउँबाट जतरी युवाशक्ति शहरभित्र तथा विदेशमा समेत आने होड चलेको छ यसलाई रोक्न उपयुक्त रोजगार नीतिको प्रादुर्भाव गरी एक शिक्षित व्यक्ति गाउँमा फर्किएर व्यवसाय चलाउदा हीन भावनाको साटो गौरवको अनुभूति हुने वातावरण तयार गराउनु पर्दछ । गाउँमा न्यूनतम रूपमा स्वास्थ्य, शुद्ध पानी स्तरीय शिक्षा, यातायात, सञ्चार, विद्युत सेवा जस्ता आधारभूत सेवामूलक कार्यको क्रमिक रूपमा व्यवस्थाबाट नै ग्रामीण जन जीवन वढी आकर्षण हुन सक्दछ ।

गाउँघरमा जहाँ जुन प्रकारको कच्चा पदार्थ प्राप्त हुन सक्दछ । सोही खाले उद्योग व्यवसाय सञ्चालन गरी ग्रामीण वेरोजगारी हटाई ग्राम, गाउँले जनताको क्रयशक्ति अभिवृद्धि हुन व्यवसाय सञ्चालन गर्नु गराउनु पर्दछ । यसको लागि उपयुक्त प्रविधिको विकास गरी सम्बन्धित व्यक्तिलाई तालीम दिने निकायको व्यवस्था गर्नु पर्दछ । भने व्यवसाय सञ्चालन गर्न आवश्यक पूँजी, बजार व्यवस्थापन सरल ढङ्गबाट एउटै निकाय मार्फत उपलब्ध गराउनु पर्दछ ।

घरेलु व्यवसाय नेपालको परम्परादेखिनै जातिगत आधारमा पेशागत रूपमा येनकेन प्रकारेण चल्दै आइरहेको छ । तत्कालीन ग्रामीण समाजमा आधुनिक सञ्चार तथा बाटा-घाटाको विकास नहुनाले बाह्य समाजसंग कम सम्पर्क हुनाले गाउँको आवश्यकता गाउँबाटै परिपूर्ति हुने एक सरल ग्रामीण स्वावलम्बी समाजको संरचना थियो ।

इतिहास हेर्दा लिच्छविकाल तथा मल्लकालमा नेपालको घरेलु उद्योग उन्नत अवस्थामा थियो । खासगरी काठमाडौं उपत्यकामा यसको विकास भएको थियो । त्यसबेला वनेका मठ–मन्दिर भवनहरूमा कुदिएका धातु तथा काष्ठ कलाका चित्रहरूबाट सो ज्ञान हुन्छ । त्यस्तै पहाडी इलाकामा बसोबास गर्ने मानिसहरू हातले कपडा बुन्ने, लुगा तयार गर्थे र नेपालबाट तिब्बतमा कपडा समेत निर्यात हुन्थ्यो । पहाडमा हातैले नेपाली कागज उत्पादन गर्ने उद्योगको पनि विकास भएको थियो । उद्योग धन्दाको विकास भै खान र लाउने समस्या समाधान भएपछि मानिसहरू कला संस्कृति तथा मनोविनोद पक्षमा संलग्न हुन्छन् । त्यतिबेला प्रचलित

विविध सांस्कृतिक जात्राहरू जुन अद्यावधि चलिरहेको छ यसबाट समेत तत्कालीन सुखमय समाजको चित्रण गर्न सकिन्छ।

नेपालको बाह्य सम्पर्क बढ्न थालेपछि यस देशको उद्योग व्यवसायमा क्रमिक रूपमा ह्रसोन्मुख प्रवृति शुरू हुन थाल्यो। खासगरी वि. सं. १९२१ मा घुम्दी, क्योत्से, यारिङ आदि उपत्यकाबाट भारतको सोझै तिब्बत तर्फ व्यापार हुन थालेपछि नेपाल हुँदै तिब्बत जाने व्यापार सुकर्दै गयो। वि. सं. १९८० मा नेपाल भारत सन्धी अनुसार भारतबाट पैठारी हुने वस्तुहरूमा नेपालीले पैठारी महशूल लगाएन र भारतीय वस्तुहरू सस्तो मूल्यमा यहाँ बिक्री वितरण हुन थाल्यो। नेपालको यो व्यापार नीतिले भारतीय पावर लुमबाट तयार भएका मलमल, दुपट्टा जस्ता उत्पादित वस्तुहरू उच्च गुणस्तरको साथै सस्तो मूल्यमा प्राप्त हुन थालेकोले मूल्यमा प्रतिस्पर्धा गर्न नसकी नेपाली घरेलु उद्योगहरू क्रमशः बन्द हुँदैगए।

२००७ सालमा प्रजातन्त्रको उदय भएपछि पनि आपसी राजनीतिक खिचातानीले गर्दा यस उद्योगको विकास तथा विस्तार हुन सकेन। नेपाली उपभोक्ताहरूले नयाँ–नयाँ भारतीय बस्तुहरू उपभोग गर्न थाले। नेपाली उद्योग भारतीय उत्पादनसंग टिक्न सकेनन्।

पञ्चायती कुशासन कालमा केही प्रभावशाली व्यक्तिहरूको आफ्नो राजनैतिक स्वार्थ पूर्ति गरी आफू सम्पन्न हुन तथा व्यवस्था टिकाउन देशमा तथाकथित केही उद्योग खोले। यिनको उद्देश्य इमान्दारी साथ देशमा उद्योग धन्दाको विकास गर्न नभई राता-रात करोडपति हुने खालका बियर, रक्सी, चुरोट, सिन्थेटिक कपडा, टि. भी. जस्ता देशका लागि हानिकारक अनावश्यक पेच किल्ला जडान गर्ने जस्ता उद्योगहरूको विकास गरे। फलतः देशको उद्योगको स्थिति आज अत्यन्त नाजुक स्थितिमा गुज्रेको छ। एकातिर देशमा उद्योग धन्दाको विकास गर्न भनी ढ्वाङ्ग पिट्ने त्यसको लागि व्यक्ति विशेषको उद्योगलाई सुविधा दिने खालको ऐन नियम तर्जुमा गर्ने परिपाटीले यौटा अनिश्चित वातावरण श्रृजना हुँदा देशमा आवश्यक उद्योग धन्दाको विकास हुन सकेन भने अर्कोतिर भएको पूँजी पनि खास उद्योगमा लगाउनु सट्टा राता-रात करोडपति हुने चोरी निकासी पैठारी जस्ता तश्कर व्यापारमा उपयोग हुन लाग्यो। भइरहेका कतिपय उद्योगहरू संरक्षणको अभाव-मा यात भन्दै भए या बन्द हुने स्थितिमा पुगेकाछन्। आज नेपाली शहर – बजारमा भरमार जुन किसिमको विलाशी उपभोग्य सरसामानहरूले भरिएको छ यसले निश्चय पनि पञ्चायत कालीन गाथा गाइरहेको भान हुन्छ। ३० वर्ष भनेको छोटो अवधि होइन। सन् १९६० तिर नेपालको आर्थिक स्थितिसंग मिल्दो जुल्दो दक्षिण कोरिया. ताइवान जस्ता देशहरू आज उन्नतिको शिखरमा पुग्दैछन् भने नेपाल दरिद्रतम राष्ट्रहरूमा तेश्रो स्थानमा झर्न बाध्य गरिएको छ।

नेपालको उद्योगको स्थिति प्रतिको तथ्याङ्कतिर हेरौं। नेपालमा उद्योग क्षेत्रले राष्ट्रिय आयमा करीब ४२९ करोड अर्थात् राष्ट्रिय उत्पादनको ६ प्रतिशत जति दिएको छ। स्वदेशी तथा विदेशी संलुक्त लगानीका ८६ उद्योग मध्ये ५२ उद्योग सञ्चालनमा कूल अधिकृत पूंजी ५ अरब लगनी भएको छ। हाल सम्म संगठित क्षेत्रका १०३० र घरेलु स्तरका २८०३० उद्योगमा कूल कर्जा २२२ करोड प्रवाहित भएको छ। घरेलु उद्योगको रूपमा संगठित क्षेत्रमा १३७,००० जनाले रोजगर पाएका छन्। उद्योगको कूल इकाईमा घरेलु उद्योगकोअंश ९१ प्रतिशत रहेको र उद्योगमा प्रति रोजगार उपलब्ध गराउन करिब रू ७००० लगानी गर्नु परेकोछ भने ठूला, उद्योगमा रू ९७००० यसरी बिगतकालमा उद्योग क्षेत्रमा गरेको लगानी बावजुद नगण्य रूपमा नेपालमा उद्योगको विकास भएको छ। घरेलु उद्योगको विकासको सम्बन्धमा यस अवधीमा विभिन्न निकाय स्थापना नभएको होइन। साना-किसान कार्यक्रम, सघन बैंकिङ कार्यक्रम तथा साना तथा घरेलु उद्योग कार्यक्रम तथा अगुवा बैंक कार्यक्रम सञ्चा-लन भएका छन्। पञ्चायत कालमा यी कार्यक्रमहरूबाट



के कस्ता व्यक्तिले बढी फाइदा उठाए यसबाट के कति उद्योगधन्दाको विकास हुन पुग्यो यो विचारणीय छ। कतिपय स्थान यस्ता कार्यक्रमबाट चुनावी हथकण्डाको रूपमा प्रयोग भए भने विभिन्न राजनैतिक दवावमा परि-योजनाको उपादेयता नहेरी बैंकहरूलाई कर्जा प्रवाह गर्न समेत बाध्य गराइए। विगतका दिनहरूमा अन्य संस्था गत विकास नगरी केवल कर्जा वितरण पक्षलाई बढी महत्व दिई गरीबीको रेखामुनिका जनताका आम्दानी वृद्धि गराउने पक्षको रूपमा यसलाई लिइयो। फलतः यस्ता कार्यक्रमबाट प्राप्त कर्जालाई पचाउन सकिन्छ भन्ने मनोवृद्धिको एकातिर विकास भयो भने अर्कोतिर बैंकबाट कर्जा उठाउन खोजिदा विभिन्न शक्तिशाली व्यक्तिहरूबाट विभिन्न दवाव पनि दिइयो। यसबाट यी कार्यक्रमहरू केवल देखावटी भएको प्रतीत हुन्छ।

९० प्रतिशत जनसंख्या बसोबास गर्ने ग्रामीण क्षेत्रको विकास गर्न कृषिमा लागेको अतिरिक्त श्रमलाई यस क्षेत्रबाट झिकी मझ्यौला खाले उद्योग व्यवसायमा लगाउनु नै एकमात्र कल्याणकारी मार्ग हो। यसको लागि राष्ट्रिय स्तरमा नीति निर्माण तथा संरक्षणको आवश्यकता पर्दछ। नेपालको वजार विदेशी विलाशिताका वस्तुहरूले खचाखच भरिएको छ माग होइन। गाउँ-घरमा सजिलैसँग उपलब्ध हुने वस्तुलाई समेत आयातीत सामानले विस्थापित गरिरहेको छ गाउँघरमा सजिलैसँग उपलब्ध हुने श्रोतको सिस्नु बाबियो तथा अन्य कतिपय सहराहरूबाट डोरी, नाम्लो, दाम्लो परम्परादेखि गाउँ-घरमा किसानले खेतिपातीबाट फुर्सद लिई साँझ बिहान घरमै बनाई आफ्नो दैनिक कार्य गाईवस्तु बाध्ने काममा उपयोग गर्दथे। ऐले यस उद्योगलाई पश्चिम जर्मनीदेखि दुर्लभ विदेशी मुद्रा खर्च गरेर झिकाइएका प्लास्टिकका डोरी तथा भारतबाट आयात भएका नरिवलका जराको डोरीले विस्थापित गरेको छ। एकातिर यस्ता बाबियो खेतकी जस्ता वस्तु बारी, वन-जंगलमा जताततै उपलब्ध हुने वस्तु प्रयोग नभै वन जंगलमै त्यसै कुहिएर गएका छ न् भने अर्कोतिर बहुमूल्य विदेशी मुद्रा खर्च गरी विदेशी मुद्राको भण्डार रित्तिदै जाने यस्ता कैयौं उदाहरण छन्।

गाउँघरतिर यस्ता कैयौं उद्योग धन्दाको विकास गर्न सकिने प्रशस्त गुञ्जायस छ। स्वदेशी कच्चा पदार्थ-लाई स्वदेशी श्रम लगाई आधुनिक प्रविधिको प्रयोग गरी निश्चित रूपमा ग्रामीण जन-जीवन बढी सुखमय बनाउन सकिन्छ। परम्परागत रूपमा अपनाई आएको पेशालाई आवश्यक पूंजी, उपयुक्त प्रविधि, दक्ष व्यवस्थापन मिलाई हुर्काउन, फलाउन, फुलाउन सकिन्छ। हाम्रो लेक तथा हिमाली खण्डमा राडी, पाखी, गलैंचा उद्योगको विकास गर्ने प्रशस्त संभावना छ। कार्पेट निर्यात गरी विदेशी मुद्रा आर्जन गर्ने प्रमुख श्रोत रहेको छ। तर यसलाई आवश्यक पर्ने कच्चा पदार्थ जुटाउन, अष्ट्रेलिया, न्यूज-लैण्ड, तिब्बतबाट झिकाउनु पर्दछ। त्यस्तै धागो भारतबाट रंगाउने रंग स्विजर्लैण्डबाट। यस्ता कच्चा पदार्थ झिका-उन प्रतिवर्ष ३ अरब रूपैया बराबरको विदेशी मुद्रा खर्च गरिन्छ। यसबाट कार्पेट निर्यात गरी आर्जित विदेशी मुद्राका अधिकांश अंश पुनः देश बाहिर गै राष्ट्रले थोरै मात्र फाइदा लिन सकेको छ। अब कार्पेटको विकास गर्ने हो भने कच्चा उन स्वदेशमै तयार गर्न हिमाली खण्डमा प्रशस्त भेडा च्याङ्ग्राको विकास किन नगर्ने। तर आज कृषि प्रधान देशको दृष्टिले यति लाजमर्दो छ कि देश बाहिरबाट भेडा च्याङ्ग्रा नल्याए नेपालीले दशैंसम्म मनाउन नसक्ने स्थिति छ, यस्ता उद्योगको गाउँघरमा विकास गर्न सकिन्छ तर यसको लागि सोही अनुरूप राष्ट्रिय नीति, योजनाको तर्जुमा र त्यसलाई इमान्दारी साथ लागू गर्ने कटिबद्धताको खाँचो छ।

हाम्रो लेकतिर डोको, डाली, थुम्सो, भकारी जस्ता गाउँघरलाई आवश्यक पर्ने वस्तुको उत्पादन हुन्थ्यो। लेकाली दाज्यूभाइहरू मध्यपहाडी क्षेत्रमा त्यस्ता वस्तु ल्याई अन्नपातसँग साट्थे भने केही नगदमा बिक्री बित-रण गरी एक अर्काको आवश्यकता परिपूर्ति गर्दथे। तर अब यस्ता वस्तुको स्थान विदेशबाट झिकाइएका प्लास्टिक का सरसामानले लिने गरेको छ, अब यस्तो परिप्रेक्ष्यमा स्वदेशी उद्योग धन्दाको कसरी विकास हुने? कछाड क्षेत्रका

मगर जाती तथा नेवारहरूले गाउँघरलाई चाहिने घरबुना तैयार गर्थे । दमै, कामी, सार्की जातीले प्रत्येक गाउँमा परम्परागत रूपको आफ्नो पेशा गर्दै आएकोमा अब यस्ता पेशाबाट उनीहरूलाई आफ्ना परम्परागत पेशाबाट गुजारा हुन नसक्ने भएकोले सो पेशा छाडी गुजाराको लागि देश विदेशमा भौतारिनु परिरहेको छ ।

यसैले नेपालको विकास भन्नु नै गाउँघरको विकास हो । ग्रामीण क्षेत्रको विकासको लागि कृषि क्षेत्रमा लागेको अतिरिक्त श्रमलाई सो क्षेत्रबाट झिकी मझ्यौला खाले उद्योग धन्दाको व्यवसाय सञ्चालन गरेर रोजगारी सिर्जना गरी अधिकांश ग्रामीणवासिको क्रय शक्ति बढ्ने नियम तथा वातावरणको सिर्जना गरिनु राष्ट्रिय आवश्यकता भैसकेको छ ।

प्रजातान्त्रिक समाजवादका आर्थिक प्रणाली अनुसार कृषि व्यवसायलाई बढी उन्नत तथा उत्पादकत्वमा वृद्धि गर्न भूमिको हदबन्दी अझ कम गर्न र एक परिवारले आफ्नो मेहनत गरेर जति कमाउन सक्छ त्यति मात्र उपलब्ध गराई भूमिको पुर्नवितरण व्यवस्था समेत गर्ने तर्फ उचित कदम चालिनु पर्दछ ।

सार्वजनिक क्षेत्रका उद्योगहरू तथा प्रतिस्पर्धा हुन नसक्ने ठूला ठूला आधारभूत उद्योगहरू मात्र सरकारी स्तरबाट सञ्चालन गरी अन्य साना तथा मझ्यौला उद्योगहरू निजी क्षेत्र मार्फत विकास हुन सक्ने वातावरण सिर्जना गर्ने तर्फ बढी जोड दिनु पर्दछ ।

सामूहिक भावनाको विकास गर्न कामदारहरूलाई उक्त उद्योग यो मेरो आफ्नै उद्योग हो भन्ने प्रेरणा जगाउन त्यस्ता उद्योग व्यवसायको मालिक पनि तिनै हुनेगरी सहकारी उद्योगहरू सञ्चालन गर्ने पूर्वाधारहरू तैयार गर्दै लानु पर्दछ ।

शिक्षा, स्वास्थ्य, शुद्ध खानेपानी जस्ता सामाजिक सेवाको विस्तार गर्दै जाने ।

यस प्रकार ग्रामीण विकास गर्न कार्यनीति प्रजातान्त्रिक समाजवादको बाटामा प्रारंभिक पाइलाहरू हुन । जनआन्दोलनबाट प्राप्त प्रजातान्त्रिक वातावरणको ग्रामीण विकास कार्यमा यौटा सहिमार्ग पहिल्याउने छ भन्ने आशा गर्न सकिन्छ ।

सन्दर्भ सामाग्रिहरू

१. प्रजातान्त्रिक समाजवाद एक अध्ययन – श्री रामचन्द्र पौडेल
२. नेपाली कांग्रेसको संक्षिप्त विश्लेषण – भूपति ढकाल "कमल"
३. आर्थिक संरक्षण २०४७
४. आर्थिक दस्तावेज २०४७
५. राष्ट्र बैंक विविध प्रकाशन
६. विभिन्न पत्रपत्रिका
७. जर्ज एनटामा – इकोनोमिक सिस्टम एकम्पारेटिव एनालिसस्
८. ए. सि. पिगु – सोसलिजम भर्सेज क्यापटलीज्म





# विश्व राजनीति-सरसरती हेर्दा

–डा. यज्ञ बहादुर कार्की
लिग लिग, गोरखा

विगत ४० वर्षमा विश्व राजनीतिमा ठूलो परिवर्तन आएको छ । सन् १९८० को दशक अन्त्य हुँदा रोमानियका स्टालिनवासी कम्युनिष्ट निरंकुश शासक निकोलाई चाउचेस्कु र उनकी पत्नी ऐलनाको नराम्रोसंग अन्त्य भयो । अचम्मको कुरा के छ भने साम्यवाद पलायन चाउचेस्कुको अन्त्य सिरिफ ८ दिनको विरोधले ल्यायो । जबकि कुनै पनि सत्तालाई पल्टाउन महिनौं तथा वर्षौं लाग्ने गर्थ्यो । ठीक २०० वर्ष अघि सन् १७८९ मा फ्रान्सिसी क्रान्ति (French Revolution) भयो– त्यति बेला निरंकुश राजतन्त्रलाई पल्टाउन जनतालाई साडे तीन वर्षको समय लागेको थियो । तर अहिले त्यति समयमा त जनताले चाहेमा संसारकै राजनीतिमा उथल पुथल ल्याउन सक्दछ । त्यो तथ्य गत वर्षको (सन् १९८९) (२०४६ साल) राजनैतिक घटनाहरूबाट स्पष्ट हुन्छ ।

सन् १९८९ मा साम्यवादको नराम्रोसंग अन्त्य भयो । पूर्वीजर्मनीको बर्लिनको पर्खाल भत्काइयो, रोमानियाका कम्युनिष्ट निरंकुश शासक चाउचेस्कुको नराम्रोसंग अन्त्य भयो, पोल्याण्डमा साम्यवादी सरकार माथि प्रजातन्त्रवादी, मजदुर नेता लेख वालेन्साको विजय भयो, सोभियत संघमा ७१ वर्षको लामो कम्युनिष्ट शासन पछि बहुदलीय चुनाव सम्पन्न भयो, अर्को ठूलो साम्यवादी राष्ट्र चीनमा स्वतन्त्रताको सास फेर्ने आशाले त्यहाँका विद्यार्थीहरूले सरकार विरूद्ध टिनामन स्क्वटरमा ठूलो प्रदर्शन गरे र यसै गरी पूर्वी यूरोपका अरू राष्ट्रहरू बुलगेरिया, हङ्गेरी, चेकस्लोभाकिया र दक्षिण अमेरिकाको निकारागुवामा कम्युनिष्ट शासनको अन्त्य भई प्रजातन्त्रको स्थापना भयो ।

यो क्रम सन् १९९० मा पनि जारी छ । मङ्गोलियामा प्रजातन्त्र, मानव अधिकार र खुला बजारको माग गर्दै त्यहाँका जनताले साम्यवादी सरकारको विरोधमा गत जनवरी र फेब्रुरीमा ठूलो प्रदर्शन गरे । सोभियत संघ भित्र प्रजातन्त्र र स्वतन्त्रताको लागि विभिन्न प्रान्तहरूले केन्द्रीय कम्युनिष्ट सरकारको विरूद्ध संघर्ष जारी गरिराखेका छन् । संसारको बदलिंदो राजनैतिक परिपाटीको प्रभाव हाम्रो देशमा पनि नपरेको होइन - यसै वर्ष सन् १९९० को शुरुदेखि प्रजातन्त्र प्रेमीहरूले बहुदलको पक्षमा देशका विभिन्न ठाउँमा जुलुस प्रदर्शन गरे, कतिले आफ्नो जिउज्यान पनि प्रजातन्त्रको नाममा आहुति दिए - धन्य हुन् ती देशभक्त ! अन्त्यमा सत्यको विजय भयो - निष्ठूर, अप्रजातान्त्रिक, एकतन्त्रीय पञ्चायत भनाउंदो शासन प्रणालीलाई बहुदलवादीहरूले जरै देखि उखेली छाडे ।

विश्व राजनीतिमा यति छोटो समयमा किन यति ठूलो परिवर्तन आयो यसलाई चिन्तन मनन् गर्नु अति चाखलाग्दो विषय भएको छ । हालको राजनैतिक परिवर्तन निम्न विषयमा आधारित छन् - प्रजातन्त्र मानव अधिकार र स्वतन्त्र बजार व्यवस्था ।

साम्यवाद (Communism) को पतन हुनाका विशेष कारणहरू छन् - साम्यवाद भन्नु नै एकतन्त्रीय शासन, मानव जातिको शोषण, आर्थिक तथा नागरिक अधिकारको हनन् र भ्रष्टचार हुन् । तसर्थ एकै वर्षको छोटो अवधिमा पोल्याण्ड, पूर्व जर्मनी, बुलगेरिया, हङ्गेरी, चेकस्लोभाकिया, रूमानिया र निकारागुवाका जनताले साम्यवादी सरकारलाई पल्टाई प्रजातन्त्रको स्थापना गर्नमा अभूतपूर्व रूपमा सफलता हासिल गरे ।

सोभियत संघ जस्तो संसारको सबभन्दा ठूलो र साम्यवादको अखडामानिने देशमा पनि कम्युनिजमबाट विकास गर्न नसकिने तथ्य प्रमाणीत भएपछि त्यहाँका नेताहरूले ग्लास्नोस्त र पेरेष्ट्रोयिका यानि सुधारवादी नीति अपनाए । कम्युनिष्ट षड्यन्त्र भनाउंदा सोभियत

सघ संसारका अन्य खुला तथा प्रतिस्पर्धात्मक अर्थतन्त्र भएका देशहरूको (जस्तो कि जापान, पश्चिम युरोप, उत्तर अमेरिका, अष्ट्रेलिया र दक्षिण पूर्व एशिया) तुलनामा आर्थिक र सामाजिक विकासमा धेरै पछाडि पऱ्यो। सोभियत अर्थतन्त्रले आफ्ना जनतालाई राहत - पुग्दो खाद्यन्न, सुविस्तायुक्त घर, चाहिदो स्वास्थ्य सेवा र सुरक्षात्मक वातावरण दिन सकेन साथै अर्थतन्त्र कमजोर भएको हुनाले सोभियत सिक्का रूबलको संसारमा कही मान्यता भएन। विचारा सोभियत जनता एक टुक्रा रोटीको लागि घण्टौं लाम लागेर बस्नु पर्छ। तर अब महान सुधारवादी र प्रजातन्त्र प्रेमी सोभियत नेता गोर्भाचोभको पेरेष्ट्रोयिका नीतिबाट आकर्षित भएर सोभियत संघमा पनि अरू विकसित देशका लगानी कर्ताहरूले ठूलो धन रासी लगानी गरेका छन्। सन् १९८८ को शुरुमा सोभियत संघमा स्थानीय र बाह्य लगानी कर्ताहरूको संयुक्त लगानी कम्पनीहरूको संख्या १० भन्दा कम थियो भने सन् १९८९ को बीच सम्ममा यस्ता संयुक्त लगानी संस्थाहरूको संख्या बढेर झण्डै १८० पुगेको पाइन्छ। यही प्रकृया नै प्रजातन्त्रको सफलताको ठूलो प्रतीक हो।

प्रजातन्त्रमा आफ्नो मनको कुरा पोख्ने आफूले खामेका व्यक्तिलाई नेता चुन्ने र सरकारको थिचो मिचो बाट बच्ने वातावरण हुन्छ - यसरी स्वतन्त्र रूपले मानव जातिले आफ्नो विकास गर्ने अवसर प्रशस्त पाउंदछ। तर प्रजातन्त्र भन्नाले हक र अधिकार मात्र बुझिदैन - यसले जिम्मेवारी पनि बुझाउंछ। सरकार र जनता दुबैले आफ्नो आफ्नो जिम्मेवारी ठिकसंग लिएनन् भने अमेरिका जस्तो प्रजातान्त्रिक देशमा पनि जनताको भलाइ र सुरक्षा हुन सक्दैन, राष्ट्रमा अन्योलको स्थिति पैदा हुन जान्छ।

प्रजातन्त्र त्यो बेलामा टिक्न सक्छ जब स्वतन्त्र जनता आफूलाई अनुशासनमा राख्छन्, अरूको अधिकारको कदर गर्छन् र समाजको विकासमा सक्दो सहयोग पुऱ्याउंछन्। प्रजातन्त्रमा सरकारले नै सबै काम गरिदियोस् भन्ने धारणा राख्न हुदैन। बरू जनता आफै विकास प्रकृयामा संलग्न हुन सक्नु पर्दछ। प्रजातन्त्र त्यो बेलामा फस्टाउँछ जब जनता अर्काको मुख ताक्न छोड्छ र समाजको विकास र भलाइको लागि आफ्नो तर्फबाट सकेको योगदान दिनमा उत्सुक हुन्छ। जनताले आफूले पाउने हिस्साको पनि उचित अड्कल काट्न सक्नु पर्दछ नकि यसो गर्दा अरूको भाग कम होस् या हरियोस्।

हाल नेपालमा प्रजातन्त्रको उदय भएको छ, अब हामीले पनि स्वतन्त्र, सुरक्षित र अवसर पूर्ण नेपाली समाजको स्थापना गर्न सफलता प्राप्त गरेका छौं। आफ्नो क्षमताले भ्याएसम्म प्रजातान्त्रिक मान्यता र मूल्यहरूको संरक्षण, विकास र सम्वर्धन गर्न पर्ने जिम्मेवारी अब प्रत्येक नेपालीको कांधमा परेको छ। यी आदर्शहरूलाई व्यवहारमा उतार्न पर्ने चुनौति हाम्रो सामु खडा छ। तर विकास भन्ने कुरा रातारात हुने होइन समय लाग्छ, धिरज लिन सक्ने बानी पनि बसाउन परेको छ। तैं पनि आजको प्राविधिक युगमा (age of technology) छोटो समयमा धेरै उपलब्धि पनि हुन सक्छ भन्ने कुरा बिर्सनु हुंदैन नत्र भने नेतृत्व दिनेले समयको बहनामा जनतालाई ठग्न, शोषण गर्न सक्ने छ। सनसनीपूर्ण नारा दिदैमा विकास हुने होइन, जे हामी भन्छौं त्यो पूरा गर्न सक्छौं कि सक्दैनौं त्यसको ख्याल गर्न सक्नु पर्दछ।

बहुदलको आगमन पश्चात् हामीले कुन राजनैतिक पार्टीलाई जिताए जनताको र समाजको भलो हुन्छ त्यो प्रत्येक नेपालीले विचार गर्न सक्नु पर्दछ। यसो नभएमा अप्रजातान्त्रिक प्रणाली फर्कन सक्ने छ। हामीले त त्यो दललाई जिताउन सक्नु पर्छ जसले जनताको सुरक्षा गर्छ, विकास प्रकृयालाई छोटो समयमा अघि बढाउंछ, मानव अधिकारको संरक्षण गर्छ, आर्थिक, बौद्धिक र सांस्कृतिक शोषण निर्मूल पार्छ र यसरी प्रजातान्त्रिक मान्यता र मूल्यहरूलाई संरक्षण गर्छ।

*

# विकास र आत्मनिर्भरताका लागि प्रजातान्त्रिक समाजवाद

– रामजी रेग्मी

मितव्ययिताको सिद्धान्तद्वारा आफूसंग भएको श्रम, साधन र श्रोतको समुचित सुपरिचालनबाट दैनिक आवश्यकताका वस्तुहरू एवं सेवाहरू आफ्नै घर आँगनमा आफैंद्वारा उत्पादन गर्दै जाने बानी बसाल्नु साथै अन्तर्राष्ट्रिय व्यापारको तुलनात्मक लागत सिद्धान्त (Comparative cost Theory of International Trade) का आधारमा अन्य मझौला तथा ठूला औद्योगिक उत्पादनका क्षेत्रहरू क्षेत्रीय संभाव्यताका आधारशीला पहिल्याई विद्यमान विदेशी निर्भरतालाई क्रमशः हटाउन आवश्यक पर्न जाने वस्तु एवं सेवाहरू स्वदेशमै उपलब्ध गराउन सक्ने वातावरण सृजना गर्नु खाना, छाना र नानाका दृष्टिकोणले नेपालको सन्दर्भमा पहिलो राष्ट्रिय आवश्यकता हिजो थियो र आज पनि छँदैछ। यस किसिमको आवश्यकताको परिपूर्ति गर्दै जनताको जीवनस्तरलाई क्रमशः माथि उठाउने खोक्रो आदर्श बोकी ३० वर्षसम्म पञ्चायती व्यवस्थाले तमाम नेपालीलाई स्वावलम्बन र आत्मनिर्भरताको बदला झन् गरिबी र परमुखापेक्षी बनाएको यथार्थता तपाई हामीले गाँस, बास र कपासका लागि कहिले लेक, कहिले बेसी, कहिले शहर त कहिले विदेशसम्म कुदी हिड्नु पर्ने अवस्थाले स्पष्ट पारेको छ। साँचो अर्थमा विगतका दिनहरूमा संचालन भएका तथाकथित योजना, आयोजना र परियोजनाहरू केवल खर्चका पोका मात्र रहेकाछन्। देश र जनताको विकासका लागि विभिन्न उद्देश्य र लक्ष्य राखी आजसम्म ७१७ वटा दीर्घकालीन विकास योजनाहरू संचालन भइसके। खोइ! तपाई हाम्रो गाउँघरमा, जिल्ला वा अथवा क्षेत्रमा कुनै उद्योग धन्दा सञ्चालित अवस्थामा छन्? तपाई हामीले कुनै उद्योगधन्दा सम्बन्धमा कुनै ज्ञान र सीप हासिल गर्न तथा रोजगारी पाउन सकेका छौं? ज्ञान र सीप नएकाले कुनै काम गर्ने प्रेरणा पाएका छन्? अझ उल्टो भएका साना तिना घरेलु उद्योगहरू जस्तैः नाम्लो, दाम्लो र डोरी बाट्ने, डालो, डोको, थुन्से, भकारी, र माद्रो साथ साथै राडी–पाखी, घरबुना बुन्ने, नेपाली कागज तयार गर्ने घर छाउने ढुङ्गा तयार गर्ने घरेलु व्यवसायहरू साथै पशुपालन तथा स्थान विशेष लगाइने फलफूल र अन्य नगदेवाली व्यवसायहरू र जातिगत आधारमा सञ्चालन भैरहेका तान, पानी, घट्ट, कपडा छाला सिलाई बुनाई सम्बन्धी व्यवसायहरूलाई सरकारले संरक्षण र प्रोत्साहन उपलब्ध नगराएकोले हामी एक दिनमात्र विदेशी सामान आउन ढिला भएमा चुलो नै नतात्ने अवस्थामा पुगिसकेका छौं। सरकारी हेलचक्र्याई र परावलम्बी दृष्टिकोणले आत्मनिर्भरता तर्फ अगाडि डोऱ्याउने कुटीर एवं घरेलु उद्योगधन्दाहरू आज हाम्रो समाजबाट सेलाउँदै गएका छन्। हामीसंग भएको यस किसिमको व्यवसाय गर्ने कार्यशीघ्र लोप हुँदै गएको छ। पाप न हामीसंग महंगो विदेशी सामान किन्न सक्ने क्षमता छ न आफ्नै घर आँगनमा हिजोसम्म तयार हुन सक्ने सामानहरू उत्पादन गर्न सक्छौं। पञ्चायती नाटक र नाटकका पात्रहरूले समष्टिगत रूपमा देश विकासको त कुरै छाडौं हाम्रो आत्मनिर्भरता हुने ज्ञान र सीपको समेत लोप गराएका छन्। उद्योगधन्दा तर्फबाट नभई शैक्षिक, स्वास्थ्य, सामाजिक, धार्मिक, वाणिज्य, व्यापार आदि हाम्रा तमाम क्रियाकलापहरू ज्यादै दयनीय स्तरमा संचालन भैरहेका छन्। यस किसिमको दयनीय अवस्था हामी गोरखावासीको मात्र होइन तमाम नेपालीहरू हाम्रो जस्तै जीवन निर्वाह स्तरभन्दा माथि छैनन्। जसरी हामी गोरखावासीको जन–जीवन निर्वाह निम्न स्तरमा गुज्रिएको छ त्यसैगरी ९५ प्रतिशत जनताले बसोबास गरेको नेपालको ग्रामीण जन–जीवन अशिक्षा, बेरोजगारी



र गरिबीले ग्रस्त अवस्थामा गुज्रिएको छ भने पञ्चायती नाटकका केही सूत्राधारहरूको अवस्थालाई छोडी अन्य शहरवासी र तराईवासीहरूको स्थिति पनि चर्को महंगी, अव्यवस्थित घनावस्तीबाट सृजित वातावरणीय प्रदूषण साथै बढ्दो बेरोजगारी र असामाजिक विसंगतिको भूमरीमा परेको छ।

भूपरिवेष्ठित पहाडी अधिराज्य नेपालको कूल राष्ट्रिय आयमा करिब ५८ प्रतिशत, निर्यात व्यापारमा ८० प्रतिशत र औद्योगिक कच्चा पदार्थ आपूर्तिमा करिब ८० प्रतिशत स्थान ओगट्ने कृषि क्षेत्र (साँचो अर्थमा हाम्रो अर्थतन्त्रको मेरुदण्ड) पर्याप्त सिंचाई, उन्नत मल बीज, आधुनिक कृषि औंजार, उचित मूल्य, बजार व्यवस्था र वास्तविक कृषकलाई उपलब्ध गराउनु पर्ने ऋण तथा अन्य सुविधाहरूको अभाव र अपर्याप्तताको कारण आज प्रतिवर्ष २.६ प्रतिशतका दरले वृद्धि हुने जनसंख्याको बोझ थाम्न नसक्ने अवस्था पुगिसकेको छ। बढ्दो जनसंख्याका लागि अन्य उद्योग तथा गैर कृषि क्षेत्रको विकास नहुनाले नयाँ आवादीका लागि हाम्रा वरिपरिमा सबै जसो वनजंगल मासिदै गएका छन्। चरन घाँस-पात, दाउरा, निर्माणका लागि आवश्यक काठको समस्या मात्र बढेको होइन कि वनजंगलको विनासबाट उत्पन्न अनावृष्टिले कहिले हामी खेती पाती नै लगाउन पाउदैनौ भने कहिले अनावृष्टिको मारमा परि भएको जग्गा जमिन बाढीपैह्रोले लगी सुकुम्वासीमा परिणत हुँदै गै रहेका पनि छौं। यस किसिमको अस्थिपन्जरको अवस्थामा पुगिसकेको देश र देशवासीको जीवनस्तर उकास्ने कार्यलाई हावामा महल खडा गर्न छिट्टै सकिने जस्ता नारा दिने र जनतालाई आफ्नो मौलिक हक, अधिकार र उत्पादन वृद्धिका लागि चाहिने प्रेरणाबाट वञ्चित गराई देश र देशवासीको विकास र समुन्नति भन्दा केवल पार्टीको अधिनायकवादलाई मात्र मध्यनजर राख्ने साम्यवादी व्यवस्थाबाट सम्भव नहुने कुरा आज एक पिस पाउरोटी खानाका लागि ४ घण्टा लाइन बस्नु पर्ने सोभियत संघको स्थिति तथा जनतालाई २०० मिटर गहिरो खानीमा झोकमोकै श्रम गराएर आफू बाथरूम देखि जमिन मुनिसम्म सुनको सुरूङ्ग बसाल्ने रूमानियाका साम्यवादी नेता चाउ चेस्कु र पूर्वी यूरोपमा साम्यवादी व्यवस्थाबाट वाक्क भै आएको बहुदलीय प्रजातान्त्रिक लहरबाट पनि हिजोदेखि भन्दै आएको "प्रजातान्त्रिक समाजवाद" नै नेपाल र नेपालीको विकास र आत्मनिर्भरताका लागि सही मार्ग हुन जाने स्पष्ट भै सकेको छ।

उत्पादन (कृषि तथा गैह्र कृषि वस्तु तथा सेवाहरू) बढाउने कार्यमा निजी क्षेत्र र जनतालाई पर्याप्त प्रेरणा प्रद वातावरण प्रदान गर्दै अधिकाधिक क्षेत्रहरूमा सरकारी संलग्नताद्वारा उत्पादनमा वृद्धि गर्ने र जग्गा जमिन तथा धन सम्पत्तिको अधिकतम हद बढी तोक्दै न्यून आम्दानी भएका तथा गरिब जनताको जीवनस्तर उठाउन लगानी गरिनु पर्ने क्षेत्रहरूमा लगानी बढाउदै गरीब र धनीको खाडल पुरी आर्थिक समानता कायम गर्ने आर्थिक लक्ष्य बोकेको र जनताको हक, हित र अधिकारको विपरीत कुनै पनि क्रयाकलाप गर्न खोज्ने वा गर्ने सरकारलाई हटाई पुनः आफैंद्वारा, आफ्नो लागि आफैंले सरकार गठन गर्न पाउने प्रजातान्त्रिक हक र अधिकार जनतामा नै निहित गराउने राजनैतिक लक्ष्य रहेको प्रजातान्त्रिक समाजवादी पार्टी नेपाली कांग्रेसनै गोरखा र गोरखावासीका लागि मात्र नभएर नेपाल र नेपाली कै लागि एकमात्र बाटो हो भन्न सकिन्छ।

तानाशाही पञ्चायती व्यवस्थाले धाराशाही बनाएको हाम्रो आर्थिक अवस्थालाई माथि उठाउन हामीलाई एकातर्फ समाजवादी आर्थिक कार्यक्रमको आवश्यकता स्पष्ट रूपले देखाएको छ भने जन्म सिद्ध स्वतन्त्र भै बाँच्ने हाम्रो मानव अधिकार र हकको संरक्षण गर्न हामीलाई प्रजातन्त्र नै चाहिएको छ। वास्तवमा अहिलेको जन-आन्दोलनको लक्ष्य पनि यही थियो र आन्दोलनमा शहीद हुनेहरूको सपना साकार पार्नका लागि पनि हामीले प्रजातान्त्रिक समाजवादी मार्ग नै अपनाउनु पर्ने यथार्थलाई भुल्नु हुन्न। अन्यथा शहीदको श्राप लाग्ने मात्र नभई

सस्तो नारा र समानताको ढ्वाङ्ग फुक्नेहरूले आज जसरी सोभियत संघ, रुमानिया, पोल्याण्ड, पूर्वी जर्मन (एकीकरण भै सकेको छ) हंगेरी आदि देशलाई विश्वमा अन्य देशहरूको तुलनामा पछाडि पारे उसै गरी हामीलाई हालको दयनीय अवस्थाबाट अझ तल झार्ने छन् ।

प्रजातान्त्रिक समाजवादी व्यवस्था आर्थिक समानता र प्रजातन्त्रका लागि विश्व भरनै एकमात्र पूर्ण व्यवस्थाका रूपमा परिचित हुंदै आएको छ । सन् १९३० पछि पूर्ण रूपेण असफल भएको पूंजीवादी सामन्त व्यवस्था र हालकै वर्षहरूमा विश्वबाट नै बहिष्कार हुंदै गएको साम्यवादी (कम्युनिष्ट) व्यवस्थाबाट भिन्न राष्ट्र, राष्ट्रियता, प्रजातन्त्र र समाजवाद जस्ता आदर्श अन्तरनिहित साथै जनतालाई नै राष्ट्रको सर्वशक्ति सम्पन्न मर्यादा प्रदान गर्ने प्रजातान्त्रिक समाजवादी राज्य व्यवस्थानं युगको माग हो । जननेता विश्वेश्वर प्रसाद कोइराला यस किसिमको राज्य व्यवस्थाका प्रखर विश्व व्याख्याताहरू मध्ये प्रमुखव्याख्याताका रूपमा विश्वमा नै चर्चित छन् । हाम्रो सन्दर्भमा विकास र आत्मनिर्भरताका लागि समाजवाद नै किन ? यस विषयमा बी. पी. कोइरालाले आवश्यकताको व्याख्यालाई यसरी औल्याउनु भएको छ समाजवाद जस्ले समानताको आन्दोलनलाई प्रेरणा दिन्छ । समानता भनेको राजनीतिक र आर्थिक समानता हो । राजनीतिक अर्थमा समाजवाद वा समानता भनेको प्रजातन्त्र हो जहाँ व्यक्तिगत स्वतन्त्रता, मौलिक अधिकार, चुनाव, पार्टी संगठनको अधिकार जस्ता प्रजातान्त्रिक अधिकारहरू अन्तरनिहित हुन्छन् भने आर्थिक समानता समाजवादको अर्को प्रबल पक्ष हो जहाँ सबै नागरिकहरू आर्थिक दृष्टिमा समान हुनुपर्छ । समाजवाद आर्थिक असमानताको घोर विरोधी छ । आर्थिक समानताको कुरा गर्दा खालि वितरण पक्षलाई मात्र अगाडि सार्ने होइन । देशमा उपलब्ध श्रोत, साधन शीपलाई अधिकाधिक मात्रमा सदुपयोग गरी कृषि, उद्योग धन्दा तथा कलकारखानाको विकास गर्दै उत्पादनमा अत्यधिक वृद्धि गर्न सक्यौं भने मात्र समान वितरणको समाजवादी नीति लागू गर्न सकिन्छ अन्यथा १ लिटर दूध १ करोड जनतालाई समान रूपले बांड्न खोज्दा उत्पन्न हुने समस्या पैदा हुन्छ । यसर्थ आर्थिक समस्याहरूको समाधान एउटै कार्य र एकैचोटिकै नियमले हुंदैन र यो एउटा लामो प्रकृया हो जुन प्रकृया परिचालन गर्दा उत्पादन र वितरण नीति मार्फत समाजको कल्याण मानी विशेष जोड दिइन्छ । "

अन्तमा पहाडी भूबनोट साथ साथै हिमश्रृखलाहरूको काखमा अवस्थित गोरखा जिल्लाको हिमाली, भेग तथा लेकाली, पहाडी र वेशी तथा टार प्रदेशहरूमा उपलब्ध प्राकृतिक श्रोत र सम्पदा (प्रमुख रूपमा देखिएको जलश्रोत र खानेपानी) साथै उपलब्ध जनशीप सदुपयोग हुने खालको पर्यटन, पशुपालन (भेडा, च्याङ्ग्रा चौरी, गाई, भैंसी) नगदेबाली (चिया, कफी, निगाला लहरा, बांस) विकास जडीबुटीका लागि वन संरक्षण, साना तिना कृषि, वन, पशुपालनमा आधारित घरेलु उद्योग धन्दाहरूको विकास साथ साथै ९७ प्रतिशत गोरखा वासीको प्रमुख पेशाका रूपमा रहेको कृषि क्षेत्रको समसामयिक विकासका लागि आवश्यक पूर्वाधारहरू सृजना गर्ने तर्फ पाइला चाल्नु गोरखा र गोरखा वासीहरूको विकास र आत्मनिर्भरताका लागि कुनै पनि अब आउने सरकारको पहिलो कार्य हुनु पर्ने देखिन्छ । यस किसिमको विकास प्रयास भएमा कृषि क्षेत्रमा लुकेर रहेको बेरोजगार साथसाथै अन्य बेरोजगारहरूले काम पाउने मात्र नभै कृषि क्षेत्रको उत्पादनले बजार समेत पाउने भै निर्वाह स्तरमा रहेको कृषि क्षेत्र व्यवसायमूलक हुन गै गोरखालीहरूको जीवनस्तर क्रमशः माथि उठ्ने प्रकृयाको थालनी हुन जाने छ । यस किसिमको विकासको खाँचोको आवाज उठाइनुका साथै कार्यान्वयन गराउन र विकासका नाममा भ्रष्टाचार गर्न नदिन तथा सरकारका लागि नभै जनताका लागि सरकार गठन गर्न पाउने प्रजातान्त्रिक हक र अधिकारका लागि एकमात्र राजनैतिक व्यवस्था प्रजातान्त्रिक समाजवादी राज्य व्यवस्थाको विकास र प्रवर्धनका लागि आज हामी गोरखाबासी आपसमा एकजुट हुनु पर्ने बेला छ ।

॥अस्तु॥



गोरखा जिल्ला

# पर्यटन विकासको संभाव्यता

–दीपक धिताल

नेपाल अधिराज्यभित्र पर्यटन विकासका प्रचूर संभाव्यताहरू विद्यमान छन् । विगत तीन दशकदेखि पर्यटन उद्योगले देशको अर्थतन्त्रमा निकै राम्रो भूमिका खेल्दै आएको मात्र होइन । विदेशी मुद्रा आर्जनको दृष्टिकोणबाट यो राष्ट्रको अग्रणी क्षेत्रका रूपमा स्थापित भइसकेको छ । सन् १९८९ मा यस क्षेत्रले मात्र रू. १ अरब ८३ करोड ६५ लाख २० हजार रूपैयाँ बराबरको विदेशी मुद्रा आर्जन गर्न सक्षम भएको थियो । यो आर्जनको परिमाण सन् १९८८ को भन्दा २६.७% बढी भएकोले यो क्षेत्र नेपाल–भारत बीचको व्यापार तथा पारवहनमा आएको गतिरोधले समेत खास अर्थमा प्रभावित नभएको प्रष्ट हुन्छ ।

काठमाडौं उपत्यका नेपाली पर्यटनको प्रमुख स्थल हो । यहांको धार्मिक, पुरातात्विक एवं ऐतिहासिक महत्वका मठ, मन्दिर, गुम्बा, चैत्य तथा स्मारीकहरू विभिन्न स्तरका पर्यटक सुविधाहरू तथा सबैभन्दा मुख्य कुरा यो शहर अन्तर्राष्ट्रिय हवाई मार्गको एक मात्र नाका हुनुले यसलाई देशको प्रमुख गन्तव्य स्थल बनाउनु स्वाभाविकै हो । हालका वर्षहरूमा विशेष गरी पर्यटक उच्च मासमा काटमाडौंको दृश्यावलोकन गराउने स्थानहरूमा देखा पर्ने गरेका भिडहरू तथा तज्जनित अन्य समस्याहरूलाई दृष्टिगत गर्दा साइट सिइङ पर्यटन वा आमोद प्रमोद मूलक (pleasure) पर्यटनलाई देशको अन्य संभाव्य स्थानहरूमा पुन्याउनु अत्यन्त जरूरी महशुश गरिएको छ । यसको लागि बाटोघाटो, विद्युत सेवा, दूर सञ्चार जस्ता आवश्यक भौतिक पूर्वाधारहरू निर्माण भइसकेका र ऐतिहासिक महत्वका साथै प्राकृतिक सौन्दर्यले समेत ओतप्रोत भएका गोरखा जस्ता स्थानहरू महत्वपूर्ण हुन्छन् ।

सन् १९७५ मा प्यासिफिक एशिया ट्राभल एशोसिएसन (PATA) ले पोखरालाई देशको दोस्रो प्रमुख गन्तव्यस्थलको रूपमा विकसित गराउन महत्वपूर्ण सुझावहरू सहितको प्रतिवेदन श्री ५ को सरकार समक्ष पेश गरेको थियो । भारतीय पर्यटकहरूलाई गणना नगर्दा पनि करीब ६५ हजार पर्यटकहरू पोखरा भ्रमणमा जाने गरेको कुरा पर्यटन विभागबाट प्रकाशित पछिल्लो तथ्याङ्कबाट देखिन्छ । काठमाडौं–पोखरा बीच पर्ने गोरखा जस्तो स्थानमा भने कुनै खास उल्लेखनीय संख्यामा पर्यटकहरू हालसम्म जाने गरेको देखिदैन । यसको प्रमुख कारणमा गोरखाको ऐतिहासिक महत्व हामीले पर्यटकहरूलाई पहिचान गराउन नसक्नु, यहाँ स्तरीय आवास सुविधाहरूको अभाव हुनु तथा काठमाडौं स्थित ट्राभल एजेन्सीहरूले गोरखालाई दृश्यावलोकन कार्यक्रममा समावेश गर्न नचाहनु आदिलाई मान्न सकिन्छ ।

## प्रचूर सम्पदा

गोरखा जिल्लामा सांस्कृतिक, ऐतिहासिक, धार्मिक एवं साहसिक पर्यटनका सम्पदाहरू छरिएर रहेका छन् । यहांको पर्यटन विकासको केन्द्रबिन्दु ऐतिहासिक एवं पुरातात्विक महत्वको गोरखा बजार अर्थात् सदरमुकाम वरपरको क्षेत्र नै हो र यसलाई यथोचित रूपमा विकसित गराइनु पर्छ । यस स्थानबाट पृथ्वीनारायण शाहले नेपाल अधिराज्यको निर्माण कार्य कसरी शुरू गरे र उनको जीवनी कस्तो थियो भन्ने विषयको एउटा आकर्षक म्युजियमको एक भागको रूपमा विश्व विख्यात गोरखा सैनिकको गौरवमय इतिहासलाई झल्काउने खालको गोर्खा म्युजियम (Gurkha museum) पनि उपयुक्त तवरले निर्माण गरिएमा पर्यटकमा आकर्षण बढ्न गै यस

स्थानले पर्यटनबाट बढी लाभ लिन सक्ने देखिन्छ। सन् १९८९ मा एशियाली विकास बैंकबाट गरिएको नेपालको पर्यटन विकास सम्बन्धी अध्ययनमा गोरखामा यस किसिमको म्युजियम निर्माण गर्ने कार्यक्रम समेत समावेश गरिएको छ।

गोरखाको अर्को महत्वपूर्ण स्थल मनकामनामा धार्मिक पर्यटन विकासको राम्रो संभावना छ। देशको विभिन्न भूभागबाट देव देवीको दर्शन, अर्चना गर्न जाने तीर्थयात्रीहरूको ठूलो भीड लाग्ने गरेको पाइन्छ। यहाँ उपयुक्त किसिमका सुविधाहरूको निर्माण भएमा अझै ठूलो संख्यामा आन्तरिक पर्यटकहरू मात्र होइन भारतबाट समेत हिन्दु धर्मावलम्बी पर्यटकहरू दर्शनार्थ आउन सक्ने सम्भावना छ। मझुवा, खैरेनी देखि मनकामनाको डाँडा सम्मको पहुँचलाई सुगम बनाउन केवल कारको सुविधा भएमा यहाँ जान पर्यटकहरूको संख्यामा अरू वृद्धि हुन सक्ने देखिन्छ।

गोरखाको अर्को प्रमुख आकर्षण यसको उत्तरी भेगमा अवस्थित मनासलु, हिमालचुली लगायतका हिमाच्छादित शिखरहरू हुन्। हालसालै श्री ५ को सरकारले ट्रेकिङ्ग एजेन्सीहरू मार्फत जाने समूह पर्यटकहरूलाई खुला गरेबाट यस भेगमा घुम्न जाने पर्यटक संख्या आउँदा वर्षहरूमा बढ्दै जाने देखिन्छ। गोरखाको भच्चेक विरान डाँडा तथा यस मार्गमा परेका अन्य स्थानहरूमा ट्रेकिङ्ग गतिविधिहरू सञ्चालन हुन लागेको केही वर्ष भइसकेको छ। गोरखा जिल्लाका हरिया डाँडा काँडाहरू नदीनाला तथा यहाँका विविध जनजाति तथा तिनीहरूका आ-आफ्ना संस्कृतिहरूले गर्दा यस जिल्लाका अन्य भेगहरू पनि पर्यटकहरूका लागि आकर्षक बन्न सक्छन्।

यस जिल्लामा प्रायः गरेर समूहगत रूपमा पर्यटकहरू भ्रमण गर्न जाने तथा तिनहरूको भ्रमणको सम्पूर्ण प्रबन्ध काठमाडौं स्थित एजेन्सीहरूले गर्ने हुनाले स्थानीय अर्थतन्त्रमा यस्तो पर्यटनबाट प्रत्यक्ष रूपमा लाभ भने नपुग्ने देखिन्छ। तथापि घर दैलोमा पुगेका पर्यटकहरूलाई समुचित आदर भावले सत्कार गर्नु हाम्रो कर्तव्य हो।

पर्यटकहरूको उपभोगको लागि ताजा दूध, फलफूल, आलु, तरकारी आदि बिक्री गरी लाभ लिनको लागि काठमाडौं स्थित गोरखा जिल्लामा ट्रेकिङ्ग सञ्चालन गर्ने एजेन्सीहरू सँग स्थानीय समन्वय कायम गर्नु आवश्यक देखिन्छ। अर्को तर्फ स्थानीय घरेलु उत्पादनका विभिन्न वस्तुहरूको गुण र परिमाणलाई वृद्धि गरी पर्यटकहरूलाई बिक्री गरी लाभ लिन सकिने सम्भावना पनि प्रशस्त छ। त्यसरी नै स्थानीय युवा, युवतीहरूले आफ्नो विशिष्ट परम्परा अनुसारका सांस्कृतिक कार्यक्रमहरू पर्यटकहरूको मनोरञ्जनका लागि प्रस्तुत गरी सो वापत कुनै सामाजिक विकास, निर्माण कार्यका लागि ट्रेकिङ्ग सञ्चालक एजेन्सी वा पर्यटकहरू स्वयंबाट चन्दा स्वरूप केही रकम आर्जन गर्न सक्छन्। यस्ता कार्यबाट पर्यटकलाई मनोरञ्जन हुने मात्र नभई, स्थानीय संस्कृति र परम्पराको जगेर्ना गर्न तथा सामाजिक विकास तथा निर्माण कार्यमा हौसला मिल्दछ। यस्ता कार्यहरू अनुशासित एवं भद्र तरीकाले सञ्चालन गराउनमा स्थानीय शिक्षकहरूले ठूलो भूमिका खेल्न सक्छन्।

गोरखा जिल्लामा पर्यटन विकास गराउन प्रथमतः सदरमुकाम क्षेत्रको सही पहिचान गराउने किसिमले यहाँ पर्यटक आकर्षणको निर्माण हुनु जरूरी छ। गोरखा बजारमा भ्रमण गर्न जाने पर्यटकहरूको संख्या वृद्धि हुनासाथ जिल्लाभरि नै पर्यटनका विविध गतिविधिहरू सञ्चालन गर्नका लागि आवश्यक पूर्वाधार बन्दछ। गोरखाको महिमालाई हामी सबैले दृष्टिगत गरी पर्यटकका लागि भन्दा पनि हाम्रो आफ्नै लागि र हाम्रा भावी सन्ततीका लागि समेत यस स्थानको सही पहिचान हुने किसिमले प्रतिनिधित्व गराउन पृथ्वीनारायण शाह तथा उनले शुरु गरेको गौरवमय गोरखा सेनाको इतिहास झल्काउने म्युजियम बनाइनु अत्यन्त आवश्यक छ। यस्तो म्युजियमको राम्रो तवरले निर्माण भएमा नेपाल भ्रमणमा आउने पर्यटकहरूका लागि "नहेरी नहुने स्थान" (must see destination) को रूपमा गोरखा बजार विकसित हुन नसक्ने कुनै कारण छैन।



# गोरखाको प्रजातान्त्रिक गौरव

– गौतम न्यौपाने

'गोरखा' शब्दले एकसाथ विश्व कोषमा नेपाली सन्दर्भको अध्यात्म, राष्ट्रियता एकीकरण र वीरताको उद्घोष गर्दछ। उल्लेख्य पक्षहरूमा नेपाली वाङ्मयका विविध क्षेत्रहरूमा पर्याप्त चर्चा र खोजविन भएका पनि छन्। इतिहासमा समयको क्रमिक चक्रमा एकीकरण, राष्ट्रियताको विकासका साथै लोक कल्याणकारी राज्य व्यवस्थाको प्रसङ्गमा प्रजातन्त्रवादको भावनाको विकासले पनि समान स्थान ग्रहण गरेको ऐतिहासिक यथार्थता छ। प्रस्तुत प्रसङ्गमा गोरखा राज्य स्थापना र राष्ट्रवादको उदयपछि यसको क्षेत्रफलमा देखिएको परिवर्तन र परिमार्जनको शिलशिलामा मजबूत जगबाट उठाइएको 'नेपाल' र नेपाली राष्ट्रियताको मन्दिरमा जनकल्याणको भावना पुञ्ज प्रजातन्त्रवादको शृङ्खलालाई जोड्दै गोरखा शब्दको अर्थभित्र प्रजातन्त्रवादको पकड पनि फैल्याउन र यसको विस्तारमा यस माटोमा (गोरखामा) पहल भएका सुझ-बुझ र बलिदानको घटनाहरूलाई खोज-जोठ गरी इतिहासका अक्षरहरूलाई आकार एवं वाणि प्रदान गर्ने प्रयत्न प्रारंभिक र संक्षिप्त रूपमा नै भएपनि यस लेखनको उद्धेश्य हो। यथार्थमा प्रस्तुत प्रयत्न विषय वस्तुको प्राथमिक उठान मात्र हो र गम्भीर रूपमा भन्ने हो भने यस क्षेत्रमा ऐतिहासिक तथ्यहरूको व्यापक खोज र अन्वेषण जिम्मेदवार पुस्ताको अनिवार्य कर्तव्य हो। किन भने इतिहास धुलोमा मिल्काउने कसिङ्गर होइन। समाज र राष्ट्रले रक्षा गर्नु पर्ने अमूल्य निधि हो।

प्रजातन्त्रवाद आधुनिक युगमा सभ्यता र इतिहासलाई प्रेरणा प्रदान गर्ने सारभूत तत्वका रूपमा उपस्थित छ। शासक तथा शासित वर्गका बीच अनुबन्ध, असल न्याय प्रणाली, राजकीय निर्णय राज्यव्यवस्था र विकासमा जन सहभागिता, विकेन्द्रित प्रशासन, मानवीय स्वतन्त्रता र मौलिक अधिकारहरूको निर्वाध उपभोक्ता र समाजवादी वितरण प्रणाली प्रजातन्त्रवादका क्रमिक परिष्कार र प्रवर्धनका पक्षहरू हुन्। उल्लेखित प्रजातान्त्रिक विकासका निर्देशित पक्षहरूमा संयमपूर्ण आँखा पुर्‍याउनु र त्यसको मूल्य बोध गराउनु इतिहास शास्त्रको काम हो। यस कारण उल्लेखित पृष्टभूमिमा सोह्रौं शदीको आखिरतिर गोरखा राज्य संस्थापनाको समयलाई आधार मानी यस विश्लेषणलाई अगाडि बढाएको छ। राज्य स्थापना गर्ने महान् सम्झौतामा गोरखा छोप्राकका नारायण अर्जेल, गणेश पाण्डे आदि पुर्खाहरूको विवेक पूर्ण पहलबाट तत्कालीन लमजुङ्गका अधिराज कुमार द्रव्यशाहलाई राजकीय अनुसन्धानका आधारमा शासनको अभिभारा प्रदान गरेर इतिहासमा प्रजातन्त्रवादको जगमा प्रथम आधारशिला राखिएको उदाहरण देखिन्छ। सामाजिक अनुबन्धद्वारा लिगलिग कोटको किल्ला भित्र जुन सहभागिताद्वारा गरिएको शाही अभिषेकको विश्लेषणात्मक ऐतिहासिक मूल्य छ र यस घटनाले इतिहासका अनेक घटनाहरूलाई निर्देशन गर्दछ। इतिहासको टिपोटमा जन सम्झौताद्वारा जन स्वीकृत (वैधानिक) राजतन्त्र व्यवस्थाको श्री गणेश यसै घटनाबाट भएको स्वीकार्य आधार छ। गोरखाधीश रामशाहले अख्तियार गरेको न्याय सम्पादन प्रणालीले गोरखाको अटल अस्मितालाई प्रदर्शन गर्दछ।

आधुनिक नेपालको निर्माणका अगुवाइ गर्ने बडा महाराजा पृथ्वीनारायण शाहमा विजेताको शौर्य दम्भ मात्र होइन लोक कल्याणमा हुनपर्ने नेतृत्वको सुझबुझ र आधुनिक शासन व्यवस्थाको स्थापनामा जन भावनाको पारख क्षमता पर्याप्त थियो भन्ने कुराका प्रमाणहरू प्रशस्त छन्। यस प्रसङ्गमा पृथ्वीनारायण शाहले विशे नगर्ची गरेको सम्पर्क र कालु पाण्डेलाई काजी बनाउदा बुझेको जनमतका उदाहरणहरूले तत्कालीन शासन वर्ग र जनताका बीचमा पनि परस्परको सम्बन्ध सूत्रको विकास भएको साथै राज्य व्यवस्थालाई प्रजातन्त्रका आदर्श र आधारहरूले अनुप्रमाणित गरेको दृष्टिगोचर हुन्छ। राष्ट्रिय एकीकरण र राष्ट्रियताको बीजारोपण कुनै प्रमुक विजेताको तरवारको बलबाट मात्र हुने होइन मूल रूपमा उल्लेखित उद्धेश्यहरूको सृष्टि र सफलता, जन चाहना र र सहभागिताद्वारा मात्र सम्भव हुने तथ्य छ। अतः पृथ्वीनारायण कालीन गोरखाली एकीकरण अभियान र त्यसको उपलब्धि नेपाली राष्ट्रियता वा राष्ट्रवादको बीजारोपण जन चाहनाको मूर्तता हो र नेपाली प्रजातन्त्रवादका पृष्ठभूमिमा जनता तथा शासनकर्ताहरूद्वारा राखिएका जगहरू हुन्। यिनै राष्ट्रिय एकताका ठहरहरूबाट काटमाडौं उपत्यका सहित गोरखा पश्चिमका २२ से २४ विसे र काठमाडौं पूर्वका खण्डित प्रदेशहरूको सामन्ती पृथकतावादी शासन पद्धतिलाई नास गरेर व्यापक, एकता पूर्ण जन चाहनायुक्त र साझा नेपाल राष्ट्रको एकीकरण गरिएको हो।

वस्तुतः गोरखाली एकीकरणको मूल प्रेरक तत्व जनचाहना र सहभागिता हो- यसको आदर्श प्रजातन्त्रवाद हो। असि र मसीका पत्तीहरूलाई बुद्धिमत्ता साथ चलाउदै आधुनिक इतिहासको प्रारंम्भ गोरखाको माटोबाटै शुरू भएको हो। गोरखाली एकीकरणले समय र सन्दर्भको पारख साथ प्रजातन्त्रको बालकलाई होसियारी साथ हुर्काउने र प्रवर्धन गर्ने आन्तरिक अभिलाशा राखेको हो। यसै तथ्यका आधारमा गोरखाको परिचयलाई प्रजातन्त्र र राष्ट्रियतासंग पनि संगसंगै समावेश गरिनु इतिहासको खण्डहर भित्र पसी पुरिएका बहुमूल्य वस्तुहरू बाहिर निकाल्नु जस्तै हो।

राष्ट्रिय एकीकरणका सिपाहीहरू आफ्ना नायकहरूका आदेश र हौसला उर्दिबाटमात्र अभिप्रेरित भएका होइनन् अपितु उनीहरूलाई प्रेरित शक्ति र तत्व तत्कालीन गोरखालीहरूमा जागेको आन्तरिक अभिप्रेरणा नै हो। त्यस समयको राजनैतिक भूगोलमा कोरिएका



डरलाग्दा रेखाहरूको कारणबाट एकीकरणद्वारा सबलता र सम्पन्नता हासिल गरी उदार राज्यव्यवस्था अन्तंगत आवद्ध रहनु गोरखालीहरूमा जागरण भएको अभिप्रेरणाको कारण थियो।

एकीकरण समाप्ति पछि गोरखाबाट सुरु गरिएको राष्ट्रियता र प्रजातन्त्रवादको अभ्यास र परिशीलन विभिन्न कारणबाट शिथिल हुन थयो र नेपाल एकपटक फेरि कमजोर र संकटमा प्रवेश गर्‍यो। अत्यन्त डरलाग्दा घात प्रतिघात र षड्यन्त्रको भुमरीमा नेपालको अस्तित्वले भौतारिनु पर्‍यो र लोक विश्वास जन चाहना र जन एकता जस्ता पक्षहरू शिथिल हुन पुगे र स्वाभाविक रूपमा यस्तो परिस्थितिले मुलुकमा एकतन्त्रीय व्यवस्थालाई जन्म दिन पुग्यो। जगबहादुर कुवंरले आफूलाई राणाजी बनाई शासन र शक्तिलाई पारिवारिकीकरण गराएर र मुलुकलाई विशाल ज्यालखानाको रूप दिलाए। आधुनिक युगको उज्यालो तर्फ आमुख राष्ट्रमा एकतन्त्रीय जहानीया ग्रहण लाग्दा यस्तो अन्धकारलाई रूचाउने नसैलाई कुनै कारण थिएन। फलतः यस्तो कालरात्रीका विरूद्ध गोरखाका लखन थापा मगर जंग बहादुर राणाका विरुद्ध उभिए। तर जंग बहादुरको विनासमा उनीले सफलता पाउन सकेनन् र नेपालको इतिहासमा प्रथम शहीदको सम्मान मात्र आर्जन गरे। एकीकरणको धेरै पछि गोरखाली सपूतले राष्ट्रका नाममा रगतको बलि चढाए। एकतन्त्रीय राणा शासन समाप्त गरेर वैधानिक राजतन्त्र व्यवस्था अन्तरगत प्रजातन्त्रवादको स्थापना गर्ने प्रथम पटक नेपालमा एउटा राजनैतिक समूह बनाइयो 'प्रचण्ड गोरखा'। यस राजनैतिक दलले राणाहरूको सामूहिक हिंसा गरी जनतामा प्रजातन्त्र र राजामा शक्ति स्थापना गर्ने उद्धेश्य लिएको थियो। जसलाई 'गोरखा' शब्दको शाहस शौर्य र देशभक्तिले अनुप्राणित गरेको थियो। यद्यपि उनीहरू पनि आफ्नो उद्धेश्यमा पुग्न सकेनन्। राणा शाहीको प्रचण्ड प्रताडना सहदै कालो कोठरीमा बन्दी बने तापनि राणाशाहीका विरुद्ध चेतनाको मसाल बाली आउने पुस्ताहरूको कर्तव्यतर्फ संकेत गर्दै रहे।

नेपालमा पहिलो पटक "नेपाल प्रजा परिषद्" नामक राजनैतिक दलको गठन भयो। राणा विरोधी गतिविधिको कारण १९९७ सालमा शहीद काण्ड भयो। जसमा ४ सपूतहरूले मातृभूमिको दूधको भारा तिरे र कैयौंलाई कठोर कारावासको सजाय मिल्यो। जसमा प्रजातन्त्रका पिता गणेशमान सिंह र अरू राजनेताहरू सँगै गोरखा खान्चोकका मणेशराज वन्तले प्रजातन्त्रको लडाईमा आफूलाई प्रस्तुत गर्नुभई राणाशाहीको कठोर कारावास ग्रहण गरी गोरखाको गौरवलाई कायम राख्नुभयो।

२००४ सालमा 'जयतु संस्कृतम्' नाराद्वारा रानीपोखरी पाठशालाका छात्रहरूले प्रतीकात्मक रूपमा राणा विरोधी अभियान चलाए। यस अभियानले राणा शासनको अन्त्यका लागि २००७ सालको क्रान्तिको धेरै नेतृत्व तथा कार्यकर्ताहरू जन्मायो। गोरखाका छात्रहरू पूर्णप्रसाद ब्राम्हण, राजेश्वर देवकोटा आदि पनि यस अभियानका प्रमुखहरू मध्ये थिए। राजेश्वर देवकोटा शासनका कोपभाजन बनी निर्वासित हुनुभयो। उहाँको संसर्ग भारतमा राणाहरूका विरूद्ध संगठित भएको नेपाली कांग्रेससँग भयो र २००७ सालको मुक्ति आन्दोलनमा नेपाली कांग्रेसको नेतृत्वमा गोरखामा राणाशाहीको किल्ला खतम गरी प्रजातन्त्रको संस्थापना गर्ने दायित्व ग्रहण गर्दै अगाडि बढ्नु भयो। एकीकरण समाप्त भएपछि गोरखाले आफ्नो अतीतको प्रतिष्ठा र वैभव बिर्सदै गएको थियो। एकीकरण कालका प्रमुख भारदारहरू राज्य विस्तारका साथ साथ गोरखाबाट बाहिर बसाई सरेका थिए। मूलतः बसाई सरेका व्यक्ति र उनीहरूका सन्तान राज्य व्यवस्थाका विभिन्न स्थानहरूमा रहेका भारदार वर्गहरू थिए। शासनको आशीर्वादबाट उनीहरूमा अहं भाव र वैशिष्ठ्यताको गर्व थियो। यसले गर्दा नेपालका अरू जिल्लाहरूको तुलनामा गोरखामा चेतनाको कमी विस्तारै महसूस हुन थालेको–सामन्ती संस्कारको बोलवाला बढेको र निरक्षरताको प्रमुखता रहेको थियो। परन्तु ००७ को आन्दोलन सफल पारी प्रजातन्त्रको स्थापना गर्न युवक तथा साहसी देशभक्तहरूको अभाव हुन पाएन। गोरखा पोखरी थोक बजारका कृष्ण बहादुर खडका, चूडा नारायण श्रेष्ठ, रत्नकुमार श्रेष्ठ, जितबहादुर श्रेष्ठ, पूर्णमास्के, कञ्चन बहादुर श्रेष्ठ, प्रेमकुमार श्रेष्ठ, चिनकाजी श्रेष्ठ, खोप्लाङ्का रूपनारायण श्रेष्ठ, नन्दलाल श्रेष्ठ, जगतनारायण श्रेष्ठ, लिगलिग बोहोरा गाउँका उमानाथ देवकोटा, दुर्गाभक्त देवकोटा, स्थानेश्वर देवकोटा, कट्टेलडाडाका वैकुण्ठ कट्टेल लाक्दीका रोहिणी देव भट्ट, छोप्राकका पद्मनारायण श्रेष्ठ लुईटेल भञ्ज्याङ्का सुब्बा गजेन्द्र देवकोटा, कृष्णप्रसाद घिताल, बाबुराम पौड्याल आदि युवकहरूले प्रत्यक्ष अप्रत्यक्ष राणाशाहीका विरूद्ध गोरखामा संघर्ष गर्नुभयो। बगुवा खान्चोक मौजाका रूद्रबहादुर श्रेष्ठ र जगत बहादुर पोखरेलको २००७ सालको क्रान्तिमा रहेको योगदान इतिहासले बिर्सन सक्दैन। प्रथम पटकको आक्रमणमा क्रान्तिकारीहरूले कुनै बल नगरीकन राणाका बडाहाकिमलाई निस्तेज गरे। तर तुरून्तै बडाहाकिमबाट प्रत्याक्रमण भयो र गोरखा कब्जा गर्न क्रान्तिकारीहरूले दोश्रो पटक प्रयत्न गर्नुपर्‍यो। यस अभियानमा तन्हौंबाट गोवर्धन शर्माले पनि सहयोग गर्नुभयो। छोप्राकका टीकादत्त पोखरेल ने० का० को मुक्ति सेनाका रूपमा धीरबम मल्लको नेतृत्वमा वीरगञ्जमा राणाका सिपाही विरूद्ध लड्नु भयो।

दिल्ली सम्झौता पछि क्रान्तिका अधिनायक जनरल मातृका प्रसाद कोइरालाले आन्दोलन स्थगित भएको घोषणा पछि राणाशाही विरूद्ध नेपाली कांग्रेसको नेतृत्वमा सञ्चालित जन आन्दोलन समाप्त भयो। र नेपालमा २००७ फागुन ७ गतेको शाही घोषणाद्वारा प्रजातन्त्रको घोषणा गरियो।

क्रान्तिको समाप्ति पछि प्रजातन्त्रको सुदृढीकरणमा नेपाली कांग्रेसका कर्णधारहरू अगाडि सरे। गोरखाको प्रसङ्गमा सुधारको प्राथमिक क्षेत्र शिक्षा प्रचार ठानियो र गोरखाको सदरमुकाम गोरखाबोझ साथै अन्य क्षेत्रहरूमा



विद्यालय तथा पाठशालाहरू स्थापना गरिए। प्रजातन्त्रको सुदृढीकरण जनतामा शिक्षाको प्रचार र प्रशासनमा सुधार तर्फ नेपाली कांग्रेसको ध्यान गयो। शुरूमा अरू कुनै विशेष राजनैतिक दलको गठन हुन सकेन। नवोदित प्रजातन्त्र प्रतिक्रयावादी र राणाका अवशेषहरूलाई सहन हुने कुरा भएन उनीहरूले विस्तारै आफ्नो दलहरू पनि बनाए। तर प्रजातन्त्रको पक्षमा नयाँ नेपाली कांग्रेसको विरोधमा उनीहरूको ध्यान गयो। अर्कोतिर गोरखाका क्रान्तिकालीन ने०का० का प्रमुख राजेश्वर देवकोटा पनि नेपाली काँग्रेसको मूल प्रवाहबाट पलायन हुनुभयो। गोरखामा नेपाली कांग्रेसको संगठनमा कुशल नेतृत्वको अभाव रह्यो। अतः राष्ट्रवादी गोरखा परिषद नामक राजनैतिक दलले अरू राजनैतिक दलहरू भन्दा आफूलाई अगाडि बढायो। २०१५ सालको आम निर्वाचनमा थोरै मतको अन्तरमा गोरखा जिल्लाबाट गोरखा परिषदका उम्मेदवारहरू विजयी रहे। नेपाली कांग्रेस बाहेकका राजनैतिक दलहरूको स्थिति सन्तोषजनक रहेन। आम निर्वाचनद्वारा गोरखाले आफ्नो ऐतिहासिक श्रेष्ठता कायम गर्न सकेन।

२०१५ सालको आम निर्वाचन पछि कांग्रेसको सरकार गठन भयो। सत्तारूढ भएपछि यस सरकारले भूमिसुधार कार्यक्रम, बिर्ता उन्मूलन, राज्य रजौटा उन्मूलन, वन राष्ट्रियकरण जस्ता नयाँ र क्रान्तिकारी कदमहरू अगाडि सार्‍यो। गोरखामा बिर्ता प्रथाको बाहुल्य थियो। किसानहरू बिर्तावालहरूबाट अन्यायपूर्वक शोषित थिए। उनीहरूमा चेतनाको अभाव थियो। यसकारण नेपाली कांग्रेसले गोरखामा बिर्ता उन्मूलन गर्न किसानहरूलाई चेतना प्रदान गर्न थाल्यो। यस काममा असेल मौजाका किसानहरू हरिलाल भट्ट, चन्द्रप्रसाद भट्ट, गजाधर भट्टराई, जयकृष्ण बगाले, जगन्नाथ देवकोटा र नन्दलाल बोहोरा आदिले आन्दोलन चलाए। यस आन्दोलनको प्रभाव विस्तारै जिल्लाका विभिन्न भागमा फैलन थाल्यो। फलतः बगुवा नामजुङ सुन्तले आदि मौजाका किसानहरू पनि सक्रिय हुन थाले र गोरखाबाट बिर्ताप्रथा उन्मूलन हुन जन सहयोग र समर्थन जुट्न थाल्यो। गोरखाको पश्चिमी क्षेत्र पालुम्टारमा हवाई मैदान निर्माण गरियो। यस हवाई मैदानको उद्घाटन तत्कालीन निर्माण तथा यातायात मन्त्री गणेशमान सिंहद्वारा भयो। जिल्ला विकास बोर्डको सक्रियतामा गोरखाका विभिन्न ठाउँहरूमा विद्यालय भवन बनाउन आर्थिक निकासा दिइयो। सार्वजनिक विकास र निर्माणको एक सशक्त अभियान नै चालु राखियो। यस्ता जन हितकारी र प्रजातन्त्रको सुदृढीकरणका कदमहरूले प्रजातन्त्र विरोधी प्रतिक्रयावादीहरूलाई असहनीय बनायो। गोरखाका बिर्तावालहरू सामन्ती प्रतिक्रयावादका पृष्ठपोषकहरू थिए। उनीहरू राष्ट्रिय रूपमा नै प्रजातन्त्रका विरोधी थिए। अतः उनीहरूको प्रजातन्त्र र त्यसको प्रतीक नेपाली कांग्रेसका विरूद्ध षड्यन्त्र गर्नु कुनै नौलो कुरा थिएन। यसका लागि प्रतिक्रियावादीहरूले योगी नरहरिनाथ जस्ता व्यक्तिलाई गुहारे। योगीका नेतृत्वमा 'कर्मवीर महामण्डल' नामक राजनैतिक दल कायम गरियो र यस दलको माध्यमबाट नेपाली कांग्रेसका विरूद्ध भड्काउने प्रचार योगीले थाले। योगीलाई महत्वपूर्ण ठाउँहरूबाट सहयोग थियो। यस सहयोगको बलबाट योगीले गोरखामा ठूलो काण्ड गराए। यस काण्डबाट धेरै निर्दोष व्यक्तिहरूको ज्यान गयो। प्रतिक्रयावादीहरूले यसलाई नेपाली कांग्रेसको सरकारको असफलताको रूपमा प्रचार गरे। जुन नेपालमा प्रजातन्त्र समाप्त गर्ने २०१७ सालको राष्ट्रघाती कदम चाल्न प्रेरणा दिने एक घटनाका रूपमा मानियो।

संसदीय सरकारको कालमा गोरखामा श्री ५ महेन्द्रवीरविक्रम शाहको भ्रमण र प्रधान मन्त्री विश्वेश्वर प्रसाद कोइराला तथा गृहमन्त्री सूर्य प्रसाद उपाध्यायको भ्रमण प्रमुख छन्। महेन्द्रको भ्रमणबाट प्रतिक्रयावादीहरूको मनोबल बढ्यो भने बी. पी. कोइरालाको भ्रमणले सर्वसाधारण जनताको।

२०१७ साल पौष १ गते श्री ५ महेन्द्रबाट प्रजातन्त्रका विरूद्ध राष्ट्रलाई अत्यन्त घात हुने कदम चालियो।

विश्वेश्वर प्रसाद कोइरालाको सरकार बरखास्त गरियो र संपूर्ण मन्त्रिमण्डलका सदस्यहरू झ्यालखानमा राखिए। संसद विघटन गरियो र महत्वपूर्ण राजनैतिक व्यक्तिहरू पनि पक्राउ परे। यही महिनाको २२ गते देशमा राजनैतिक दल विरुद्ध प्रतिबन्ध लगाइयो। यस घटनाले देशभक्तहरू चिन्तित भए, प्रतिक्रयावादीहरूको उत्साह बढ्यो। प्रजातन्त्रका प्रहरीहरू किंकर्तव्यविमूढ भए। देशभित्र र बाहिर यसको तीव्र प्रतिक्रया पँदा भयो। २०१८ सालमा भारत भूमिबाट प्रजातन्त्रको स्थापनाको लागि जनरल सुवर्ण शम्शेर राणा जसलाई निर्वासनमा जम्मा भएका प्रजातन्त्रवादीहरूले पार्टीको कार्यवाहक अध्यक्ष बनाएका थिए, उहाँको नेतृत्वमा प्रतिरोध आन्दोलनको आह्वान गरियो। यस आन्दोलनको लागि गोरखाबाट कृष्णप्रसाद न्यौपाने, लालध्वज गुरूङ्ग रोहिणी देव भट्ट, इमानसिंह गुरूङ्ग, बुद्धिसागर ढकाल, हरिराज सिलवाल, नलराज थपलिया, टीकादत्त थपलिया, टीकादत्त पोखरेल, दलसिंह विश्वकर्मा, कपिलदेव पाण्डे तेजप्रसाद मरहट्टा, पुष्प ढकाल आदि नेपाली कांग्रेसका कार्यकर्ताहरू निर्वासनमा जानु भयो, टीका भट्ट, रुद्रभट्ट र भोजराज तिवारीले जिल्लामा काम गर्नु भयो। प्रतिरोध आन्दोलनमा उल्लेखित मध्ये सबै जसोको सक्रिय योगदान रह्यो। ठोरीको सशक्त आन्दोलनमा टीकादत्त थपलिया शहीद हुनु भयो। लाल ध्वज गुरूङ्ग र इमान सिंह गुरूङ्ग भरतपुर नेपाली कांग्रेसले कब्जा गरेपछि गोरखा र पोखरा कब्जा गर्ने उद्देश्यबाट गोरखा प्रवेश गर्दै परिस्थिति मिलाउने क्रममा कास्कीमा पक्राउ पर्नु भयो र उहाँहरूलाई शाही सैनिकहरूले कोर्थे खोलामा गोली प्रहार गरी शहीद बनाइयो। लमजुङ्ग विचौरको टेक बहादुर गुरूङ्गलाई शाही सेनाले गोरखाको सिमजुङ्गमा ल्याई रातको समयमा गोली प्रहार गरेर मारे। छिमेकी लमजुङ्गका देशभक्तले गोरखाको माटोमा रक्त सिञ्चन गरेर मुलुकको भारा तिरे।

पश्चिमाञ्चलमा प्रतिरोध आन्दोलनका नायक र अन्य नेपाली कांग्रेसका नेताहरूलाई पकडन सरकारले अत्यन्त कडा प्रयत्न गऱ्यो। यस प्रयत्नमा बुद्धिसागर ढकाल, इतरात गुरूङ्ग, कपिलदेव पाण्डे आदि पक्राउ पर्नु भयो। उहाँहरूलाई जेल पठाइयो। जिल्लामा भूमिगत रहनु भएका कृष्ण प्रसाद न्यौपानेलाई कब्जामा लिन नसक्दा सरकारलाई असह्य भएको थियो। उहाँलाई सुराक दिने व्यक्तिहरूलाई विशेष पुरस्कारको हल्ला चलाइएको थियो। कांग्रेसको गतिविधि बुझ्न थुप्रै मानिसहरूले गुप्तचरको काम पाएका थिए र यी गुप्तचरहरू कांग्रेसहरू भूमिगत हुन सक्ने इलाकाहरूमा विभिन्न बहानामा जिल्ला भ्रमण गर्दथे। क्रान्ति समर्थक नवयुवक लेखनाथ कट्टेलले देशभक्तहरूलाई हुन सक्ने ठूलो खतराबाट बचाउन जोखिम उठाई सरकारको गोप्यताको क्रान्तिकारीहरूलाई सुराक दिई उनीहरूलाई बचाउने जिम्मेवारी निभाउनु भयो। परिणामतः शाहीसेनाको क्रूरताबाट धेरै देशभक्तहरू जोगिए तर उहाँ आफैं प्रशासनको सिकार हुनुभयो र जेल पर्नु भयो। उहाँले दण्ड जरिवाना पनि बेहोर्नु पऱ्यो। वि. सं. २०१८ सालको आन्दोलन पछि नवयुवकहरू लोक प्रसाद ढकाल, ध्रुवदेव भट्ट, चन्द्रप्रसाद न्यौपाने र इन्द्रबहादुर गुरूङ्गआदिले आफ्ना पारिवारिक मूलीहरू क्रान्तिमा सामेल भएका कारणले तत्कालीन प्रशासन र शाही सेनाबाट कठोर शारीरिक र मानसिक यातना भोगे। फलत उनीहरू आखिर प्रजातन्त्रका सिपाही हुने संकल्पमा अगाडि बढे। यसैं बेला सरकारबाट कृष्णप्रसाद न्यौपाने र रोहिणीदेव भट्टको अंश सर्वस्व गर्ने आदेश अनुसार सर्वस्व हरण गरियो। जिल्लामा प्रशासन, सेना र प्रहरीद्वारा व्यापक दमन अपनाइयो। देशभक्तहरूका परिवार आफन्त जन र परिचितहरूले समेत ठूलो कष्ट भोगे। छोप्राकका मीनप्रसाद पोखरेल थम्बसिंह गुरूङ्ग, हरि प्रसाद भट्टराई समेतले यातना पाए। यस आतङ्कको कसैले विरोध गर्न सकेनन्, गोरखालीहरूको मनमा डर र दाशताले वास लियो। पछि भूमिगत अवस्थामा नै कृष्ण प्रसाद न्यौपानेलाई कृष्ण प्रसाद धितालले सुरक्षा जिम्मा लिई पकडाउ गरियो। ट्रिबुनल फैसला अनुसार ५ हजार जरिवाना सहित ६ वर्ष कारावासको सजाय तोकिई उहाँ गोरखा कारगारबाट काठमाडौंको केन्द्रीय कारगारमा सारिनु भयो। पक्राउ पर्न नसकेका अरू नेता तथा कार्यकर्ताहरू



निर्वासनमा रहनु भयो र पछि २०२५ सालमा श्री ५ महेन्द्रबाट सुवर्ण शमशेरलाई माफी हुँदा उहाँहरू आम माफीमा पर्नु भयो। तर टीकादत्त पोखरेलको लगत छुटेकोले उहाँलाई लगत कट्टा भएको नदेखी ३ वर्षतक जेलको सजाय दिइयो।

यस प्रकार गोरखाका प्रजातन्त्रका सिपाहीहरूले लक्ष प्राप्त गर्न सकेनन् तर आफूलाई निर्भय राष्ट्रको बलिवेदीमा समर्पण गरे र गोरखाको गौरव राखे। २०१७ सालमा प्रजातन्त्रको अपहरण पछि स्थापित पञ्चायत व्यवस्थाको ३० वर्षीय निरंकुश शासन समयमा गोरखाको राजनैतिक सामाजिक परिस्थितिले आफ्नो पुरानो सामन्ती संस्कार र संस्कृतिलाई नै ग्रहण गऱ्यो। गोरखाको राजनैतिक सामाजिक स्थितिलाई प्रशासनले नेतृत्व र निर्देशन दिन थाल्यो। चाटुकार जासुस र प्रतिक्रया वादीहरू राजनीतिको मैदानमा उत्रिए तर राजनीतिज्ञता र आचरणको निर्वाह गर्न सकेनन्। राजनैतिक बहस र विरोधको संस्कार हुर्कन पाएन। प्रजातन्त्र र चेतनाको आवाजलाई दवाउन प्रशासनका पछि पछि कथित राजनैतिक व्यक्तिहरू लागे। गोरखा जिल्ला राजनैतिक र र प्रशासनिक भ्रष्टाचारको नमूना बन्न गयो, यस्तो शून्यता र उकुस मुकुसले नयाँ पिढीमा छटपटाहट र विद्रोह जन्मन थाल्यो। २०२८ बैशाख १ मा गोरखा अपि पिपलमा पहिलो पल्ट सीताराम अधिकारी, सुमन थापा कृष्ण राना, शुकदेव दवाडी, भीमप्रसाद दवाडी, कृष्ण खनाल, चन्द्रकान्त अधिकारी, विष्णुभक्त मरहट्टा, झंक नाथ देवकोटा, ऋषिराम शर्मा, काशीनाथ मरहट्टा, ईश्वरी कापकोटा र घनप्रसाद ढकाल रहेको १३ सदस्यीय तरूण दलको गठन गरियो। २०२६ सालको पौष १ गते धन्दै एक दशकको मौनतालाई तोड्दै ऋषिराज पाण्डे र राममणि धितालको नेतृत्वमा प्रथम पटक पौष १ गतेको विरोधमा कालो दिवस भनी जिल्लाका विभिन्न ठाउँमा पर्चा वितरण भयो। यसमा श्याम कुमार श्रेष्ठ, प्रेम कुमार श्रेष्ठ, नारायण थापा, झंकनाथ न्यौपाने, केदार अकेला र गिरीराज पोखरेल आदि युवकहरूले सक्रिय भाग लिनु भयो। यस पर्चा वितरणले जिल्लामा ठूलो हलचल ल्यायो। गोरखामा प्रशासन र जासुस तथा प्रतिक्रयावादीहरूको मनमा ढ्याङ्ग्रो ठोक्यो। केही स्थानीय प्रतिक्रयावादी जासुसहरूले होमनाथ ढकाल जो कट्टर प्रजातन्त्रवादी बुद्धिजीवीलाई पोल गरे। प्रशासनले आफ्नो शत्रुलाई ठीक गर्ने नाममा प्रहरीको ज्यादतीद्वारा उहाँको हत्या टानामित्र गऱ्यो। यसका विरूद्ध जिल्लाका सबै भागबाट व्यापक आक्रमण र विरोध व्यक्त गरियो। उहाँलाई निरंकुश व्यवस्थाका विरूद्ध लड्ने शहीदको श्रद्धा जनताबाट मिल्यो। जिल्ला भित्र भूमिगत रूपमा कृष्ण प्रसाद न्यौपानेको नेतृत्वमा ऋषिराज पाण्डे, राममणि धिताल, भीमसेन बल्छौडी र यो लेखक जस्ता नवयुवकहरूलाई पनि तरूण दलको सदस्यता दिलाइयो र भारतमा निर्वासित नेता विश्वेश्वरप्रसाद कोइरालासँग सम्पर्क स्थापना गरियो। यस काममा लमजुङ्गका दिलबहादुर घर्तीले गोर्खाली युवकहरूलाई सहयोग गर्नु भयो। नेपाली कांग्रेसको भूमिगत इकाई पनि उमानाथ देवकोटाको संयोजकत्वमा गोप्य रूपमा जिल्लामा कार्यरत थियो। यसैं समय बनारसबाट ऋषिराज पाण्डे गोरखामा भू. पू. सैनिकको विवरण संकलन गर्न र गोरखाको प्रशासनिक सुरक्षा सम्बन्धी व्यवस्था अध्ययन गर्न जिल्लामा आई सम्बन्धित अध्ययन गरी फर्कनु भयो। तर उहाँको अध्ययनको कार्यान्वयन विभिन्न कारणहरूबाट कार्यान्वयन हुन पाएन। उता राजधानी काठमाडौंमा पनि प्रजातन्त्रको पुर्नस्थापनाको अभियानहरू नवयुवकहरूले जारी राखेका थिए। २०२७ सालमा नेपाल विद्यार्थी संघको स्थापनाले विद्यार्थी जगतमा एउटा ठूलो हलचल ल्यायो। यस संघ स्थापना गर्ने गोरखा जिल्लाबाट काठमाडौंमा अध्ययनार्थ रहनु भएका दुईजना मेधावी तरूणहरू पनि लाग्नु भएको थियो। टीका पोखरेल र चिरञ्जीवी वाग्ले। यी दुई तरूणहरूको माध्यमबाट काठमाडौंमा रहेका गोरखाली विद्यार्थीहरू विभिन्न पेशाका व्यक्तिहरू समेतमा प्रजातन्त्रको महत्व र नेपाली कांग्रेसको इतिहासको परिचय नयाँ पिढीमा पुग्न थाल्यो। प्रजातान्त्रिक समाजवादको स्थापनाद्वारा

नयाँ नेपालको कल्पना साकारपार्न र राष्ट्रियताको मज-बुतीको लागि चिरञ्जीवी वाग्लेको अनवरत भोग्नु परेको दुःख यातना र जेल नमनले जिल्लाका नयाँ पुस्तामा उत्सर्ग र कुर्बानीको साहस पैदा गरायो। यसै समयताका काठमाडौंमा कार्यरत विद्यार्थीहरूद्वारा संस्थापना गरिएका गोरखा नाटक समिति र गण्डकी छात्र समिति जस्ता सामाजिक संस्थाहरूद्वारा पनि प्रजातान्त्रिक राजनैतिक आन्दोलनलाई भरमद्दत पुऱ्याउने अभियान चलाइयो।

२०३३ सालमा जननेता विश्वेश्वर प्रसाद कोइराला निर्वासित त्यागी राष्ट्रिय मेल मिलापको नारा दिई प्रजातन्त्रको पुनःस्थापनाको उद्देश्यले नेपाल फर्कनु भएपछि देशको राजनीतिले मुठभेड त्यागी वार्ता र बहस-लाई अगाडि बढाएकोले २०३६ सालमा पञ्चायतको राजनीतिक असफलताको कारण भावी राजनैतिक पद्धतिलाई जन स्वीकृत बनाउन जनमत संग्रह गराउने श्री ५ वीरेन्द्र बाट कदम चालियो। जनमत संग्रहमा प्रजातान्त्रिक समूहको तर्फबाट प्रजातन्त्र पक्षको लागि जनमत तयार गर्न रोहिणीदेव भट्टको संयोजकत्वमा एक बहुदलीय प्रचार समिति खडा गरियो। जसमा जिल्लाका सबै पुराना तथा नयाँ नेपाली कांग्रेसका पक्षधरहरू सामेल हुनुहुन्थ्यो। बहुदलवादीहरू प्रजातन्त्रको पुनर्स्थापनाको लागि जनता-लाई उत्साहित र आन्दोलित गर्न चाहन्थे भने निर्दलीय पञ्चायतका प्रतिक्रियावादीहरू जनमत संग्रह राजा र विश्वे-श्वर प्रसाद बीचको रोजाइ भनेर प्रचार गर्थे। अर्कोतर्फ हाल मशाल समूहमा रहेका अग्रज जनमत धोका हो, बहुदलीय प्रजातन्त्र र निर्दलीय पञ्चायत एकै हुन् भनेर भ्रम फिजाउँदै अराजकता र हिंसक व्यवहारमा आफूलाई अग्रसर गराउँथे र प्राबिर पञ्चायत भन्दा बहुदल एक पाइला अगाडि हो भन्ने बाहना बनाई निर्दलीय पहेंलो रंगमा छाप लगाउन यो तत्त्व अग्रसर रह्यो। यसपटकको प्रजातान्त्रिक आन्दोलनका विरासना यथास्थिति रूचाउने प्रतिक्रियावादी र वाम विचार राख्ने उग्रवादीहरूको समान लक्ष्य बन्न गयो। जनताको प्रजातान्त्रिक दैर्घिक चाहनाले यस पटक पनि पछाडि धकेलिनु पऱ्यो। जिल्लामा राजनै-तिक स्वतन्त्रताको वातावरण मात्र होइन सामाजिक र रचनात्मक कामहरू पनि बन्देजमा रहन थाले। बुद्धारो-पण जस्ता राष्ट्रका सामु रहेका अनिवार्य कामहरू पनि जनताले गर्न पाएनन्। बुद्धिजीवीहरूलाई विभिन्न प्रतिशोध र पूर्वाग्रह राखी निरंकुश व्यवस्थाले शोषण गऱ्यो। जनमत संग्रहको समाप्ति पछि जन चेतनाको लागि नेपाली कांग्रेसले अधिराज्यका विभिन्न अञ्चलहरूमा शिक्षण शिविरहरू आयोजना गऱ्यो। गण्डकी अञ्चल क्षेत्रको शिक्षण शिविर गोरखा जिल्लाको मुसुण्डीमा आयोजना भयो। यसमा नेपाली कांग्रेस दलका सर्व शीर्षस्थ नेताहरू तथा विभिन्न जिल्लाका कार्यकर्ताहरूको सप्ताह व्यापी कार्यक्रम संचालन भयो। यस कार्यक्रमले जिल्लामा जनजागरण र नेपाली कांग्रेसको त्याग र तपस्याको जनतामा बोध गरायो।

मुलुकमा प्रजातन्त्र र मानवाधिकारको अभावको कारणले नेपाली कांग्रेस उकुश मुकुशको स्थितिमा पुग्यो। अतः २०४२ साल जेष्ठबाट नेपाली कांग्रेसले मुलुक भर प्रजातन्त्रको पुनःस्थापनाको माग गर्दै सत्याग्रहको आन्दोलन चलायो। यस राष्ट्रव्यापी महायज्ञमा गोरखाले पनि आफ्ना योद्धाहरूलाई अगाडि सार्‍यो। पं रोहिणी देव भट्ट, टीका दत्त पोखरेल, चिरञ्जीवी वाग्ले, चन्द्रप्रसाद न्यौपाने, चिन काजी श्रेष्ठ, चेत मान श्रेष्ठ, बुद्धि प्रसाद लामी-छाने, हरिलाल जोशी, राममणि घिमिरे, किरण श्रेष्ठ जीवनप्रेम श्रेष्ठ, बुद्धि श्रेष्ठ, बाबुराम देवकोटा, राम बाबु ढकाल, दलसिंह विश्वकर्मा, दण्डपाणि अमला, शंकर पन्त आदि वृद्ध देशभक्त नेपाली कांग्रेसका नेताहरूले भाग लिनु भयो। काठमाडौंबाट पनि उद्धव भट्ट, नव-राज कट्टेल दामोदर पोखरेल, अरविन्दमणि घिमिरे सुरेन्द्र देवकोटा मनराज बस्ती आदिले ने.वि संघका विद्यार्थीहरू-ले गोरखाको प्रतिनिधित्व गर्न सत्याग्रहमा आफ्नो गिर-फ्तारी दिनु भयो सत्याग्रहका मागहरूलाई निरंकुश व्यव-स्थाले दमन गरे पनि यसले देशभक्तहरूमा जोस र जाँगर थप्यो निरङ्कुश व्यवस्थाका पोठेभक्त र अवसरवादीहरूको



मनोबल यस सत्याग्रहले ह्रास गरायो। नेपाली कांग्रेसले भने आफ्नो इतिहासले सुम्पेको दायित्वको इमानदारीसाथ वहन गऱ्यो।

कार्तिक २०–२१, २२ गतेको ने.कां को केन्द्रीय बैठकले जन-आन्दोलन गर्ने निर्णय गऱ्यो। वि. सं. २०४६ साल माघ ५–६ र ७ गते काठमाडौंमा भएको नेपाली कांग्रेसको राष्ट्रिय सम्मेलनले तानाशाही विरुद्ध अन्तिम चढाइ गर्ने उद्देश्य राखी संवैधानिक राजतन्त्र र बहुदलीय प्रजातन्त्रको पुनर्स्थापनाको माग पूरागर्न राष्ट्रव्यापी जन आन्दोलन फागुन ७ गतेबाट गर्ने ऐतिहासिक घोषणा गऱ्यो। यस घोषणाको पक्षमा मुलुकका अरू पनि प्रजा-तान्त्रिक राजनैतिक समूहरूले सहमति जनाए। घोषित समयमा अधिराज्यभर एकसाथ जन आन्दोलनको आँधी चल्यो। फागुन ७ गतेको शुभ मुहूर्तमा नेपाली कांग्रेसका नेता चन्द्र प्रसाद न्यौपानेले ४ तारा अंकित नेपाली कांग्रेसको झण्डा फहराउँदै गोरखाको सदरमुकाम पोखरी थोकमा आन्दोलनको नेतृत्व गर्दै उभिनु भयो। यसपछि विभिन्न कार्यक्रमहरू गोरखा जिल्लाका विभिन्न भागमा हुन थाले, आरूघाट बजारमा हरिलाल जोशीले आन्दोलनको नेतृत्व गर्दै गिरफ्तारी दिनु भयो। उता गणेश देव-कोटाले गोरखाको पश्चिम पालुङटारमा आन्दोलनको ज्वाला बाल्नु भयो। छोप्राक, जौबारी, गोह्रोरे, लप्सी-बोट, ध्याम्पेशाल, आँपपिपल, आदि ठाउँमा नेपाली कांग्रेसका कार्यकर्ता तथा विभिन्न छात्र संगठनका विद्यार्थीहरूबाट जिल्लामा आन्दोलन जारी राखियो। बुद्धि प्रसाद लामिछानेले अत्यन्त कुशलतासाथ बतासे क्षेत्रमा आन्दोलनका गतिविधि संचालन गर्नु भयो र जिल्लामा प्रशासन र तानाशाही व्यवस्थाका पक्षधरहरू त्राही त्राही भए।

ने. वि. संघ गोरखा काठमाडौं सम्पर्क समितिले ३०० कार्यकर्ता काठमाडौंमा तयार गऱ्यो।

२०३० सालको पूर्वार्धतिर संस्थापित गोरखा नाटक समिति र गण्डकी छात्र समिति नामक काठमाडौंमा अध्ययनरत छात्रहरू तथा विभिन्न पेशा एवं व्यवसायमा रहेका गोरखालीहरूका सामाजिक संस्थाहरूको पनि प्रजातन्त्रको संवर्धनमा महत्वपूर्ण योगदान रहेको थियो।

रामचन्द्र पोखरेलले काठमाडौंबाट गोरखाको जन आन्दोलनमा सक्रिय सहयोग पुऱ्याउनु भयो। दण्डपाणि अमलाले आन्दोलनको प्रचार सामाग्री जिल्लामा पुऱ्याउने काम गर्नु भयो। तर आखिरमा उहाँ प्रहरीद्वारा पक्राउ पर्नु भयो। गोरखा जिल्लाका नेपाली कांग्रेसका अध्यक्ष चिनकाजी श्रेष्ठ आन्दोलन शुरू हुनु पूर्व नै प्रहरीको पक्राउमा पर्नु भयो। धेरै कांग्रेस नेता तथा कार्यकर्ताहरू भूमिगत रूपमा आन्दोलन संचालन कार्यमा हुनुहुन्थ्यो।

पक्राउ परेका व्यक्तिहरूलाई थुनामा प्रहरी र प्रशासनबाट अत्यन्त कडा सजाय र व्यवहार भयो। काठमाडौं पढन बसेका गोरखाका विद्यार्थीहरू रामचन्द्र पोखरेल, उपेन्द्र वाग्ले, अनन्त न्यौपाने, कृष्ण लामिछाने श्याम पाण्डे, शेषनारायण श्रेष्ठ, तारा पुडासैनी राजन भट्ट, द्वारिका यमगाई आदि विद्यार्थीहरू तथा तरुणहरू आन्दोलनका क्रममा थुनामा पर्नु भयो। गोरखामा नै अनन्त घिमिरे भरत भट्ट आन्दोलनको क्रममा थुनामा पर्नु भयो। नवलपरासीबाट थानेश्वर देवकोटाले गिरफ्तारी दिनु भयो। यस प्रकार आन्दोलनले गोरखामा विस्तारै तर मजबुत जरा गाड्दै गयो। नेपाली कांग्रेसको आह्वानलाई सबै प्रजातान्त्रिक शक्तिहरूले सहानुभूति र सहयोग गरे।

चितवनमा गोरखाका होनहार युवक राजेश बानियाले उत्सर्ग गर्दै जनआन्दोलनका शहीदहरूको पंक्तिमा आफ्नो नाम दर्ता गराउनु भयो। २०४६ सालको आन्दोलनले गोरखाली सपूतको पनि रगत ग्रहण गरेर गोरखाको ऐतिहासिक परम्पराको निर्वाह गऱ्यो। यिनै शहीद तथा देशभक्तहरूको रगत र पसिनाले २०४६

सालको राष्ट्रिय जन आन्दोलनले मूर्त रूप ग्रहण गर्‍यो।

गोरखाबाट काठमाडौं अध्ययनार्थ बसेका तरूण विद्यार्थीहरूले पनि तरूण विद्यार्थी समुदायमा आफ्नो प्रतिभा र योग्यताको राम्रो प्रदर्शन गरेर प्रजातान्त्रिक आन्दोलनको जिल्लाको इज्जतलाई कायम राखे। काठमाडौंका प्रतिष्ठित अध्ययन केन्द्रहरूमा विद्यार्थी समुदायको नेतृत्व गरेर उमा रेग्मी, कृष्ण भट्ट, सुरेन्द्रराज पाण्डे, कमलापन्त, सुरेन्द्र देवकोटा, नवराज कट्टेल, सुमन कट्टेल, तोरण घिताल आदि छात्रहरूले ने. वि. संघको आदर्श प्रजातन्त्रको लक्ष्यलाई मद्दत पुर्‍याउँदै नेतृत्वको विकास गरे। गोरखा काठमाडौं सम्पर्क समितिले चिराग पत्रिका सम्पादन गरी प्रजातन्त्रको शंखघोष गर्‍यो। जन आन्दोलन २०४६ को तयारीको लागि पर्चा पम्पलेट तयार पारी व्यापक रूपमा जिल्लाका विभिन्न भागहरूमा वितरणको व्यवस्थाबाट जन चेतनाको अभिवृद्धिमा मद्दत गर्‍यो।

बुद्धिजीवी प्राध्यापक शिक्षक तथा राष्ट्रसेवकहरू-बाट पनि आफ्ना आफ्ना ठाउँबाट कर्तव्यहरूको पालना साथै प्रजातान्त्रिक समाजको समुत्थानमा योगदान गरेका कुराहरूलाई पनि बिर्सन नहुने छ। परन्तु यो सानो प्रयासमा ती वर्गहरूबाट निर्वाह भएका योगदानहरूलाई पर्याप्त प्रकाश दिन नसकिएकोले त्यस सम्बन्धमा खोज र चर्चालाई पछिका प्रयत्नहरूमा समावेश गर्ने उद्देश्य छ।

अनेकौं ज्ञात अज्ञात शहीद र योद्धाहरूको त्याग र तपस्याबाट मुलुकमा प्रजातन्त्रको पुनर्प्राप्ति भएको छ। यस उपलब्धिले शहीद तथा योद्धाहरूको सपना साकार भएको छ। परन्तु गोरखा जिल्लामा प्रजातन्त्र भन्नु व्यापक अर्थमा जन चेतनाको अभिवृद्धि सामन्ति संस्कारको उन्मूलन तथा नवीन प्रजातान्त्रिक तथा सामाजिक संस्कृतिको स्थापना हो। यसको आवश्यक समाजवादी चिन्तन तथा जीविकाका खोजहरू आवश्यक तत्वहरू हुन्। उल्लेखित पक्षहरूमा नयाँ प्रजातान्त्रिक पुस्ताको ध्यान र योगदान जरूरी छ। आफ्ना ओजस्वी अग्रजहरूको उत्सर्ग र बलिदानबाट शक्ति ग्रहण गर्नु पर्दछ। यो अभिभारा गोरखालीहरूले उठाउन नसक्ने कुनै कारण छैन। किन भने जसको सुन्दर इतिहास छ भविष्यको सही रेखा उसैले कोर्न सक्दछ।





# नयाँ नेपालमा समाजवाद कि साम्यवाद

–भरत प्रसाद देवकोटा
सह प्राध्यापक (विकास अर्थशास्त्र)

## १. परिचय

यो एक व्यक्तिगत लेख हो। यहाँ उल्लेखित वाद (मत। सिद्धान्त) हरूको उपादेयता सकेसम्म नियालेर लेखाजोखा गर्ने प्रयत्न गरिएको छ। यस लेखको खास उद्देश्य भविष्यमा सबै नेपालीको सकेसम्म हित गर्ने कुन राजनीतिक व्यवस्था उचित हुन्छ भन्नेबारे लेखकको विचार राख्नु हो।

## २. बात तीन वादको

### २.१ पूँजीवाद

पूँजीवादमा उत्पादनका साधनहरू र उत्पादित मालसामानहरूको वितरण व्यक्तिगत स्वामित्वमा रहन्छ। यस व्यवस्थामा उत्पादन कार्यमा जमिन, श्रम आदिको भन्दा पूँजीको महत्व बढी हुन्छ। त्यसैले सम्पत्ति वा पूँजी हुनेले मुनाफा कमाउन र व्यक्तिगत सम्पत्तिको भोगचलन गर्न पाउँछ। यस्तो अर्थतन्त्रमा उद्यमीले मुनाफा कमाउन र त्यसको उपभोग गर्न पाउँछ। यस व्यवस्थामा सरकारी नियन्त्रण ज्यादै कम हुने हुँदा उत्पादनका साधनहरूको बाँडफाँड बजारको माग र आपूर्तिको तालमेलबाट हुन्छ। तर आजको विश्वमा विशुद्ध पूँजीवाद अमेरिका–बेलायतमा समेत पाइन्न। यस्ता देशहरूमा पनि सरकारी नियन्त्रण बढेको छ र मुनाफा तथा सम्पत्ति कर जस्ता वित्तीय उपायहरूद्वारा पूँजीपतिबाट रकम लिएर गरिबवर्गको हित गर्ने कार्यमा सरकारले खर्च गर्छ।

### २.२ साम्यवाद:–

साम्यवादमा सबै सम्पत्तिमा, खासगरेर उत्पादन-का प्रमुख साधनहरूमा, समाजका सबै व्यक्तिहरूको बराबर अधिकार रहन्छ। यस व्यवस्थामा श्रमको ठूलो स्थान हुन्छ। यहाँ श्रमिकले आफ्नो क्षमता अनुसार काम गर्छ तर ज्याला वा आम्दानी आफ्नो आवश्यकता अनुसारको पाउँछ। यद्यपि धेरै समय अघि अरस्तु (Aristotle) का गुरु प्लेटो (Plato) को रिपब्लिक नामक पुस्तकमा आदर्श राज्यको सिद्धान्त प्रतिवाद गरिएको भए तापनि आधुनिक साम्यवादको सिद्धान्त जर्मन कार्ल मार्क्सले १९औं शताब्दीको मध्यमा प्रतिवाद गरेका हुन्। मार्क्सवाद अनुसार राज्य व्यवस्थामा श्रमले उचित आम्दानी पाउँछ र पूँजीवाद तथा सामन्तवादलाई संघर्षबाट हटाएर वैज्ञानिक साम्यवादको स्थापना हुन्छ। यसै सिद्धान्तलाई लेनिनले सन् १९१७ को अक्टोबर क्रान्ति पछि सोभियत रूसमा व्यवहारमा उतारे। वर्ग संघर्षको आधारमा आएको यस साम्यवादमा रूसको सबै सम्पत्ति रूसी समाजको अधिकारमा रहन गयो र सार्वजनिक उत्पादन, प्रबन्ध र उपभोगमा सामुदायिक अधिकार कायम गरियो। अतः रूसी अर्थतन्त्रमा आर्थिक असमानता हटाएर शोषित वर्गलाई सशक्त पार्ने नीति लिइयो। सिद्धान्ततः यस व्यवस्थामा सर्वहारावर्ग (निम्न तहको श्रमिक वर्ग वा गरीब) को अधिनायकत्व (राज्य शासनको सबै अधिकार श्रमिकको हातमा हुनु) रहन्छ।

### २.३ समाजवाद

समाजवादमा प्रजातान्त्रिक परिपाटी रहन्छ र आर्थिक व्यवस्था आर्थिक असमानता हटाएर जाने गरी संचालन गरिन्छ। त्यसैले यसलाई प्रजातान्त्रिक समाजवाद भनिन्छ। यस्तो आर्थिक-राजनीतिक व्यवस्थामा देशको सम्पत्तिमा एकलौटी अधिकार (एकाधिकार)

हुन दिइन्न र उत्पादन तथा उत्पादनका प्रमुख साधनहरू-मा समाजका सबै व्यक्तिहरूको साझा अधिकार रहन्छ। समाजवादी राज्य व्यवस्था गरीबहरूको हित हुने गरी सञ्चालन गरिन्छ। तर यस व्यवस्थामा कुनै वर्ग विशेषको अधिनायकत्व रहन्न। यस व्यवस्थामा साम्यवादको वर्ग संघर्षको सट्टा सामाजिक परिपाटीमा क्रमिक सुधार ल्याएर समाजका हरेक वर्गको कल्याण हुने गरी राज्य व्यवस्था संचालन हुन्छ। अर्थात् यस्तो व्यवस्थामा कसैलाई काखा र कसैलाई पाखा गरिन्न। त्यसैले समाजवादी प्रजातान्त्रिक राज्य व्यवस्थामा अन्य वादहरूमा विश्वास गर्ने दलहरू पनि रहन सक्छन् र आवधिक चुनावमा भाग लिएर बहुमत प्राप्त गरी निश्चत अवधिको लागि राज्य व्यवस्था सञ्चालन गर्न सक्छन्। बेलायत, फ्रान्स, पश्चिम जर्मनी जस्ता देशहरूमा यस्तो वादमा विश्वास गर्ने दलहरूले समय-समयमा सरकार गठन गरेर राज्य व्यवस्था चलाएका छन्। अमेरिकाको "डेमोक्र्याटिक पार्टी" यस्तै विचार राख्ने दल हो।

## ३. वादहरूको राज्यको वर्तमान स्थिति

### ३. १. पूँजीवादी व्यवस्था

युरोपमा आएको औद्योगीकरणले सामन्तवाद (जमिनदारको मोहीमाथि पूरा अधिकार रहने पद्धति) लाई विस्थापित गरेर पूँजीवादी राज्य व्यवस्था ल्यायो। विशुद्ध पूँजीवादी व्यवस्थामा सम्पत्ति माथि केही व्यक्तिहरूको अधिकार रहन्छ। खुला बजार भएको अर्थतन्त्र हुने हुँदा प्रतिस्पर्धा गरेर पूँजीपतिहरू धन सम्पत्ति बढी जोड्ने प्रयत्न गर्दछन्। त्यसैले औद्योगिक क्रान्तिपछि पूँजीपतिहरू होडबाजी गरेर धन-सम्पत्ति थुपार्न पट्टि लागे भने श्रमिक वर्गले उचित पारिश्रमिक नपाएर त्यस वर्गको आर्थिक अवस्था बिग्रँदै गयो। कार्लमार्क्सले यही पृष्ठभूमिमा साम्यवादको सिद्धान्त प्रतिपालन गरे। उनका अनुसार पूँजीवादी व्यवस्थामा प्रतिस्पर्धात्मक बजार हुने हुँदा पूँजीपतिहरूमा धन सम्पत्ति बढी जोड्ने होडबाजी हुन्छ। धन सम्पत्ति बढी जोड्न पूँजीपतिले बढी बचत वा मुनाफा कमाउन्न सक्नुपर्छ। कार्लमार्क्सको विचारमा बचत जन-श्रमले मात्र दिन्छ र सो बचत श्रमिकलाई कम पारिश्रमिक दिएर गर्न सकिन्छ। त्यसैले पूँजीपतिले मुनाफा बढी लिन जनश्रम शोषणबाट आएको मुनाफा जन श्रम बचत गर्ने मेशिनरी स्थापनामा लगाउँछ। श्रमबाट मात्र बचत हुने हुँदा यसबाट मुनाफा दर घट्न जान्छ। प्रतिस्पर्धात्मक परिस्थितिमा बढी मुनाफा लिन पूँजीपतिले एकाधिकार (Monopoly) गर्छ र धन-सम्पत्ति केही व्यक्तिमा मात्र थुप्रिन जान्छ। अर्को तिर मुनाफा कायम गर्न श्रमिक वर्गको क्रयशक्ति घटाउनु पर्छ। प्राविधिक परिवर्तनले गर्दा जन-श्रम बचत गर्ने मेशिनरीको प्रयोगले बेरोजगार बढ्न जान्छ र श्रमिक वर्गमा वर्ग संघर्ष गर्ने स्थिति खडा भएर पूँजीवादको पतन हुन जान्छ।

औद्योगिक क्रान्ति पछिको यूरोपमा श्रमिक शोषण बढेर श्रमिक आन्दोलनहरू भए। रूसमा लेनिनद्वारा साम्यवाद राज्य व्यवस्था आयो। तर पश्चिमी यूरोप तथा अमेरिका जस्ता देशहरूमा पूँजीवादी व्यवस्थामा सुधार ल्याएर प्रजातान्त्रिक शासन व्यवस्था कायम गरे। हाल त्यस्ता देशहरूमा विशाल निजी संस्थानहरूको विकास भएको छ जसको विस्तार सारा विश्वमा गरिएको छ। छोटकरीमा पूँजीवादी व्यवस्थाले प्रजातान्त्रिक परिपाटीमा आफूलाई गतिशील बनाई आर्थिक उन्नतिमा अगाडि अगाडि बढिरहेछ।

### ३:२ साम्यवादी व्यवस्था

जार शासन विरुद्धको क्रान्तिमा कुटिलतापूर्वक अगाडि आएर लेनिनले राज्य शासन आफ्नो दलको कब्जामा लिएर रुसमा सर्वहारावर्गको अधिनायकत्व रहने साम्यवादी व्यवस्था स्थापना गरे। उनले विश्वमा सशस्त्र क्रान्तिको नारा दिए। उनले अनुशासित सशक्त क्रान्तिकारीहरूबाट त्यस्तो क्रान्ति चलाउनु पर्ने कुरा गरे। सन् १९०३ मा लेनिनको नेतृत्वमा संगठित साम्यवादी दलको नेतृत्वमा १९०७ देखि स्थापित साम्यवादी व्यवस्थामा प्रेस स्वतन्त्रता र व्यक्तिगत वाक्स्वतन्त्रता रहेन। सोभियत संघको साम्यवादको असर पूर्वी



यूरोपका अन्य देशहरूमा पर्‍यो। यसको असर विस्तारै विश्वमा फैलिंदै गएर एशियाको विशाल देश चीन सन् १९४९ मा साम्यवादी शासन व्यवस्थामा गयो। सिद्धान्ततः यस प्रक्रियामा रुस र चीन जस्ता देशहरूमा लाखौं मानिसहरू खासगरेर पूँजीपति र बुद्धिजीवीहरू मारिए। चीनका कतिपय पूँजीपतिहरू र बुद्धिजीवीहरू देश छोडेर विदेश लागे। आजको आर्थिक सम्पन्नतामा पुग्न सफल हङ्कङ्ग सिङ्गापुर र ताईवानमा यिनीहरूको कम योगदान छ भन्न सकिन्न। सर्वहारा वर्गको अधिनायकत्वको नाममा संचालित शासन व्यवस्थामा बुद्धिजीवी तथा कुशल प्रशासकहरूको दयनीय स्थिति मात्र पारिएन कतिले त ज्यान नै गुमाए।

प्रेस तथा वाक् स्वतन्त्रताको अभावमा संचालित शासन व्यवस्थाले राष्ट्रवादको नारा दिए तापनि शक्ति प्रदर्शनको भरमा मात्र शासन गर्न सकेको कुरा तिनानमेन मैदानको छात्र संहार पछिको चीन र बर्माको हालको अवस्थाले स्पष्ट गरेको छ। साम्यवादी देशहरूमा शासन राजनैतिक अधिकारको (Political authority नभई शक्तिको (Power) भरमा गरिने हुँदा उक्त शासनले जनताबाट विशद्ध अनुमोदन (legitimacy) पाउन सकेन। फलस्वरूप यस्ता शासन व्यवस्थाका देशहरूमा राजनीतिक असन्तुष्टी र आर्थिक समस्याहरु देखापर्न गए। रुसी राष्ट्रपति गोर्भाचोभको खुला नीति र आन्तरिक पुन: संरचनाले रुस देखि लिएर पूर्वी यूरोपमा मात्र हैन हाल पनि मोजाम्बिक एक दलीय शासन व्यवस्था ढल्न गए। माओ पछिको देङ्गको चीनमा निजीकरण तीव्र गतिले अगाडि बढाएर लगिएको छ। यसबाट के देखिन्छ भने साम्यवाद व्यावहारिक रूपमा टिकाउ हुने राज्य व्यवस्था होइन। त्यसको मूल कारण कुनै वर्गको नाममा शासक वर्गको स्वेच्छाचारिता रहनु हो। अत: अधिनायकत्व कुनै वर्गको पनि ठीक साबित अहिले सम्म हुन सकेन।

## ४. नेपालको ऐतिहासिक राजनीतिक लेखाजोखा

अन्यत्र जस्तै नेपाल पनि सामन्तवादमा धेरै समयसम्म रह्यो। यो अवस्था २०१५ सालसम्म नै रह्यो भन्न पनि सकिन्छ। विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय कारणले बहुदलीय व्यवस्था हुर्कन सकेन। बल्लतल्ल चुनाव भएर गठन भएको नेपाली कांग्रेसको सरकारलाई १८ महिना भित्र षड्यन्त्रपूर्ण ढंगले विघटन गराई पञ्चायत रूपी एक दलीय व्यवस्था ल्याइयो र यस अन्तर्गत ३० वर्षसम्म देशको राज्य व्यवस्था संचालन भयो। सत्ता प्राप्तिको लागि मात्र अधिनायकत्व कायम गरेर राज्य व्यवस्था संचालन गरिएकोले तीन दशकको अवधिमा नेपाल गरिब, झन गरीब देश भयो केही परिवार भने धनी, झन बढी धनी भए। निजी स्वार्थले प्रेरित भएर राज्य चलाइएकोले नेपाल यस्तै अधिनायकतन्त्र भएको दक्षिण कोरिया वा ताइवान जस्तो विकसित हुन सकेन। नेपालको आफ्नो इतिहास र विश्व घटनाक्रम हेर्ने हो भने अधिनायकत्वमा अनिश्चितता, कठिनता र जटिलता हुन्छ। बनेखुचेका साम्यवादी देशहरूको कुरा त के छिमेकी बंगलादेश र पाकिस्तान तथा दक्षिण कोरिया र ताइवानको राजनीतिक भविष्य त्यस्तै छ। चीनको राजनीतिक भविष्यलाई हेर्दा पनि त्यहाँ अधिनायकतन्त्र रहन नसक्ने बलिया लक्षणहरू देखापरेका छन्।

## ५ अहिले र पछिको नेपाल

२०४६ साल फागुन ७ गतेबाट नेपाली कांग्रेस-द्वारा थालिएको र संयुक्त वाममोर्चाद्वारा समर्थित जन आन्दोलनले चैत्रको अन्ततिर बहुदलीय व्यवस्थाको स्थापनाको लागि नेपालमा फेरि एक पटक ढोका खोल्यो। आन्दोलनको घोषित माग संवैधानिक राजतन्त्र र बहुदलीय व्यवस्थाको स्थापना थियो। सोही अनुरूप राजासंग सम्झौता भएर नेपाली कांग्रेसको नेतृत्वमा कार्यपालिका व्यवस्थापिका दुवैको अधिकार लिएर वाममोर्चा र राजाको प्रतिनिधि समेत रहेको अन्तरिम सरकार गठन भएको छ। हाल देश संक्रमणकालमा छ।

जन-इच्छा सबै वर्गको हित हुने गरी बहुदलीय व्यवस्था अन्तर्गत राज्य संचालन भई देश छिटो विकास गरोस् तथा समाज स्वस्थ बनोस् भन्नेछ। तर तथाकथित

धूर्त मानिसहरूमा कसरी शक्ति आफ्नो हात पार्ने भनेर आ-आफ्नौं वाक-घमण्ड जनसाधारण अगाडि तेर्स्याउने भन्ने छ। त्यसैले जनप्रिय देखिने कुटिलता अपनाएर नेपालमा हाल दलहरू धमाधम खोलिदै छन्। त्यसैले कथितवाद पनि माथ भएर फोस्रा राष्ट्रियता, सार्वभौम-सत्ताको दुहाइमा परिणत भएका छन्। धन्किने नाराले मात्र देश उन्नत हुने भए पूर्वी यूरोपले साम्यवाद छाडेर बहुदलीय व्यवस्थामा आउन पर्ने थिएन। माओ-लिन पियाओ वादको चीनमा शक्तिको आडमा साम्यवादको अधिनायकत्व कायम छ भने पनि अर्थ व्यवस्था बजार व्यवस्थाबाट चलाइन्छ र सरकारी संस्थानहरू मध्ये धेरै घाटामा चलेका छन्। अर्थात्, अहिले विश्वको मूल प्रवाह भनेको प्रतिस्पर्धात्मक राजनीतिक व्यवस्था हो जुन बहुदलीय व्यवस्थामा पाइन्छ। कसैको भनाइ यस्तो हुन सक्छ कि सामन्तवाद वा अर्धसामन्तवादबाट साम्यवादमा जाऔं र पछि चाहिएमा बहुदल व्यवस्थामा जाउँला। तर चीनको तिनन मेन मैदान र बर्मा·रोमानियामा घटेका घटनाले यस्तो बाटो बाङ्गो र धेरै असजिलो हुन्छ।

तर दु:खको कुरा छ कि तल्लो वर्गको मात्र हित गर्ने भनिएको साम्यवादीहरू शक्ति मोहमा परेर झन्नै डेढ दर्जन चिरामा बाँडिएका छन्। यस्तो किन? शक्ति प्राप्त गरी आफ्नो मात्र एकाधिकार राख्न। यसरी राजनीति शक्ति पाउने साधन बनाइनु उचित हुँदैन र भएको पनि छैन। यस्तो त हाम्रै ढलेको पञ्चायत व्यवस्थामा थियो र आखिरमा ढल्यो किनकि त्यसले जनसमुदायको विशुद्ध अनुमोदन पाएको थिएन।

छोटकरीमा भन्ने हो भने "वाद" त्यो हो जुन समयसापेक्ष्य गतिशील छ। सामाजिक वाद वा सिद्धान्तको त कुरै छाडौं भौतिक तथा रसायन शास्त्रहरूका सिद्धान्तहरू पनि प्रयोग/परीक्षणको आधारमा संशोधित परिमार्जित भएका छन्। मार्क्सवादको अवधारणामा पूँजीवाद प्रगतिशील हुन्छ र समाजवादले विस्तार गर्न सक्तैन भन्ने थियो। झन्नै एक शताब्दीको राज्य संचालनले सो हुन सकेन। त्यसैले हाल विशुद्ध पूँजीवादी व्यवस्था विश्वमा पाइन्न। उता साम्यवादी व्यवस्था भकाभक ढल्दैछ। अहिले विश्वमा कुनै न कुनै रूपमा समाजवादको छाप छ; किनकि यो बढी वैज्ञानिक हुनाको साथै प्रतिस्पर्धात्मक राजनीतिक वातावरणमा रहन्छ। त्यसैले यसलाई प्रजातान्त्रिकवाद भनिन्छ। भविष्यमा नेपालमा पनि यही समाजवाद उपयोगी हुनेछ। यस्तो व्यवस्थाबाट नै नेपालबाट गरिबी, बेरोजगारी र बिग्रँदो वातावरणका समस्याहरू हटाउन सकिने छ र स्वस्थ, गतिशील नेपाली समाजको निर्माण गरेर देशलाई विकसित पार्न सकिने छ। नेपालको लागि यही बाटो छोटो र सजिलो हुनेछ।





# युगपुरूष वी. पी. कोइराला

कुलेन्द्र पोखरेल

युवा शक्तिमा विश्वास तिमी गर्दथ्यौ
अनि सत्यलाई तिमी अङ्गाली हिड्थ्यौ
कर्तव्यले तिमीलाई चम्काई दियो
तिमी दायित्व उठेका थियौ ॥

पुलिस घेराभित्र तिमी नै थियौ
जेलको दु:ख पनि तिम्रै जीवन थियो
रूवाई देशवासीमा थियो
सामन्ती निर्मूल तिम्रै आवाज थियो ॥

षडयन्त्रका बल्छीहरू तिम्रै अगाडि थिए।
तर चुडाल्ने हतियार तिमी भित्रै थिए
विपनाकै रेखांकन तिम्रो सपना थियो
तिम्रो सपना अब विपना भएर आएको छ !॥

पिंजडा तिमीले सब तोडिदियौ
तिम्रै सपनाहरू आज देख्न पायौं
कोठा कोठामा रम्य तस्वीर तिम्रो
हामीलाई सचेत गराई रहेको छ॥

तिम्रो आवाज प्रजातन्त्रकै थियो
तिमीले राष्ट्रलाई उज्यालो बत्ती दियौ
तिमी सच्चा मार्ग दर्शक हौ
तिमी न्याय र सत्यका संरक्षक हौ ॥

# नेपाली जनसंघर्ष र प्राप्ति

–पण्डित श्री रोहिणी देव भट्ट
गोरखा

भारी ठूलो छ सकिदैन बोक्न।
जाँउ सबै यो जनक्रान्ति रोक्न॥
फर्काउँ तर्साउँ भनेर लागे।
अन्याय दूत स्वयं बिलाए ॥ १॥

एक मास पैह्लै सूचना गरेको।
फाल्गुण सातदेखि शूरू भयो त्यो॥
क्रान्ति बल्यो झलमल गाउँबेसी।
सपूत ब्युँझे दिलबाट रश्मि ॥ २॥

बढ्दैं गयो उन्नत रक्तधार।
अन्यायको आँत गल्यो विचार॥
बिवेकका शून्य भरेपशु ती।
राजा पुकार्दा पनि छैन साथी ॥३॥

घर्तिभरि सिर्जनको कथा छ।
यता उता हल्चल क्यै सुचाल छ॥
को सक्छ रोक्न गतिचक्र काल।
मुन्टिरहेछन् नरमुण्ड भाल ॥४॥

अधर्मीका हात र पाउ कक्रे।
माटा भरिका अभिशाप अल्पे॥
नयाँ सुनौला छ बिहान एँले।
जोगाउँ साँचो बलले सबैले ॥५॥

# परिवर्तन

– कमला पन्त
पद्मकन्या क्याम्पस
स्नातकोत्तर, प्रथम वर्ष

'आमा ! भोलि बिहानै कतै जानु छ। सबेरैं कता हिंडेछ भनेर खोज्ने हैन नि !'- छोराको कुरा सुनेर कहाँ जाने भन्न मन लागे पनि आमा चूप रहन्छिन्। आखिर कहिले उसले भनेको सुन्छ र ?

° ° °

'मार्ग, सम्पत्तिको मालिक तँ त होस् नि। हान् हान्' भोलिपल्ट भट्टि पसलमा जूवा खेलिरहेको युवक छोरालाई देखेर बूढो बाबुको रक्तचाप बढ्छ। के के न गर्ला भनेर उमेर ढल्किएपछि पनि जेठीतिरबाट छोरा भएन भनेर अर्को बिहे गरेर पाएको 'पुत्ररत्न' यति नालायकको निस्केला भन्ने सोचेकै कहाँ थिए र बूढाले !

अझै केही बिग्रेको छैन। बिहे गरिदिन पाए त पक्कै सप्रनेछ: छोरो, भनेर बाबुआमा आश्वस्त भए। त्यत्रो सम्पत्तिको एकलौटी मालिकलाई छोरी नदिने कसले ? उसको बाह्रमासे लत, रक्सी खाने बानी र अर्काका छोरी बुहारीलाई जिस्क्याई हिड्ने सारा दुर्गुणहरूप्रति आँखा चिम्लिएर कुन्तीका बाबुले छोरीलाई अन्माइदिए। .. उपलब्धि के थियो ? अनेक रडाको मच्चाएर श्रीमतीलाई कुट्ने विषयमा पनि उसले 'डिग्री' लियो।

अब सहने कति ? सम्झाउने कसरी र बाटो लगाउने कसले ? कुन्ती घर छोड्न बाध्य भइन्। मिहिनेतीको हजार काम भनेझैं कुन्तीले कतै गएर सीप सिक्ने निर्णय गरिन्। पुरातनदेखि आत्म विकास गर्ने मौका नपाएको नारी जातिको सहनशील कमजोरीप्रति फाइदा उठाउने काम एकातिर कुन्तीको पतिले अमानवीय तरीकाले गरिसकेको थियो भने अर्कातिर 'छोरी' हुनाको पुरस्कार स्वरूप कुन्तीका बाबुले नाबालक उमेरमै ब्या गरिसकेका थिए।

अहिले चाहिं छोराको विवाह गरिदिएकोमा बाबु आमालाई पछुतो नहुने कुरै भएन। त्यसमाथि बुहारी निर्दोष, मिहिनेती र कुशल भएर पनि सीप सिक्ने धुनमा घर छोडेर अन्यत्र गई बस्न बाध्य भएकीमा उनीहरू मरे तुल्य थिए। यो कुन्तीको जीवनप्रतिकै सामाजिक व्यंग्य, बाबुआमाकै असावधानीपूर्ण निर्णयको कुरूप सिर्जना थियो।

अब त स्थिति सुल्टला कि। जे भए पनि छोराले यो वर्ष एस. एल. सी. कटाएछ। कुन्ती पनि गाउँमै महिलाहरूलाई बुनाईको तालीम दिने प्रशिक्षक बनेर फर्किएकी थिइन्। लोग्नेको बानी सुध्रिएला भन्ने ठानी शहरमा पढ्न पठाउने कुरामा जोड गरिन्। मर्ने बेलामा सुनपानी देला भनी पाएको एउटै छोरालाई आफूबाट टाढा पठाउन बाबुआमाको मनै थिएन। सात-सात वर्ष लगाएर पास गरेको र एउटी छोरीको बाबु बनिसकेको भए पनि पठ्ठो बनेर काठमाडौंको क्याम्पस जान पाइने मौका उसको लोग्नेले पनि गुमाउन चाहेन। यसलाई कुन्तीले सुन्दर भविष्यको स्वर्णिम प्रभात नठानी रहन सकिन।

जुन थालमा खायो उही थालमा चुठ्ने बानी पनि हुन्छ कसैको। त्यस्तै गर्न पछि परेन उसको लोग्ने। आत्मीय सम्बन्धले टाढा भए पनि नजीक तुल्याउँछ। तर कुन्तीको आत्मीयताले उसको लोग्नेको मानसपटलमा कुनै तात्पर्य बुझाउँदैन। उसले आफ्नो मनमा आधुनिक युवतीका लागि 'स्वागतम' को पर्दा टाँगिसकेको हुन्छ। आजीवन सँगै रहने वचनबद्धता पटक-पटक प्रस्तुत गर्न नहिच्किचाउने पढेलेखेकी केटीका अगाडि परिश्रममा विश्वास गर्ने भोलीभाली कुन्तीको उपहास हुन नदिनका लागि उसको लोग्नेमा नै कुन सदिएको मानसिकता



थियो र ?

निर्लज्जतापूर्वक युवतीलाई घरमा ल्याउँछ। 'विचरी कुन्ती।' विवाह के हो ? लोग्ने को हो र प्रेम के हो भन्ने बारे केही थाहा नपाउँदै भित्रिएर अनेक हण्डर खाँदै पनि लोग्नेलाई शहर पठाएर ठूलो मान्छे बनेर फर्केला भन्ने आशामा पर्खिएकी थिइन्। तर लोग्ने ? आशा गरे भन्दा 'निकै ठूलो' आयतन लिएर फर्कियो।

कुन्तीलाई संसार पढ्ने अर्को अध्याय शुरू भएको छ। निर्दोष र अनजान हुनगई भने उनको छोरीलाई पनि आधुनिक समाजमा संलग्न भएर रहनसक्ने बनाउनको सट्टा अर्को रङ्गमञ्चमा प्रवेश गर्ने प्रवृत्ति भएका मानिसको बाहुल्य भएको दुनियामा उनकै जस्तो स्थिति भोग्नुपर्नेछ। यसैले उनी ठान्छिन्, कसैको फोस्रो रवाफमा बाँच्ने कल्पनासम्म नगर्न् स्वाभिमानी बनोस् उनकी छोरी ! आफ्नै आत्मबल र पौरखमा बाँच्नेलाई कसैको व्यवहारले कुनै पल्टा खुवाउन सक्तैन। त्यसैले कुन्तीको जीवनमा उसको लोग्नेले चलाएको आधुनिकताको विषालु ग्याँस छाड्ने घातक उद्योगले पनि कुनै प्रदूषण गर्न सकेको छैन। त्यसो त नपाउनु पर्ने गोता उनले छोरी हुनाको प्राविधिक गल्तीका लागि आफ्नो बाबुबाटै पाएकी छिन्।

तर ती हलुवा खान पाउने धुनमा बालुवा चपाउन पुगेका बूढाबूढी ? सात-सातवटी दिदीहरूपछि जन्मिएको एउटै छोरो र उसका लागि उनीहरूले खोजिएका सुशील कुन्तीलाई दाँज्छन्। बुढाले कानैमा गएर ..... स्वर्गको ढोका खोल्ने साँचो लिएको ... .. भन्नु मात्रै ! ... बरु धर्तीमै स्वर्ग बनाउन सक्ने .. " यस्तै के के फुसफुसाउँछन्। बूढी धक मानेर समर्थन जनाउँदै आङमा रहेकी नातिनीलाई काखमा च्यापिछन्। नातिनीलाई आज आफ्नी हजूरआमाको काख निकै न्यानो महसूस भएको छ।

# नारी र उसको सामाजिक दायित्व

सुशीला वाग्ले
पद्मकन्या क्याम्पस
प्रमाणपत्र दोस्रो वर्ष

नारी र पुरुष जीवनरूपी रथका दुई पाङ्ग्रा हुन् । यो भनाइ चलनमा जति व्यापक छ त्यति व्यवहारमा सही देखा पर्न नसकेको कटु सत्यलाई कतै तकार्न सकिन्न । रथको दुवै पाङ्ग्राको अवस्थामा जब समानता देखा पर्दैन रथले लिने गति त्यतिनै दुर्भाग्य पूर्ण अवरोधमा अन्त्य हुन्छ । नारी र पुरुष भनेका पनि यस्तै हुन् यी दुवै बीचको पृथकताले स्वस्थ समाजको परिकल्पना निरर्थक नै हुन्छ । अतः समाजलाई सही गोरेटोमा हिडाउनको लागि यो दुवै बीचको असमान दूरीको अन्त हुनु नितान्त जरूरी छ ।

हाम्रो देशमा भर्खर प्रजातन्त्रको मिर्मिरे उदाएको छ । भनौं प्रजातन्त्र अहिले सानो शिशु जस्तै टुकटुकाउन थालेको छ । विश्वका अरू मुलुकले यसको सफलता भोगेरै आत्म सन्तुष्टिमा बाँचेका होलान्, यसको यथार्थ अर्थ बुझेका होलान् तर हाम्रो मुलुकको परिस्थितिलाई बिचार्दा हाम्रो नागरिकले यस प्रति निभाउनु पर्ने कर्तव्य अझ व्यापक छ । हाम्रो मुलुकका जनताले पञ्चायत कालीन निरंकुशतालाई कथित प्रजातन्त्र शब्दमा मात्र सुने व्यवहारमा उपभोग गर्न पाएनन् । देशको हरेक पक्ष निस्सासिंदो दलदलमा खस्यो । राजनीतिनै ठीक बाटोमा नरहेपछि त्यसको आपसमा बाँध्ने अरू क्षेत्रको अवस्था पनि स्वतः खस्किने नै भयो । अहिले देशको शैक्षिक र आर्थिक अवस्था ज्यादै टिठ लाग्दो अवस्थामा पुगेको छ । विद्यालयको पठन पाठन समाप्त गरी विश्वविद्यालयमा पुगिसकेका विद्यार्थीहरू स्वस्थ राजनीतिक व्यवस्थाका अभावले आफ्नो समाज प्रति अनुत्तरित जस्तै देखिन्छन् । प्रजातन्त्रको सच्चा अर्थबोध उनीहरूलाई त भइसकेको छैन भने अरू अनेकौं अभाव ग्रस्त ग्रामीण जीवनका निरक्षर व्यक्तिलाई त झन प्रजातन्त्र कुन चरीको नाउँ हो अत्तो पत्तो नै छैन । त्यसैले यो परिवर्तनलाई आत्मसात् गर्दै पढे लेखेका नारी र पुरुषले आफ्नो समाजप्रति निभाउनु पर्ने कर्तव्य धेरै छ । पञ्चायत कालीन दुर्भाग्य पूर्ण राजनीतिक कारणले हामी शैक्षिक, राजनैतिक र आर्थिक अवस्थामा विश्वका धेरै जनता भन्दा निकै तल छौं । प्रजातन्त्रको अभ्यास भएको पवित्र भूमिमा मानव अधिकारहरू राम्रो रूपमा फस्टाएका हुन्छन् । प्रजातन्त्र र मानववाद एक अर्काका पूरक हुन् । हाम्रो विगतमा न हामीले प्रजातन्त्र भोग्यौं न त मानव भएर नै बाँच्न पायौं । नारी वर्ग झन् यसमा बढी पिल्सिएर बाच्यौं ।

आजको यस परिवर्तनमा हामी नेपालीको हातमा प्रजातन्त्र प्राप्त भएको छ । हामी यसलाई भोग्न लालायित छौं । विवेकशील नेपालीले यसलाई जोगाएर जतनसाथ अघि बढाउन अझ खाँचो छ । प्राप्त प्रजातन्त्र खोसिएको इतिहासलाई हामीले राम्रोसंग मनन् गर्न सकेनौं भने यो 'हात्ती आयो हात्ती आयो फुस्सा' भन्ने भनाइ चरितार्थ नहोला र ? यो बाँदरको हातको नरिवल सिवाय अरू केही नहोला भन्न सकिन्न ।

प्रजातन्त्र लाखौ लाख सपूतहरूको बलिदानको वरदान हो यसलाई समाजका प्रत्येक नारी र पुरुषले बुझ्नु पर्दछ र यो उत्सर्गलाई फेरि भूलले आततायीहरूका हातमा सुम्पनु हुँदैन । तानाशाहीहरूका अत्याचारले कम्पित धर्तीले याचना गरेपछि नै यो धर्तीले शक्तिशाली



बल पाखुराबाट मुक्ति पाएको छ । यस निम्ति वीरङ्गनाहरू अर्पिएका छन्, वीरहरू समर्पिएका छन्, काख रित्तिएको छ । सिन्दुर पुछिएको छ, मायाँ चुडिएको छ । जन बल मूर्त रूपमा जागेपछि तानाशाहीका स्तम्भहरू ढलेका छन् । यो विश्वासको यात्रा यस माटोमा निरन्तर जारी रहन सकेमात्र हाम्रा चाहना र कामनाहरूमा नयाँ पालुवा पलाउन सक्छन् । अमर आत्माले शान्ति भेट्ने छ ।

पुरुष वर्ग नारी वर्गभन्दा केही बुझेको अवस्थामा समाजमा भेटिन्छ । नारीमाथि अनेक सामाजिक कुरीति र अन्धविश्वासका तँगाराहरू तेर्सिने हुनाले पनि यसो हुन गएको हो । घरधन्दा भेलोपातोमा मात्र सीमित नारी वर्गले समाजलाई राम्ररी बुझ्न र आफ्नो कर्तव्य त्यस प्रति निभाउन सकेका छैनन् । यो उनीहरूमा रहेको अज्ञानताले भएको हो । नारी वर्गलाई अज्ञानको अँध्यारोमा गुम्स्याउने पुरुष वर्ग यसमा केही दोषी होला भने यस्तो परिस्थितिलाई बढवा दिने राजनैतिक सामाजिक अवस्था झन् दोषी ठहर्छ । समाज नारीको स्यहार विना अपाङ्ग बन्छ भने उसले पुरुषको हातमा हात मिलाएर र काँधमा काँध मिलाएर अघि बढ्न सके समाज साँच्चै बस्न लायक बन्दछ । यो कुरा नारीले पनि बुझ्न सक्नु पर्दछ । नारीको यो वास्तविकता थाहा पाउन नारीमा चेतनशीलता र जागरूकताको खाँचो पर्दछ, जबसम्म नारीहरू यो कुराबाट अपवादित रहन्छन् तबसम्म सभ्य समाजको परिकल्पना निरर्थक नै रहन्छ, यो छेपारोको उखान जस्तो मात्रै हुन्छ । समाज विकासको मेरूदण्ड शिक्षालाई नै मानिन्छ । सही शिक्षाले व्यक्तिलाई सामाजिकता तिर अग्रसर गराउँछ । शिक्षा जीवनको दिशा निर्देशक तत्व हो । यस हिसावले पुरुष वर्गका साथसाथै चेतनशील नारी वर्गले आफूभन्दा तलका व्यक्ति विशेषलाई माथि उठाउन कन्जुस्याइँ गर्नु हुँदैन । यो नै प्रत्येक सामाजिक चेतनशील व्यक्तिको चरित्र एवं कर्तव्य पनि हो । राजनैतिक व्यवस्थामा नारीवर्गलाई कमजोर ठानियो भने देशको अरू व्यवस्थामा जतिसुकै उदारता देखाउन खोजिए पनि त्यो सफलीभूत हुन सक्दैन । विगतको राजनीतिले यही काम गर्‍यो । जसले गर्दा नारी वर्ग पुरुषहरू भन्दा अझ उपेक्षित रहे ।

आजको परिवर्तित अवस्थामा राज्यको राजनैतिक अवस्थाले नारी विकासका निम्ति के कस्ता कदमहरू चाल्छ त्यो प्रतीक्षित अवस्थामानै छ । तै पनि यो खुकुलो व्यवस्था नारी वर्गले पनि आफूलाई समयसँग अगाडि बढाउने कोशिस टुटाउनु हुँदैन । समाज प्रति नारीका कर्तव्यहरू सोच्नसके पुरुषका भन्दा कम छैनन् ।

माथिनै भनिसकिएको कुरा हो नेपाली जन चेतनाको स्तर माथि उठ्न सकेको छैन । त्यसमा पनि सामाजिक अवधारणाका विविध कारणले नारी वर्ग चेतनात्मक हिसावले अझ पिछडिएका छन् । नेपालको वर्तमान यस परिस्थितिलाई जोगाई राख्न र सम्वर्धनमा जुट्न हरेक नागरिक दायित्व र कर्तव्य हो । यसका निमित्त प्रत्येक वर्ग चनाखो हुनु पर्दछ । यथार्थमा भन्ने हो भने शिष्ट र सभ्य समाज निर्माणका लागि पुरुषको भन्दा नारीको बढी महत्व छ । कुशल गृहिणीमा मात्र नारीले आफूलाई सीमित नराखी विकासको रथ हाँक्ने कुशल नेतृत्व पनि बनाउन सक्नु पर्दछ । घरनै पहिलो पाठशाला भएकोले नारी शिक्षित बनेमा आफ्ना सन्तानलाई मार्ग निर्देशन गर्न सक्छे । सच्चा शिक्षित आमाका सन्तान अवश्य पनि समाजप्रति उत्तरदायी हुन सक्छन् । विश्वमा नारीहरू पुरुष सरह हरेक कार्यमा अग्रसर भएर सफलताको परिचय दिन सक्षम बनेका छन् भने नेपाली नारीहरूले पनि आफूलाई कमजोर ठान्ने मानसिकता त्याग्न सक्नु पर्दछ । यसो हुन सक्यो भने मात्र नारी र पुरुष जीवन रूपी रथका सवल र सक्षम पाङ्ग्रा बन्न सक्छन् । उनीहरूको गतिले समाजले नयाँ दिशा भेट्न सक्छ ।

□

## युवा ! देश निर्माणमा उठ

शिवराम देवकोटा
पालुम्टार, गोरखा

युवा हो
शोषित पीडित जनतामा राहत दिन र
आफ्नो अधिकार लिन
सामन्ती किल्लाहरू तोड्दै उठ !
जन्मदैमा कतै गरीव र धनीको भेद छुट्टिदैन
परिश्रमका पसिनाहरूले नै
धर्ती भिजाउने ज्यामीहरू नै महान् हुन्छन्
स्वावलम्वी पाखुराहरू सँगै
मान्छे निर्भीक भएर उठ ।
मानवता मान्छेमै हुनुपर्छ
मानवता मान्छेबाटै रक्षित हुनुपर्छ
स्वतन्त्रता केवल गाँसले मात्र नबेच
भोको पेट अघाउनु त पर्छ
तर परिश्रम अर्काको नखोस
मान्छे ब्रेडले मात्र हैन
ब्रेनले संचालित हुनुपर्छ
वरिपरि घेरै छर् मान्छका घावाजहरू
बाल सत्य र सत्यको कदर गर
देश तिम्रै हो यो ढुङ्गो र माटो तिम्रै हो
सिगारै मायाका हातहरु पसार
स्वतन्त्र पैतालाहरू चाल,
तिमी युगका कमानी हौ
तिमी युगका निशानी हौ
युवा ! देश निर्माणमा उठ
युवा ! समाजवाद एकताका भावनामा जुट !





# विश्वको कम्यूनिष्ट अवस्था र नेपाल

–सुरेन्द्रराज पाण्डे
सभापति स्व. वि. यू.
त्रिचन्द्र क्याम्पस

आज विश्वमा उदारवादको लहर छाएको छ। प्रत्येक तानाशाही व्यवस्थाहरू क्रमशः ढल्दैछन् र तानाशाहहरू पनि आफूलाई उदार शासक देखाउन प्रयत्न गर्दैछन्। चाहे कम्यूनिष्ट तानाशाही व्यवस्था होस् या सैनिक तानाशाही व्यवस्था अब आफ्नो पुरानो सोचाइलाई बदल्न बाध्य हुन थालेका छन्। फलामे किल्लाको रूपमा रहेको वर्लिनको पर्खाल कम्यूनिष्टको पतन सँगसँगै ढलेको छ। आज पुनः जर्मन एउटा मात्र हुन पुगेको छ। पूर्वी यूरोपका प्रायः सबै मुलुकहरू कम्यूनिष्ट एकदलीय शासनबाट मुक्त भइसकेका छन्। विश्वको पहिलो सफल मानिएको कम्यूनिष्ट शासित अर्थात् सर्वहाराको अधिनायकत्व रहेको राष्ट्र सोभियत संघ आज बहुदलीय व्यवस्था अन्तर्गत हिड्ने कोशिस गर्दैछ भने प्राथिक रूपमा त साम्यवादी सोचाईमाथि नै ठूलो चुनौति आइपुगेको छ। अब त्यहाँ कम्यूनिष्ट सोचाइको अवशेष मात्र बाँकि रहन गएको छ। अधिनायकवादी उ० कोरिया र पूँजीवादी द० कोरिया एक हुने प्रयत्न गर्दैछन्। स्वयं चीन पनि आफ्नो अनुहारमा पोतिएको तानाशाही धब्बा मेट्ने प्रयत्न गर्न खोज्दै छ। कथित समानता र गरीबीबाट मुक्तिको नारा बोकेर आएको कम्यूनिष्ट सिद्धान्त आज विश्व रंगमञ्चबाट गरीबी छोडेर बिलाउँदै एउटा ऐतिहासिक दस्तावेज मात्र बन्न पुगेको छ।

यता हाम्रो देश नेपालमा पनि विश्वव्यापी परिवर्तनको लहरसँगै आफूलाई कम्यूनिष्ट भन्न रूचाउने कतिपय पार्टीहरू अब कम्यूनिष्ट सिद्धान्त केवल थोत्रो नारा र सैद्धान्तिक चिन्तन मात्र हो र यसले व्यवहारिक पक्षलाई प्रतिविम्वित गर्न सकेको छैन भन्दै आफूलाई समयानुसार परिवर्तन गर्ने कोशिस गर्दैछन्। कुनै बेला संसदीय व्यवस्था पूँजीपतिहरूको बूर्जुवा व्यवस्था हो। जसबाट गरीबीको मुक्ति हुन सक्दैन भन्ने नेपालका कम्यूनिष्ट पार्टीहरू आज बहुदलीय संसदीय व्यवस्थालाई अंगिकार गरेर हिड्ने प्रण गर्दछन्।

समयले यत्रो कोल्टो फेरिसकेको छ र सर्वहारा वर्गको अधिनायकत्वबाट पीडित नागरिकहरू आफ्ना विगतका दिनबाट आत्मग्लानी अवस्थामा पुगिसक्दा पनि नेपालका केही कम्यूनिष्ट पार्टीहरू (मसाल, मशाल) आफूलाई पुरानै रूढिवादी एकतन्त्रीय विचारबाट मुक्ति दिलाउन सकेका छैनन्। बहुदलीय व्यवस्थालाई अंगिकार गर्न हिच्किचाउने यी पार्टीहरू स्टालिनको पालाको रूस र माओको पालाको चीन जस्तो नेपाल बनाउने दुःस्वप्न देख्दैछन्। विरोधीको स्वर सुन्न नसकी दशौं लाख मानिसको हत्या गराउने स्टालिन र सांस्कृतिक क्रान्तिको नाममा लाखौं चिनीयाँहरूको हत्या गर्ने माओको युगमा नेपाललाई लैजाने कल्पनामा रुमलिएका छन्। यदि साँच्चै नै स्टालिनको रूसमा सच्चा समाजवाद हुन्थ्यो भने त्यो युगको नारकीय यातना भोगेर आएका रूसीहरूले किन आज आफूलाई परिवर्तन गरे? यदि साँच्चै नै माओको चीन नै प्रजातान्त्रिक थियो भने तियनमेन चोकमा किन हजारौं विद्यार्थीहरू गोलीको शिकार बने? त्यसैले कुनै पनि सिद्धान्त केवल नाराको भरमा सफल हुँदैन, यसको सफलता त्यसको व्यवहारिक पक्षको समय सापेक्षतामा निर्भर गर्दछ।

कम्यूनिष्ट व्यवस्थामा जनताका प्रजातान्त्रिक अधिकारहरू कुण्ठित गरिएका हुन्छन्। जहाँ विरोधीको आवाजलाई बन्दुकले कुल्चिएको हुन्छ, जहाँका जनताहरू आफ्नो देशको चार दिवार भित्र बन्द रहन बाध्य हुन्छन्। त्यस्तो बन्दपिंजराभित्रको स्वतन्त्रता कस्तो रहला? कम्यूनिष्ट व्यवस्थाबाट आर्थिक रूपमा सम्पन्न हुन सकिन्छ भन्ने भ्रम पनि आजको विश्व इतिहासले मेटाई सकेको छ। सत्तरी वर्षसम्म कम्यूनिष्ट आर्थिक ढाँचामा रहेको रूस आज आएर जहाँ पुरानो गरीबीको हालत व्यक्त गर्दछ। जर्मन विभाजन पछिको कम्यूनिष्ट राष्ट्र पूर्वी जर्मनी आज ५० जर्मनी भन्दा पनि गरीब रहेको तथ्य हाम्रो सामु छ। अब कम्यूनिष्ट अधिनायकत्वबाट भुक्तभोगी जनताको दारुण रूवाइमा विश्वास गर्ने कि त्यसको कोरा कल्पनामा रूमलिएकाहरूको भजनमा विश्वास गर्ने?

त्यसैले आजका नेपाली तरूणहरूले अब आफूले गहिरिएर सोच्ने बेला आएको छ। खोक्रो नारा र कोरा कल्पनामा आफू र आफ्नो देशको भविष्यलाई पछि धकेल्नबाट बचाउनु परेको छ। समाज र राष्ट्रलाई गरीबीबाट मुक्ति दिलाउन सच्चा मार्ग दर्शकको रूपमा आफूलाई उभ्याउन सक्नु परेको छ। जसको लागि आजको विश्वले देखाएको एउटै बाटो प्रजातान्त्रिक समाजवादलाई अघि बढाउनु परेको छ। यही नै नेपाली तरूणहरूको सही मार्ग ठहरिने छ।





# आगामी महानिर्वाचन र हाम्रो दायित्व

– एन. कट्टेल

२००७ सालमा स्थापित भई २०१७ सालमा अपहरित हुन पुगेको प्रजातन्त्रलाई पुनः स्थापना गर्न नेपाली कांग्रेसले अनवरत रूपमा ३० वर्षसम्म संघर्ष गर्नु पऱ्यो। नेपाली कांग्रेसको नेतृत्व र आह्वानमा वाममोर्चाको सहयोगमा ०४६ फागुन ७ गतेदेखिको जन आन्दोलनले तानाशाही एकदलीय पंचायती व्यवस्थालाई समाप्त पारी बहुदलीय प्रजातन्त्रको स्थापना गरेको छ र प्रजातान्त्रिक सिद्धान्त अनुरूप संविधान पनि घोषणा भइसकेको छ। आन्दोलनका मुख्य लक्ष्य मध्ये (क) पंचायतको अन्त्य (ख) बहुदलको स्थापना (ग) अन्तरिम सरकारको गठन (घ) संविधान निर्माण (ङ) संवैधानिक राजतन्त्रको स्थापना जस्ता लक्ष्य हासिल भइसकेका छन् र अब नेपाली जनताहरूको अगाडि राष्ट्रको भाग्य र भविष्य निर्धारण गर्न महत्वपूर्ण घडी आउँदैछ– त्यो हो महानिर्वाचन। सम्पूर्ण जनताले सँधै राजनीति गरिरहदैंन तर राजनीतिको र शासनको बागडोरको निर्धारण भने गर्दछ। नेपाली जनताको सामु एउटा महत्वपूर्ण प्रश्न खडा भएको छ, अब राष्ट्र कस्तो खाले विचारमा हिडाउने? कस्तो सिद्धान्त र कार्यक्रम भएको पार्टीको हातमा राष्ट्रको बागडोर सुम्पने? कस्ता नेता र नेतृत्वलाई राष्ट्रको जिम्मा लगाउने? कुन पार्टीले प्रस्तुत गरेको राष्ट्रिय एवं स्थानीय कार्यक्रमलाई अनुमोदन गर्ने? कुन पार्टीले ऐतिहासिक दायित्व पूरा गर्दै आएको छ र कुन पार्टीले वर्तमान चुनौतिको सामना र भविष्यका उत्तर दायित्व वहन गर्न सक्छ? कुन पार्टीले राष्ट्र र अन्तर्राष्ट्रिय जगतको समेत समर्थन र सहयोग जुटाई राष्ट्रलाई युगानुकूल विकास दिन सक्छ? कुन विचार राख्ने पार्टीलाई विजयी गराउदा मानव अधिकार लोककल्याणकारी कानूनी राज्यको संरक्षण र द्रुत गतिमा राष्ट्रको विकास संम्भव होला? कुन पार्टीको विचार र सिद्धान्त राम्रो छ? कुन पार्टीका नेता र कार्यकर्ता असल र इमान्दार छन्? नेपालीहरूले यी प्रश्नहरूको चिन्तन र मनन गरेर उत्तर खोज्नु परेको छ, बहस र छलफल गर्नु परेको छ र निचोडमा आफ्ना बह्मले जसलाई भन्छ त्यही पार्टीलाई मतदान गर्नु परेको छ। यदि नेता र नेतृत्व चयन गलत भयो भने राष्ट्र र जनताको दुर्दशा हुन्छ। प्रजातन्त्र 'बानरको हातमा नरिवल' हुन जान्छ।

त्यसो भए नेपालमा के कस्ता कति पार्टी छन् र तिनको लक्ष्य, कार्यक्रम, सिद्धान्त र नेतृत्वको के कस्तो स्थिति छ त? हाल नेपालमा पुराना र भर्खर खुलेका गरी ४० देखि ५० सम्म राजनैतिक पार्टी छन्। यिनलाई ४ घटकमा विभाजन गर्न सकिन्छः– (१) प्रजातान्त्रिक समाजवादमा विश्वास राख्ने नेपाली कांग्रेस (२) सर्वहाराको अधिनायकत्व, एकदलीय ताना-

व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाको स्वतन्त्र अस्तित्व हुँदोरहेनछ। जहाँ यी तीन पक्षका बीच शक्ति सन्तुलन र शक्ति पृथकीकरण गरिएको हुँदैन त्यहाँ तानाशाही चल्छ। पचायतमा यही भयो। आर्थिक र सामाजिक समानता त परै जावस् कम्युनिष्ट शासनमा संवैधानिक र कानूनी समानता समेत नहुने कुरा कम्युनिष्ट मुलुकका संविधान कानूनबाट स्पष्ट हुन्छ। यस अर्थमा पंचायती निरंकुश र कम्युनिष्ट निरंकुश व्यवस्था मिल्दाजुल्दा छन्। दुवै पद्धतिका संविधान र कानूनलाई दाँज्ने हो भने ७५% मिल्न आउँछ। अझ गाउँफर्क पंचायत र कम्युनिष्ट त ९०% नै मिल्न खोज्दछन्। कम्युनिष्टको पोलिटब्यूरो र पंचायतका गाउँफर्क र जाँचबुझ समिति समान छन्। पंचायतको संविधान धारा ८६ ले गरेको अञ्चलाधीशको व्यवस्था र रूसको संविधानको धारा १६४ र १६५ ले गरेको महाभियोक्ता र अभियोक्ताको व्यवस्था समान प्रकृतिका छन्। त्यस्तै पंचायती संविधान धा. नं. ११ टिप्पणी, धा. नं. ४५ उप धारा २, धारा ६७ का र सोभियत संघको सघको संविधान धा. नं. ५१ मा 'साम्यवाद निर्माणका ध्येयहरू अनुरूप ...... सार्वजनिक संगठनहरूमा सम्बद्ध हुने अधिकार छ' जस्ता प्रावधानहरू दुवै व्यवस्थामा निरंकुश आशयका छन्, एकाधिकारपूर्ण छन्। पंचायतमा पंचायत विरोधी संगठन गर्न र कम्युनिष्टमा कम्युनिष्ट सत्ता विरोधी संगठन र गतिविधि गर्ने संवैधानिक छूट छैन। असहमति जनाउने छूट छैन। यसकारण मजदूरहरूका नाममा कम्युनिष्ट पार्टीले, कम्युनिष्ट पार्टीको नाममा अध्यक्ष मण्डलले, अध्यक्षमण्डलको नाममा अध्यक्षले तानाशाही चलाउने व्यवस्थाको नाम नै कम्युनिष्ट व्यवस्था हो। त्यहाँ कुनै पनि वर्गले स्वतन्त्र संगठन गर्न पाउँदैनन्, जसरी पंचायतमा पाइन्नथ्यो।

निचोडमा के भन्न सकिन्छ भने कम्युनिष्टको मूल सिद्धान्त, कम्युनिष्ट देशका संविधान र कानून एवं त्यहाको व्यवहारिकता र वास्तविकतालाई हेर्दा कम्युनिष्ट भनेको एकदलीय तानाशाही पूँजीवादी व्यवस्था हो। त्यहाँको सरकार र कम्युनिष्ट पार्टी पूँजीपति वर्ग हो। जसको हातमा राज्य सत्ता छ, राष्ट्रिय सम्पत्ति छ, प्रशासन छ, सेना छ, गोलीगठ्ठा र हातहतियार छ, जे मन लाग्यो त्यही गर्न पाउने संवैधानिक अधिकार र असाधारण अधिकार छ। तर जनताको हातमा केही छैन। आफ्ना वर्गीय पिरमर्का व्यक्त गर्ने आफू माथि भएको अन्याय अत्याचारको विरोध गर्ने कुनै स्वतन्त्र संगठन छैन, जनताको त्यहाँ घर छैन, जग्गा जमिन छैन, कल कारखाना छैन, स्कूल छैन, सरकारले तोकिएको पाटी पौवा र सार्वजनिक घरमा बास बिताउनु पर्दछ। सरकारको खेत र कलकारखानामा काम गरी निर्धारित ज्यालामा जीवन निर्वाह गर्नु पर्दछ। दिनभरी तरकारी खेती गरेर बेलुका तरकारी किन्न कुपन लिई लाइनमा घण्टौं बस्न पर्दछ। समग्रमा भन्दा कम्युनिष्ट देशमा सरकार र कम्युनिष्ट पार्टीको दास भएर जनता बाँड्नु परेको छ। सरकार र कम्युनिष्ट त्यहाँको शोषक र शासक वर्ग हो, जनता शोषित र अधिकार विहीन शासित (खेतला) वर्ग हुन्। जनताको हित नगर्ने पार्टीलाई बदल्ने कुनै संवैधानिक उपाय छैन। यी तथ्यबाट अब के बुझ्नु पर्छ भने नेपालमा कम्युनिष्टहरूले दिने गरेका मीठा, गुलिया र चर्का नाराहरूमा वास्तविकता छैन। लहै लहैमा नलागेर आफै अध्यन, चिन्तन र मनन गरी नेपालीहरूले आत्मा निर्णय गर्नु पर्दछ।



अन्तर्राष्ट्रिय जगतमा कम्युनिष्ट शासन असफल भएको छ। सैद्धान्तिक र व्यवहारिक कमजोरीले साम्यवादी देशमा आर्थिक, सामाजिक र राजनैतिक संरचनाहरू ध्वस्त भएका छन्। रूसले साम्यवाद स्थापना गरेको ७१ वर्ष पछि कम्युप्निट अधिनायकवाद (केन्द्रनियन्त्रित राजनीति र केन्द्रीकृत अर्थनीति) ले देश ध्वस्त भएका महसूस गर्ने पऱ्यो र कम्युनिष्ट एकाधिकारलाई समाप्त गर्न बाध्य भयो। हाले रूसको जर्जिया प्रान्तमा भएको स्वतन्त्र (बहुदलीय) चुनावमा जनताहरूले ७१ वर्ष शासन गर्ने कम्युनिष्ट पार्टीलाई लात हानिदिएका छन्। कम्युष्टको नराम्रो हार भएको छ; त्यस्तै पूर्वी जर्मन पश्चिममा वि लय भयो। रुमानिया, पोल्याण्ड, हङ्गेरी, चेकोस्लाभाकिया, बुल्गेरिया, मङ्गोलिया आदि देशबाट कम्युष्टिहरूले झिटिझाम्टी बोकेर बिदा लिई सके। अब ५ वर्ष भित्र चीनमा ठूलो परिवर्तन भइसक्ने छ। लेनिन र माओको चिहान र शालिक जोगाउन ती देशका सरकारलाई मुस्किल परेको छ।

कम्यूष्टिहरूले मानव-मनोविज्ञानको अध्यन गरेका छैनन्। चेतन, अर्धचेतन र अचेतन मनको सूक्ष्म विश्लेषण फ्रायडले गरेका छन। अचेतन मनले मानवजीवनमा ठूलो प्रभाव पारेको हुन्छ। अधिकतम एषणाको अधिकतम सन्तुष्टि मान्छेको लक्ष्य हुन्छ। "आत्मानस्तु कमाय सर्वं प्रियं भवति" उपनिषदमा आउँछ। माघ काव्यमा "सर्वःस्वार्थं समीहते" भेटिन्छ। स्वतन्त्र आत्म प्रकाशनमा मानिस आफूलाई सन्तुष्ट पाउँछ। खान, लाउन र बस्न सरकारी भवन पाए र पनि बन्दी जेलबाट छुटन चाहान्छन्। खाने, बस्ने, पढ्ने पढाउने उपचार आदिको सबै व्यवस्थाको ठेक्का सरकारले लिन्छ भन्ने कम्यूनिष्टहरू परजीवी, अल्छी, विकास-विरोधी आत्मगौरव नभएका तत्व हुन्। हिंसक, परपीडन, र हीनताबोध ग्रन्थीबाट ग्रसित छन्।

नेपाली कम्युनिष्ट आन्दोलन शुरुदेखि नै अस्पष्ट र उद्देस्य विहीन हुन पुग्यो। २००७ सालको आन्दोलनमा राणाको पक्षमा वकालत गर्ने, ०७ साले आन्दोलनलाई बुर्जूवा वर्गको आन्दोलन मान्ने कम्युनिष्टहरू प्रजातन्त्र स्थापना भए पछि दिल्ली संझौता धोका हो, अपूर्ण क्रान्ति मान्दैनौं भन्दै होहल्ला मच्चाएर प्रतिक्रियावादीहरूलाई सहयोग पुऱ्याउँदछन्। अनि ०१७ सालमा प्रजातन्त्र समाप्त हुंदा दीपावली गरेर स्वागत गर्दछन् र राजा र पञ्चायतलाई सहयोग गर्दछन्। आफ्नो राष्ट्रिय सम्मेलनहरूमा नेपाली कांग्रेसलाई आफ्नो एक नम्वरको वर्ग दुष्मन हो भनी घोषणा गर्दछन् र आक्रमणकारी नीति लिन्छन्। २०३६ सालको जनमत संग्रहमा–'बहुदल धोका हो' 'बहुदल आए पनि पेट भोकै, निर्दल आए पनि पेट भोकै, भनेर वहिष्कारको नारा दिन्छन्, अन्त्यमा पहेंलोमा छाप हान्न पुग्दछन्। अनि नेपाली कांग्रेसका नेता र कार्यकर्तामाथि आक्रमण गर्दछन्। हेटौंडामा श्री गणेशमानसिंहमाथि र गोर्खा ठोटिपोखरीमा वाचस्पतिको नेतृत्वमा अध्यक्ष कृष्णप्रसाद भट्टराईमाथिको आक्रमण यसको उदाहरण हो। अर्को

कुरा जुन जुन जिल्लामा कम्युनिष्टको होहल्ला र हावी देखियो ती ती जिल्लामा निर्दलले जित्यो। ०४२ का नेपाली कांग्रेसले पञ्चायतको अन्त्यका लागि गरेको सत्याग्रहमा 'बुर्जुवा वर्गको आन्दोलन' भनी (केही घटक बाहेक) विरोध जनाए। उनीहरूले राणा, राजा र पञ्चायतलाई समर्थन गर्नुको कारण गुरुग्रन्थ-कम्युनिष्ट पार्टीको घोषणा पत्रमा "......यथासंभव छिटो पूँजीजीवी वर्गको आधिपत्य कायम गर्नमा पूँजीजीवी वर्गलाई मद्दत पुऱ्याउनु कम्युनिष्टहरूको हितानुकूल हुन्छ....., पूँजीजीवी वर्गको विजयबाट कम्युनिष्टहरूले प्राप्त गर्ने आधारभूत फाइदाहरू हुन्–

(१) विभिन्न प्रकारका छुटहरू– जसले गर्दा कम्युनिष्टहरूलाई आफ्ना सिद्धान्तहरूको रक्षा गर्ने छलफल गर्ने र प्रचार गर्ने सजिलो पर्न जानेछ र यसको फलस्वरूप सर्वहाराहरूलाई संघर्षको निम्ति तत्पर, घनिष्ट रूपले एकबद्ध र संगठित वर्गमा एकजुट पार्न सजिलो हुनेछ।" (कम्युनिष्ट पार्टी घोषणा पत्र फ. ए. सा. सि. पृ. ९१) भन्ने मन्त्र हुनाले नै हुनु पर्दछ। यही मन्त्र जपी हिंडे र साधना र प्रयोग गर्ने चेष्टा गरे। तर असफल रहे।

२००७ सालको आन्दोलन पछिको संझौताले नेपालका स्वतन्त्र र सार्वभौमसत्तालाई स्वीकारेको छ त्यसलाई उनीहरू मात्र तयार छैनन्। ०१७ सालको प्रतिगामी अप्रजातान्त्रिक कदमको दीपावली गरी स्वागत गर्ने कम्युनिष्टहरू अहिलेको "नेपालको संविधान २०४७" मात्र चाहदैनन्। किनभने ०७ सालमा नेपालले 'स्वतन्त्र सार्वभौम सत्ता सम्पन्न' भनी मान्यता पाउदा पनि विरोध गरे, अहिले जनतामाथि सार्वभौम सत्ता आउदा र राज्य शक्तिको स्रोत जनतालाई नै मान्दा पनि स्वीकार गर्दैनन्। कालो संविधान भन्छन्। सेतो संविधान सायद स्टालिनको संविधान होला। वर्तमान प्रजातान्त्रिक संविधानले ०१७ सालमा जस्तो महेन्द्र (राजा) को छत्रछायाँ, दानापानी, नीति निर्देशन गर्ने दरो निकाय कम्युनिष्टहरूले पाएका छैनन्। यसै कारण उनीहरूले विरोध गरिरहेका छन्। अतः कम्युनिष्टहरूको नेता र नीति छैन। आफ्नु देश र जनतालाई हेरेर होइन उनीहरू 'कम्युनिष्ट गुरुग्रन्थ' घोकेर मात्र अव्यवहारिक राजनीतिक कुरा गर्दछन्।

मोहनचन्द्र अधिकारीले सार्वजनिक भाषणहरूमा कम्युनिष्ट पार्टीका ५ वटा पुराना गल्तीबारे बताउने गर्नु भएको छ। ती हुन्:–

(१) दिल्ली सम्झौता धोका हो, अपूर्ण-क्रान्ति मान्दैनौं भन्नु,

(२) ०१७ सालको राजाका कदमको (प्रजातन्त्रहत्या) समर्थन गर्नु,

(३) नेपाली कांग्रेसलाई प्रमुख (वर्ग) दुश्मन ठान्नु,

(४) ०२८ सालको व्यक्ति हत्या आन्दोलन गर्नु,

(५) २०३६ सालमा बहुदलको विरोध पंचायतको समर्थन् गर्नु

त्यस्तै मनमोहन अधिकारीले पोखरामा आयोजित एक सभामा नेपाली कांग्रेसले १ गल्ती गर्दा कम्युनिष्टहरूले सय गल्ती गर्छन् भन्नु भएको थियो। यसबाट पनि कम्युनिष्टहरूको स्थितिको अवगत हुन्छ।



'विश्व मजदूर एक होउ' भन्दै शुरु भएको कम्युनिष्ट आन्दोलन सयौं चिरामा टुक्रिएका छन्। एक गुटले अर्को गुटलाई कम्युनिष्ट मान्दैन। यसै कारण नेता र नीति उद्धेश्य र एकता विहीन प्रजातन्त्र विरोधी कम्युनिष्टहरूको हातमा राष्ट्रको वाग्डोर सुम्पनु हुँदैन।

पंचायतको अन्त्य पछि पंचायतका अवशेष र पंच पार्टी खुलेका छन्। ३० वर्षसम्म निर्वाध देश ध्वस्त बनाउने पंचहरूले पनि पार्टी खोलेका छन्। पंचायत शब्द राख्ने हिम्मत गरेनन्। एकै दिन पंचायतका दुई पार्टी - रा. प्र. पा. (थापा समूह) रा. प्र. पार्टी (चन्द समूह) देखिएका छन्। ०३६-०३७ को जनमत संग्रहमा राष्ट्रिय ढुकुटी समाप्त पारेर पंचायतलाई विजयीश्री पहिऱ्याउन तन मन धनले लागि पर्ने थापा समूहबाट प्रजातन्त्र, राष्ट्र र जनताको कल्याण हुने कल्पना नै गर्नु पर्दैन। त्यस्तै चन्द समूहका नेता चन्द जसले गत चैत्र २४ गते काठमाडौंमा र अन्य ठाउँमा नरसंहार गऱ्यो र जुन पार्टीमा पशुपति शमशेर लगायतका दरबारिया भाइभारदारको प्रत्यक्ष संलग्नता छ। यो दरबारियाहरूको पार्टी हो। दरबार कै इसारामा काम गर्छ। रा. प्र. पार्टीको विधान धारा नं.–१ क, ख, ग, घ, ङ, च, मा पार्टीको उद्देश्य माथि प्रकाश पारिएको छ तर गरीब जनता, किसान मजदूरको कल्याणको पक्षमा कुनै ठोस कार्यक्रम र वचन बद्धता छैन। यसै कारण यसको पछि लाग्न सर्वथा उचित छैन।

नेपाली कांग्रेस नै जनताको पार्टी हो। प्रजातन्त्रका लागि अथक संघर्ष र बलिदान गर्दै आएको छ। यस पार्टीको विधानको धारा नं. १ मा संवैधानिक राजतन्त्र, बहुदलीय प्रजातन्त्र र समाजवादको लक्ष्य स्पष्ट किटान गरिएको छ। संवैधानिक राजतन्त्र र बहुदलीय प्रजातन्त्र स्थापित भइ सकेको छ। अब समाजवादको लक्ष्य हासिल गर्न बाँकी छ। त्यो नेपाली कांग्रेसको सरकारले नै पूरा गर्न सक्ने छ। यसै कारण आगामी महानिर्वाचनमा राष्ट्र जनता र प्रजातन्त्रको सर्वोत्तम हितका लागि नेपाली जनताले नेपाली कांग्रेसलाई नै विजयी गराउनु पर्दछ।

अब गोरखा जिल्लाकै सन्दर्भमा कुरा गरौं। गोरखा जिल्लामा यी तीन वटै पक्ष देखिएका छन्। पंचायतको चन्द समूहको गतिविधि देखिन्छ तर अत्यन्त कमजोड स्थिति छ। मशा (सा) लका कार्यकर्ता पंचायतमा र पंचायतका कार्यकर्ता मशालमा समीकरण भएको हुंदा पंचायतले पार्टी खोल्ने हिम्मत गरेका हुन्। र मशा(सा)लको पनि जगजगी देखिएको हो वास्तवमा यी दुबै हाउगुजी हुन्। कम्युनिष्ट पार्टीका ससाना ७।८ वटा गुटका व्यक्तिहरू देखा परेका छन्: मनमोहन अधिकारीका पक्षधर कट्टेल डांडामा केही देखिन्छन्। यस गुटको–राजनैतिक चरित्र अरू क. गुटको भन्दा राम्रो देखिन्छ। तर यसको पछाडि जनमत छैन। वर्मा र मानन्धर समूहका व्यक्तिहरू नगण्य छन्। चौ. म. को अस्तित्व नै छैन। पंचायतको अन्त्य पछि मा. ले. का व्यक्तिहरू पनि देखा पर्न थालेका छन्। तर संख्या छैन। मा. ले. पार्टी स्वयंमा गरमपन्थी

र नरमपन्थीका बीच मतभेद भई राष्ट्रिय स्तरमै दुई टुक्रामा विभाजित हुने स्थिति छ। राष्ट्रिय एवं अन्तर्राष्ट्रिय स्तरका अहं प्रश्नहरूमा मालेले हुडवड अपरिपक्क, अदूरदर्शी गतिविधि देखाएको छ। यो ०३५ सालतिर जन्मिएको पार्टी हो। परिपक्क र बूढा पाका यसमा छँदै छेनन्।

गोरखामा अलिकति होहल्ला र आतंक मच्चाउने पार्टी मशा (सा) ल हो। यसका केन्द्रमा मोहन विक्रम सिहले नेतृत्व गरेको टुक्रा र प्रचण्ड (छद्मनाम)ले नेतृत्व गरेको टुक्रा छन्। वाबुराम भट्टराई एक गुटका केन्द्रीय स्तरका कार्यकर्ता र वाचस्पति अर्को गुटका कार्यकर्ता मानिन्छन्। विचारा वाबुरामले अमेरिका जानु अघि पत्रकार सम्मेलनमा आफू मसाल नभएको बताएर अमेरिकी यात्रालाई सुगम वनाएका छन् र आफ्नो ढुलमुल र अस्थिर र अन्यौलपूर्ण चरित्र देखाएका छन्। स्मरणीय छ छात्र जीवनमा ने. वि. संघका थिए यिनको व्यक्तित्व र जीवन यात्राको विश्वलेण गर्दा यिनी कुनैपनि बेला कम्युनिष्ट पार्टी छोड्न सक्छन्।

आगामी निर्वाचन दुवै गुटले बहिष्कार गर्ने निर्णय गरेका छन्। तर पार्टीको निर्णय विपरित कार्य गरे वापत पटक पटक कार्वाहीमा परेका देवकोटा पार्टीलि भाग नलिए पनि पार्टीबाट विद्रोह गरेर निर्वाचनमा भाग लिने विचार राख्द- छन्। निर्वाचनमा भागलिने विचार राखेकोले वर्ष दिनका लागि उनी कार्वाहीमा परेको कुरा पनि कम्युनिष्टकै मुखबाट सुनिएको छ।





यी तथ्यबाट के भन्न सकिन्छ भने गोरखामा देखिएका मशा(सा)लको सिद्धान्त, केन्द्रीय नेतृत्व र नेता नै ठीक छैनन्। मोहन विक्रम सिह बिचरा भारतको दाना पानी खाएर दिल्लीमा वसेर नेपालको राजनीति चलाउँछन्। भारतकै सुरक्षा शिविरमा रहेका सिह भारतीय विस्तारवाद मुर्दावादको नारा पनि दिन्छन्। प्रचण्ड (किरण) आदि अर्को टुक्राको छद्म नाम हो। आफ्नो परिचयसम्म दिन सक्तैनन्। प्रचण्ड समूहले सिह समूहलाई चारित्रिक, नैतिक र सैद्धान्तिक गल्ती गरेको आरोपमा कम्युनिष्ट पार्टीबाट निस्कासित गरेको हो। जनमतको वेला हरेराम लगायतका पञ्चहरूले निर्मल लगायतका पञ्च कम्युनिष्ट कार्यकर्तालाई सके पञ्चायतकै प्रचार गर्ने नसके मशा(सा)ल भएर करामत देखाउने गोप्य मन्त्र दान गरेको कुरा अहिले कम्युनिष्टकै मुखबाट सुन्न पाइएको छ। गोरखाको प्रजातन्त्र विरोधी कार्यक्रमको योजना वाचस्पतिको उपस्थितिमा महाराजगञ्ज देवकोटा महलमा तयार हुने गरेको कुरा पनि त्यसबेला चर्चित थियो। अहिले एक्कैचोटी दरवारको इसारामा पञ्च र कम्युनिष्टका नेता देवकोटाले संविधान सभाको प्रश्न उठाए। त्यस्तै बहुदल घोषणा भए पछिको पहिलो सं. रा. ज. आ. को आम सभा भएको दिन यदु र हरेरामले ऋषि कट्टेलसँग कुरा गर्दै– मशा(सा)लका कार्यकर्ता हाम्रै हुन्, हाम्रो आफ्नै ठोस कार्यक्रम आएपछि गोरखामा मशा-[सा]ल ५% मात्र बांकि रहन्छन् भनेको कुरा प्रस्तुत पंक्तिकारले पनि थाहा पाएको छ। त्यस्तै मशा-(सा)ल भएका पञ्चहरूसँग किन मशा(सा)ल भयौ भनी सोद्धा उनीहरू –(क) मशा(सा)लमा लाग्दा महान क्रान्तिकारी पनि भइयो र (ख) आत्म सुरक्षा पनि भयो। (ग) जीवनभर कांग्रेसको विरोध गरी राजावादी भएर बसियो अहिले त्यही राजाले लात हानिदियो, राजाको खिलाफमा काम गर्न र राजामा त्रास फैलाएर पुनः यथास्थिति कायम गर्न सकिन्छ कि भनेर पनि त्यस तर्फ लागेको बताउँछन्।

हाईस्कूल र अझ तल्लो कक्षामा पढ्ने अवोध, सरल शिशुहरूलाई भावनात्मक र उत्तेजनात्मक भाषण र कुरा गरी कम्युनिष्टले भाँड- रहेका छन्। निरक्षर अवोध जनताहरूलाई जग्गा जमीन र घर सम्पत्तिहरू सबलाई बराबरी बाँडिदिन्छौं भनेर झुक्याई रहेका छन्। ०१७ सालमा पञ्चले तयार पारिदिएका रेडिमेड प्रश्न घाकेर कति दिन राजनीति गर्छन्? संसारबाट लखेटिएका विचरा कम्युनिष्टहरू नेपालमा सशस्त्र आन्दोलन गर्छन् अरे? कम्युनिष्टहरूले निर्माण जानेकै छैनन्। कम्पुचिया, भियतनाम, अफगान, मङ्गोलिया, रूमानिया, पोल्याण्ड आदि देश र जनताको स्थिति हेर्दा स्पष्ट हुन्छ। कम्युनिष्ट देश कसैले पनि (केहीलाई छाडेर) कसैलाई आर्थिक सहयोग गर्न सकेका छैनन्। अहिले आफैं भिक्षा माग्दैछन्। युगोस्लाभियामा भरखरै भएको बहुदलीय चुनावमा पचासौं वर्ष शासन गरेको कम्युनिष्टलाई यसपाली जनताले लात हानिदिए। फलतः कम्युनिष्टले एक सीट पनि जित्न सकेनन्। यसै लेख मार्फत म गोरखाली विद्यार्थीहरू र जनतालाई के भन्न चाहन्छु भने कसैको पनि लहै लहैमा नलागेर आफैं अध्ययन मनन र चिन्तन गर्नु होस्।

आफ्नो बाटो आफैं बनाउनुहोस् । अन्धाको पछि लागियो भने खाडलमा परिन्छ । स्वतन्त्र रूपले विचार गर्दा यथार्थ बुझेमा कोही पनि कम्युनिष्ट तानाशाही शिविरमा बन्दि हुन चाहँदैन । संसारमा कम्युनिष्ट नाङ्गिसक्यो । राजनैतिक, सामाजिक, आर्थिक, सांस्कृतिक सबै क्षेत्रमा कम्युनिष्ट विचार र पद्धति विश्वमा असफल भएर समाप्त भएको छ ।

मार्क्सका (क) इतिहासको भौतिकवादी व्याख्या (ख) वर्ग संघर्षको सिद्धान्त (ग) मूल्यको श्रम सिद्धान्त (घ) अतिरिक्त मूल्यको सिद्धान्त (ङ) पूँजीवादी उत्पादन प्रणालीको असंगति स्वरूप गृहयुद्धको अपरिहार्यता (च) सर्वहाराको तानाशाही जस्ता मूलभूत विचारलाई उत्तरवर्ती विद्वानहरूले उपयुक्त ढंगले खण्डन गरेका छन् । इतिहासको कसीमा मार्क्सका सिद्धान्त असफल पनि भए । अर्को शब्दमा भन्दा (क) सर्वहाराको अधिनायकत्वको नाममा स्थापित एकदलीय तानाशाही (ख) सम्पूर्ण सम्पत्तिमा सरकारको स्वामित्व स्थापित गरेर व्यक्तिलाई राज्यको कमारा केताला, र पराश्रित बनाउने कम्युनिज्म (ग) या केन्द्रनियन्त्रित राजनीति र (घ) केन्द्रीकृत अर्थनीति संसारबाट असफल भएर कम्युनिष्ट सिद्धान्त ध्वस्त भएको छ । अब सबै देशहरूमा स्वतन्त्र प्रतिस्पर्धात्मि बजार अर्थ व्यवस्था शुरू भएको छ। अपढ जनतामाथि अझै पनि वामपन्थीहरू भ्रम सिर्जना गर्न खोज्दैछन् । हामीसँग आउन बहस गर्न एक एक वाक्यमा हामी नाजवाफ बनाइ दिन्छौं । कम्युनिष्टहरू जस्तो हामी कुनै पनि सिद्धान्तलाई अन्ध समर्थन र विरोध गर्दैनौं । निर्विकल्प सिद्धान्त कुनै पनि हुँदैन । सर्वमान्य सिद्धान्त पनि असंभव छ । अतः अर्को सिद्धान्त र विचार नआउञ्जेल वर्तमान विश्वका लागि प्रजातान्त्रिक समाजवाद नै सही मार्ग ठहरिएको छ।

अन्तमा (१) बहुदलीय प्रजातन्त्र (२) संवैधानिक राजतन्त्र (३) अकुण्ठित मानव अधिकार (४) सार्वभौम सत्ता जनतामा रहनु पर्छ, भन्ने धारणामा अकण्टक विश्वास राख्ने प्रजातान्त्रिक समाजवादी पार्टी नेपाली कांग्रेसलाई मन वचन रकर्मले सहयोगगर्नु नेपाली र गोरखावासीहरूको समेत ठूलो कर्तव्य हो। जुन पार्टीले (क)जनमुखी राजनीति (ख) ग्राममुखी अर्थनीति (ग) समतामूलक संस्कृति निर्माणको महान् लक्ष्य राखेको छ ।



## बी. पी. लाई संझदा

(तीजको गीतिलयमा)

शोभा कट्टेल

ने. वि. संघको झण्डामा कलम र मशाल
ने. वि. संघका साथीलाई 'जय नेपाल' ।
कांग्रेसको जन्मदाता बी. पी. लाई मान्दछौं
कांग्रेसको ठूलो नेता उनलाई ठान्दछौं ।

ज्यानको प्रवाह नगरी आन्दोलन चलाए
कांग्रेसको सिद्धान्त उनले बनाए ।
कति दुःख गरेर आन्दोलन गरियो
बी. पी. ज्यूको सपना साकार पारियो ।



# प्रजातन्त्रका सेनानीहरूको संक्षिप्त चर्चा

**शहीद स्व. होमनाथ ढकाल :**

१९९८ सालमा गोरखा जिल्लाको आँप पिपल गाउँमा जन्मिएका तुलसीराम ढकालका छोरा होमनाथ साहित्यमा स्नातक थिए। उनका दुई जीवनसंगिनी एक छोरी शशिकला छिन् । ढकाल २०२७ सालमा गाउँमै स्थापित श्री जन विकास पुस्तकालयको कार्य समितिको अध्यक्ष थिए भने सोही सालमा प्रकाशित "प्याउली" नामक पत्रिकाको प्रधान सम्पादक पनि थिए ।

ढकाल प्रजातन्त्रका निम्ति आफूलाई उत्सर्ग गर्न सक्ने महान् सपूत र सेनानी हुन् । उनी कवि स्रष्टा र समाजसेवी पनि थिए। २०२९ साल पौष १ गते पञ्चायती कालो दिवस विरूद्ध पर्चा छरेको अभियोगमा तत्कालीन पञ्च नेताहरूको आदेशमा समातिएका ढकालले पौष १४ गते इन्सपेक्टर लाल बहादुरको जुडो, कराते, बक्सिङ, बूट, जुत्ताको अमानुषिक आक्रमणबाट प्राण गुमाउनु परेको हो । त्यतिखेर पञ्च नेताहरूको उत्सव नै थियो । स्मरण रहोस् ती हत्याराहरू अझै पनि गोरखाको पवित्र राजनीतिलाई धमिल्याउन सक्रिय छन्- इतिहासको पानाबाट यो सत्यता मेटिने छैन । अपराधीको निम्ति दण्ड अझै बाँकी नै छ ।

होमनाथ ढकालले वीरगति प्राप्त गरेपछि उनको पार्थिव शरीर तल्लो दरबार भित्रको चोकमा गाड्न खाल्टो समेत खनियो । तर लाले पापीलाई मृत शरीरले समेत त्रस्त बनाइदियो । गाड्ने हिम्मत आएन । डाक्टरले मृत घोषित गरिदियो । त्रस्त लाले राती ३ बजेतिर सधैंको लागि गोरखालाई छाडेर भाग्यो । यो खबर सर्वतिर फैलियो । अपार जन-समूहले सरकारको कुकृत्य पूर्ण कारवाहीको घोर विरोध गर्‍यो । तर उनको असामयिक मृत्युलाई कसैले पनि फर्काउन सक्तैनथ्यो । उनी फर्किएनन् वीरगति प्राप्त गरे । उनको सपना अहिले साकार भएको छ । यो बिहानीको मौसममा- "गोरखा गौरव" परिवार उनको पवित्र आत्मालाई श्रद्धाञ्जलि अर्पण गर्दछ ।

**शहीद स्व. राजेश बानिया :**

वीर सपूत राजेश बानियाको जन्म गोरखाको मसेल खान्चोक बानिया डाँडा गाउँको एक सरल र सामान्य परिवारमा भएको थियो । बानिया परिवारले गोरखाको च्याम्पेशाल स्थित दुल्लभ मा. वि. लाई ठूलो मूल्य बराबरको भूमिदान गरी आफ्नो कूललाई शिक्षा प्रेमीको रूपमा माथि राख्न सफल भएको छ भने अर्कोतिर मानव अधिकार र प्रजातन्त्र स्थापनाको लागि २०४६ साल फाल्गुन ७ गतेबाट नेपाली कांग्रेसको आह्वानमा भएको राष्ट्रिय जन-आन्दोलनमा राजेश बानिया जस्ता वीर सपूतले यही कूलबाट आफूलाई बलिदान गरेको हुँदा नेपालको इतिहासमा 'बानिया' परिवारले अर्को स्वाभिमानी उत्सर्गको नौलो इतिहास कायम गरेको छ ।

पिता रामबहादुर बानियाका राजेश एक मात्र सपूत थिए र उनको शिक्षा दीक्षा दुल्लभ मा. वि. मै भएको थियो । पिता रामबहादुरको आर्थिक अवस्था कमजोर भएका कारणले राजेश बसाई सर्ने सिलसिलामा आफ्ना बाबु-आमाका साथ चितवन गएका थिए । पिता रामबहादुरको यही समयको बीचमा असामयिक निधन हुन पुग्दा उनले गहिरो पीडा र अभावको सामना गर्नु परेको थियो । तैपनि ने. वि. संघको उच्च आदर्शलाई विपदको यस घडीमा पनि उनले अवलम्बन गरेकै थिए । क्रूर तानाशाही व्यवस्थाका विरूद्ध हुने कुनै पनि आन्दोलनमा आफूलाई सक्रिय सहभागी बनाएकै थिए ।

यही २०४६ साल फाल्गुन ७ गतेदेखि प्रारम्भ भएको राष्ट्रिय जन-आन्दोलनमा सक्रिय रूपमा भाग लिई अघि बढेका बेला चितवन भरतपुरमा अमानवीय रूपमा चलाइएको पञ्चायती शासकका गोलीबाट प्राण गुमाई राजेशले वीरगति प्राप्त गरे। न्यायको निम्ति आफूलाई उत्सर्ग गर्न सक्ने उनी महान् छन्, अमर छन्। 'गोरखा गौरव' परिवार वीर शहीद राजेशप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछ।

## शहीद इमान सिह :

शहीद इमान सिह गुरूङ्ग गोरखा जिल्लाको ताकु गाउँ माझ लाँकुरीमा जन्मनु भएको हो। २०१५ सालको निर्वाचनमा नेपाली कांग्रेसको पक्षमा सक्रिय सहयोग गरी प्रजातन्त्रका प्रति आफ्नो प्रतिबद्धता देखाउनु भएका इमान सिह २०१७ साल पुस १ गते प्रजातन्त्रको हत्या भएपछि मुलुकमा पुनः प्रजातन्त्रको स्थापनार्थ स्व. सुवर्ण शम्शेरको नेतृत्वमा सञ्चालित २०१८ सालको सशस्त्र क्रान्तिमा सहभागी हुनुभयो। २०१८ सालमा भरतपुर कब्जा गर्दा महत्वपूर्ण भूमिका निर्वाह गर्नु भएका इमान सिहलाई पछि शाही सेनाले गिरफ्तार गरी पोखरा नजिक कोतेमा लालध्वज गुरूङ्गका साथ उहाँलाई पनि गोली हानेर हत्या गर्‍यो।

स्व. गुरूङ्गका एक छोरा, एक छोरी र एक श्रीमती छन्। २०१८ सालमा इमान सिह गुरूङ्गको पूरै परिवारमाथि निर्मम यातना दिइएको थियो र उहाँका परिवारका धेरै सदस्यहरूलाई गिरफ्तार गरिएको थियो।

इमान सिह गुरूङ्ग सुबेदार खड्गबहादुर गुरूङ्गको दोस्रो छोरो हुनुहुन्थ्यो। २०१८ सालमा इमान सिह लगायत अरू छोराहरूलाई गिरफ्तार गरेपछि परिवारका महिला सदस्यहरूले चिन्ता व्यक्त गर्दा सु. खड्ग बहादुर गुरूङ्गले भन्नु भएको थियो कि– "देश र समाजका लागि हाम्रा सबै छोराहरू मारिए भने पनि हामीले चिन्ता गर्नु हुँदैन। उनीहरू पुण्यकर्ममा लागेका छन्।"

## शहीद टीकादत्त थपलिया :

शहीद टीकादत्त थपलिया २०१८ सालमा नेपालमा पुनः प्रजातन्त्र स्थापनाका लागि भएको आन्दोलनमा चितवन ठोरीमा शाही सेनासंग लड्दा लड्दै शहीद हुनु भएको हो। गोरखा जिल्ला लाङदीमा जन्मनु भएका थपलिया नेपाली कांग्रेसका कर्मठ एवं सक्रिय कार्यकर्ता हुनुहुन्थ्यो। २०१७ साल पुस १ गते प्रजातन्त्रको अपहरण गरिएपछि त्यसका विरूद्ध नेपाली कांग्रेस संगठित रूपमा पुनः प्रजातन्त्र स्थापनाका लागि कार्यरत रह्यो। देशभरि विरोध प्रदर्शनहरू भए। नेपाली कांग्रेसका नेता स्व. सुवर्ण शम्शेर राणाको नेतृत्वमा भारतबाट सशस्त्र रूपमा प्रतिकार गर्ने योजना भयो। प्रजातन्त्रको अपहरणपछि छटपटिनु भएका टीकादत्त थपलिया प्रजातन्त्रको पुनर्वहालीका लागि सुवर्णजीको नेतृत्वमा शुरू भएको आन्दोलनमा सरीक भई शहीद हुनु भएको हो।

शहीद टीकादत्त थपलियाका छोराछोरीहरू र श्रीमती छन्। शहीद टीकादत्त थपलियाको पराक्रमयुक्त कार्यले प्रजातन्त्र पुनर्वहालीका लागि गोरखा जिल्लाले पनि महत्वपूर्ण योगदान पुर्‍याएको छ। यस्ता वीर शहीदप्रति सम्पूर्ण गोरखावासीहरू श्रद्धाञ्जलि अर्पण गर्दछन्।

---

## स्व. बुद्धि सागर ढकाल :

वि. सं. १९६५ सालमा गोरखा जिल्लाको सिरान्चोक तल्लो गोह्रोरेमा जन्मनु भएका प्रजातन्त्रका वीर सेनानी स्व. बुद्धि सागर ढकाल प्रजातान्त्रिक विचार धाराबाट उत्प्रेरित हुनुहुन्थ्यो। सानै उमेरदेखि प्रजातान्त्रिक समाजको स्थापनाको लागि संघर्ष गर्दै आउनु भएका ढकालले २००७ सालको जनक्रान्तिमा गोरखा जिल्लाबाट ने. का. को तर्फबाट सक्रिय भूमिका खेल्नु भएको थियो। उहाँले राजनैतिक क्रियाकलापमा संलग्न रही अनवरत रूपमा संघर्ष गर्दै रहनु भयो। यसैक्रममा २०१८ सालमा चितवन जिल्लाको भरतपुर मोर्चाबाट उहाँले सक्रिय नेतृत्व गर्नु भयो। भरतपुर क्षेत्रलाई



तत्कालीन सरकारले आफ्नो कब्जामा लिएपछि उहाँलाई राजकाज मुद्दा लगाई तीन वर्ष कैद र तीन हजार रुपियाँ जरिवाना गर्‍यो। जेलबाट छुटेपछि २०२६ सालमा उहाँको निधन भयो। 'गोरखा-गौरव' परिवार उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछ।

## स्व. वी. पी. गोर्खाली (वेद प्रसाद पोखरेल) :

गोरखा जिल्ला खरीबोट निवासी रविदत्त पोखरेल र जानुका देवी पोखरेलका साहिला छोरा गोर्खाली २०१९ सालमा जन्मिएका थिए। गोर्खाली ने. वि. संघप्रति आस्था राख्ने प्रखर व्यक्तित्व र कवि स्रष्टा थिए। १० वर्षको उमेर सम्ममा रेडियो नेपालको बाल कार्यक्रममा उनले सफलतापूर्वक भाग लिइसकेका थिए भने १६ वर्षको विद्यालय जीवन कालमा उनले अनेक प्रतियोगितात्मक साहित्यिक पुरस्कारहरू पनि जितिसकेका थिए। १७ देखि २७ वर्षको उमेर सम्ममा उनले आफ्ना रचनाहरू नेपाली साहित्यका उत्कृष्ट पत्रिकाहरूमा छपाउन पनि धनी सफल भइसकेका थिए। २०४१ सालको ने. रा. प्र. प्रतिष्ठानको कविता महोत्सवमा तृतीय स्थान पनि उनले प्राप्त गरेका थिए।

प्रजातन्त्रका आस्थावान् सक्रिय व्यक्तित्व र कवि चेता गोर्खालीले २०४६ साल भदौ ३ गते खड्ग बहादुर गुरूङ्ग, तल्ले गुरूङ्ग, लालबहादुर गुरूङ्ग, लोकबहादुर गुरूङ्ग र भेण्टे कामी जस्ता नराधमहरूको अमानुषिक आक्रमणबाट २७ वर्षको कलिलो उमेरमै प्राण गुमाउनु परेको हो। गोर्खाली गोरखाली थिए। उनलाई 'गोरखा गौरव' मार्फत सम्पूर्ण गोरखालीहरूको श्रद्धाञ्जलि।

## मुक्ति सेनाको परिचय

### टीकादत्त पोखरेल (श्रीघर १९८०–)

युवा अवस्थामा फौजमा जागिर खाई २००५ सालमा नेपाल प्रजातन्त्र कांग्रेसमा सम्मिलित भई २००६ सालमा नेपाल प्रजातन्त्र कांग्रेस र नेपाल राष्ट्रिय कांग्रेसको विलयपछि बनेको नेपाली कांग्रेसको मुक्ति सेनामा प्रवेश भई २००७ सालको मुक्ति आन्दोलनमा शहीद स्थिरबम मल्लको नेतृत्वमा वीरगन्जको मुक्ति संघर्षमा कार्यरत रहनु भयो। संघर्षमा उहाँको एक गोडामा गोली लागि घाइते हुनुभयो। प्रजातन्त्रपछि मुक्तिसेनाको सुबेदार पद छोडी आफ्नै घर गाउँ गोरखा छोप्राकमा विभिन्न सामाजिक सेवा तथा आफ्नो राजनैतिक संस्था नेपाली कांग्रेसमा निष्काम कर्म भावले लागिरहनु भयो। छोप्राक मौजा र वरपरमा शिक्षा तथा समाज सुधार काममा उहाँको राम्रो योगदान रहेको छ। खासगरी समाजका विपन्न र तल्लो जातका मानिसहरूलाई शिक्षित गराउन उहाँले ठूलो कोशिश गर्नु भयो।

२०१७ सालमा प्रजातन्त्रको अपहरण भएपछि २०१८ साल भाद्रमा नेपाली कांग्रेसका नेता कृष्णप्रसाद न्यौपानेको साथै उहाँ भारत प्रस्थान गर्नु भयो। भारतमा जनरल सुवर्ण शम्शेर राणाको नेतृत्वमा भएको नेपाली कांग्रेसको प्रजातन्त्र पुनःस्थापनाको संघर्षमा उहाँ ठोरी क्षेत्र कब्जा गर्ने ग्रुप अन्तरगत कार्यरत रही त्यहाँ मोर्चामा खटिनु भयो। प्रथम पटक ठोरी चौकीमा सफलता मिले पनि पछि फेरि प्रत्याक्रमण हुँदा उहाँहरूले त्यहाँबाट पछाडि हटी आत्म रक्षा गर्नु पर्‍यो।

२०१८ सालपछि उहाँले गुप्तरूपमा आफ्नो कार्य क्षेत्र गोरखा र भारतको कलकत्ता बीच आतेजाते गरी भूमिगत जीवन बिताउनु भयो।

२०३० सालको आखिरीतिर पञ्चायतकालीन भ्रष्ट प्रशासनतन्त्रले २०१८ सालको आन्दोलनमा उहाँ सरीक भए बापत गोरखा ट्रीबुनलले गरेको फैसलाको दण्ड लगत छूट भएको बहानामा गोरखा जेल र लमजुङ्ग बेसीशहर जेल समेतमा ३ वर्षको कडा जेल सजाय गर्‍यो। सम्पूर्ण आममाफी भईसक्दा पनि उहाँको लगतलाई निस्तेज गराई उहाँलाई माफी र मुक्ति दिलाउन गरिएका प्रयासहरू तत्कालीन प्रतिशोध र पूर्वाग्रह पीडित व्यवस्था र प्रशासनलाई मान्य भएनन्।

२०३६ सालको जनमत संग्रहको समयमा बहुदलीय प्रचार प्रसार समितिमा रही प्रजातन्त्रका पक्षमा काम गर्नु भयो। २०४२ सालको सत्याग्रहमा गोरखा पोखरी-

थोकमा सत्याग्रहीको रूपमा सम्मिलित भई ६ महिना बन्दी जीवन यापन गर्नु भयो ।

हाल उहाँ नेपाली कांग्रेस जिल्ला कार्य समितिका सल्लाहकार सदस्य हुनुहुन्छ । अनवरत रूपमा देशमा प्रजातन्त्रको पुनर्स्थापनाका निम्ति सक्रिय उहाँलाई 'गोरखा-गौरव' परिवार अभिवादन गर्दछ ।

(प्रजातान्त्रिक आन्दोलनको मुक्तिसेनामा काम गर्ने गोरखाली मुक्तिसेनानीको परिचय क्रमश: छापिनेछ ।)





# "गोरखा–काठमाडौं प्रजातान्त्रिक समाज ०४७"

## स्थापना र प्रगति विवरण

### १. पूर्व पृष्ठभूमि

गोरखा र काठमाडौंको बलियो सम्बन्ध नेपाल एकीकरण पछि नै भएको हो । काठमाडौंमा १९३४ मा संस्कृत विद्यलय खुले पछि गोरखाबाट थुप्रै विद्यार्थीहरू आई अध्ययन गरे । २००७साल पछि विभिन्न संघ संस्था देखिन थाले । यसै क्रममा २०२१ तिर गोरखाका विद्यार्थीहरूले गोरखा नाटक समिति सञ्चालन गरेको थाहा पाइन्छ । त्यस पछि गण्डकी छात्र समितिमा पनि गोरखली हरूको संलग्नता रह्यो । २०३६सालको छात्र आन्दोलन पछि आएको खुकुलो वातावरणमा गोरखाली छात्रहरू संगठित भई प्रजातन्त्रको पक्षमा सक्रियताका साथ लागि परेर अन्ततोगत्वा ने.वि.सं गोरखा काठमाडौं सम्पर्क समिति(२०३९)को गठन गरे । यसले गोरखाली विद्यार्थी र अन्य वर्गलाई समेत समेटी सत्याग्रह २०४२ र जन आन्दोलन २०४७ लाई महत्वपूर्ण सहयोग पुर्‍यायो जन आन्दोलनको पूर्व सन्ध्यामा चिराग पत्रिका प्रकाशन गरी काठमाडौंमा रहने सम्पूर्ण वर्गका मित्रहरूलाई यसतर्फ ध्यान आकर्षित गर्‍यो । विभिन्न अवसरमा गोरखाली भेला र वनभोजको आयोजना गरी संगठित हुन चाहनालाई अझ तिव्रता प्रदान गर्‍यो । तर पञ्चायती कालमा विद्यार्थी वाहेक अरूले स्वतन्त्र संगठन स्थापना गर्नु संभव थिएन । पञ्चायतको अन्त्यसंगै संगठित हुने प्रक्रिया शुरू भयो ।

### २. स्थापना

ऐतिहासिक जन आन्दोलन २०४६ ले नेपालमा एकदलीय पञ्चायतको अन्त्य गर्‍यो । २०४६ फागुन ७ देखि नेपाली कांग्रेसको आह्वानमा भएको आन्दोलनले ४९ सौ दिन चैत्र २६ गते दल माथिको प्रतिबन्ध हट्यो । त्यसपछि विभिन्न वर्गले संगठित हुने प्रयास शुरूगरे । राष्ट्रियता, प्रजातन्त्र, समाजवाद र लोक कल्याणकारी कानूनी राज्यको अवधारणालाई सवल वनाउन एवं प्रतिक्रियावादीहरूलाई निरूत्साहित पार्न गोरखालीहरूले पनि संगठित भई सक्रिय सहभागिता जुटाउनु आवश्यक थियो । प्रजातान्त्रिक शक्तिको हात मजबूद बनाउनु जरूरी थियो । यसै कारण गोरखावाट काठमाडौंमा आई विभिन्न पेशामा रहेका व्यक्तिहरूलाई संगठित गरी सामाजिक कार्य गर्न वाञ्छनीय भएकोले यस संगठनको स्थापना गरिएको हो । काठमाडौंमा रहेका साथीहरू बीच भेटघाट, चिना परिचय सहयोग आदान प्रदान र जिल्लावासीहरूलाई समेत रचनात्मक सहयोग पुर्‍याउने उद्धेश्यले ०४७ वैशाखमा, काठमाडौंमा रहेका सबै प्रजातान्त्रिक विचार राख्ने साथीहरूको भेला गराई वासु पोखरेलको संयोजकत्वमा एक अस्थायी भेला आयोजक समिति गठन गरियो । यस समितिले गोरखाली कर्मचारी, शिक्षक, व्यापारी, पत्रकार राजनीतिज्ञ एवं बौद्धिक समुदायसंग भेटघाट र

परामर्श गरी आषाढ २३ गते गोरखालीहरूको एक भेला बोलायो र सो भेलाले सीताराम अधिकारीको अध्यक्षतामा तेह्र सदस्यीय एक तदर्थ समिति र १० सदस्यीय सल्लाकार समिति पनि गठन गऱ्यो ।

□

### ३. गतिविधि

तदर्थ समितिको गठन पछि औपचारिक एवं अनौपचारिक थुप्रै मिटिङ्हरू गरिए । विचारहरूको व्यापक आदान प्रदान गरियो । ०४७ श्रावण २७ गते ने. का. के. सदस्य श्री चिरञ्जीवी वाग्लेको उपस्थिति (वाल्मीकि क्याम्पस) मा वृहत भेलाको पुनः आयोजना गरियो । भेलाले पूर्व स्थापित पेशागत समूहको नाम 'गोरखा काठमाडौं प्रजातान्त्रिक समाज' तदर्थ समिति ०४७ राख्ने ठहर गऱ्यो । गोरखा जिल्लाको प्रजातान्त्रिक शक्तिलाई ठोस सहयोग पुऱ्याउने सन्दर्भमा प्रारम्भिक चरणमा एक पत्रिका सम्पादन प्रकाशन गर्ने निर्णय गरियो र सो पत्रिकाको नाम 'गोरखा–गौरव' राख्ने निधो भयो । यसलाई अघि बढाउन नवराज कट्टेलको संयोजकत्वमा सम्पादक मण्डल र भोजराज मरहट्टाको संयोजकत्वमा आर्थिक उपसमिति पनि गठन गरियो । त्यस्तै भाद्र १६ गते ने. कां. गोरखाका अध्यक्ष चीनकाजी श्रेष्ठको उपस्थितिमा पनि भेटघाट र विचार विमर्श भयो । र भेलाले समितिको गतिविधि अघि बढाउन पत्रिका सम्पादन गर्न आवश्यक सुझाव र कार्यनीति बनाउन सहयोग पुऱ्यायो । जिल्लामा बुकलेटहरू पठाउन यस संस्थासंग संबद्ध साथीहरूले आर्थिक सहयोग पनि जुटाउनु भयो । र ४०० थान बुकलेट प्रचारका सामग्री जिल्लातर्फ पठाइयो पनि ।

### ४. भावी कार्यक्रमः

यस समाजले मुख्यतया सामाजिक क्षेत्रमा काम गर्ने उद्धेश्य राखेको छ । गोरखाबाट काठमाडौंमा आई विभिन्न पेशामा रहेका व्यक्तिहरूका बीच परिचय सहयोग र सद्भावना अभिवृद्धि गर्ने, स्वास्थ्य र सामाजिक सेवाका क्षेत्रमा सहयोग आदान प्रदान गर्ने लक्ष्य पनि रहेको छ । त्यस्तै गोरखा जिल्लाको सामाजिक, आर्थिक, औद्योगिक क्षेत्रको विकास निर्माणमा पनि रचनात्मक सहयोग पुऱ्याउने आकांक्ष यस समाजले राखेको छ । नेपालको प्रजातान्त्रिक आन्दोलनलाई निर्बाध रूपले हाकेर आएको र भविष्यमा पनि प्रजातन्त्रको संरक्षण र सम्वर्धन गर्न सक्ने नेपालको एउटै मात्र परिपक्व पार्टी ने. का. को हात मजबुद गर्ने पनि यसको चाहना छ ।

यसै आधारभूत अवधारणाहरू बोकेर जन्मिएको यस समाजलाई जन्माउन, अघि बढाउन र ठोस कार्यदिशा प्रदान गर्ने मन, वचन र कर्मले सहयोग गर्ने सम्पूर्ण गोरखाली बन्धुबान्धवहरू प्रति यो समिति हृदयदेखि नै आभार व्यक्त गर्दछ । ठोस कार्यक्रम मध्ये पत्रिका सम्पादन प्रकाशनमा बौद्धिक एवं आर्थिक सहयोग जुटाउने गोरखाली आत्मीय अग्रज एवं सहकर्मीहरू प्रति पनि सश्रद्धा धन्यवाद ज्ञापन नगरी रहन सकिन्न । मानव अधिकार, प्रजातन्त्र र कानूनी राज्यको

(बाँकी ८६ पेजमा)

## सम्पादकीय–

: १ :

गोरखा भौगोलिक इकाइ मात्र होइन भावनात्मक शमष्टि पनि हो । प्राचीनतम गोरक्ष स्थल, ऐतिहासिक एकोकरण केन्द्र, राष्ट्रियता, देशभक्ति र बहादुरीको पुञ्ज, साझा र जन सहभागपूर्ण संरचना भूमि गोरखाका ऐतिहासिक जीवित तथा सुषुप्त खण्डहरहरू खोतली त्यहाँबाट प्रेरणाका प्रकाशहरू खोज्दै आफ्नो गौरवमय अातीतबाट अनुप्राणित रहेर उद्देश्यपूर्ण आकांक्षा हरूको खोजीमा गोरखा र गोरखाका जनसाधारणमा जागरण पैदा गरेर नयाँ युगका हाँकहरूको निर्वाह गर्ने आत्मशक्ति र आत्म विश्वासको खोजिमा अग्रसर गराउन 'गोरखा गौरव' लाई अगाडि राख्ने प्रयत्न हामीहरूबाट भएको हो ।

इतिहासको प्रत्येक उत्तार्धरालाई उसको पूर्वार्धले अभिप्रेरित गरेको हुन्छ । यसैले कुनै पनि माटोमा उभिएको इतिहासको विरूवा संयोगको शिशु हुन सक्तैन । संयोगले इतिहासमा अप्रत्याशित भुमिका ग्रहण गरोस् तर त्यसको पृष्ठभूमि र निरन्तरता जीवीत रहंदैन । इतिहासले अन्ततः योजनावद्ध बाटो ग्रहण गर्नै पर्दछ । यही नै इतिहासको यथार्थता छ । बर्तमान नेपालले इतिहासका यही वस्तुतथ्य फला पारेको छ । गोरखाले नेपालको आधुनिक इतिहासको योजनाबद्ध उठान गरेको हो । असि र मसिलाई योजनाबद्ध दुरदृष्टिका साथ गोरखाका पूर्खाहरूबाट पहल भई साझा भावना, देशभक्ति र राष्ट्र प्रेमका बाँसुरीहरू वजन सुरू गरेका हुन् । इतिहासको प्रत्येक विद्यार्थीलाई १८ औं शताब्दीको हिमवतखण्डको भु-राजनैतिक स्थिति र तत्कालीन आवश्यकता बारे राम्रो परिचय नहुने प्रश्न नै छैन । अतः गोरखा स्थित पृथ्वीनारायण शाहको एकीकरण व्यक्तिगत लाभ र महत्वाकांक्षा प्ररित होइन- तत्कालीन इतिहासको आवश्यकता हो । यस आवश्यकता पूरा गर्न शासक, सेना, सेनानायक मात्र होइनन् सर्व साधारण व्यक्ति र व्यक्तिसमूहको समेत संलग्नता रहेका उदाहरणहरू छन् । एक जाति मात्रका समुदाय, धार्मिक समुदाय र गोरखाका उत्पत्ति समुदाय मात्र होइनन् - बहुजातीय - बहु भाषीय बहुक्षेत्रीय व्यक्ति र व्यक्ति समुहको साझा पहल र साझा आकांक्षाबाट आधुनिक नेपालको जग निर्माण भएको हो - भन्ने यथार्थता हाम्रा अगाडि जीवित छ। गोरखाले एकीकरण अघि आमन्त्रण गरी उद्योग व्यापारका लागि काठमाडौंबाट झिकाएका २४ कोठी नेवारी व्यापारीहरू, एकीकरण कालमा आधुनिक हातहतियार निर्माण गर्न झिकाएका मुसलमानहरू, गोरखाको एकीकरणसाथै अगाडि बढेका गोरखाद्वारा विजित क्षेत्रका जनता तथा सैनिकहरूको सहभागिता यस्ता उदाहरण छन् जसले साझाको भावनालाई मूर्तता दिन भुमिका निर्वाह गरेका छन् । पुनंजागरण र पुनःसंरचनाको आजको परिस्थितिमा सबै वर्ग भाषा, जाति र संप्रदायका नागरिकहरूमा यी दृष्टान्तहरूले आज पनि हामीलाई पर्याप्त प्रकाश दिन्छन् । राजादेखि रंकसम्म सबैलाई आफ्ना ऐतिहासिक भूमिकाको दिग्दर्शन गराउछन् र भावि मार्गको सुनिश्चतता तर्फपनि प्रेरणा दिन्छन् ।

उल्लेख्य पृष्टभूमिको आधारमा गोरखा र यस क्षत्रमा निर्वाह भएका भुमिकाहरूबाट



गोरखाका व्यक्ति समुदायमात्र होइन सम्पूर्ण नेपाल अधिराज्य समान अनुप्राणित रहन सक्दछ। हामी आफ्ना ओजस्वी पूर्खाका अठोट र बाचाहरूबाट आत्मसात हुदै भोलिको सुन्दर नेपालको परिकल्पनालाई मूर्त रूप प्रदानगर्न सक्षम हुन सक्दछौं । अहिले राष्ट्रले नयाँ युगमा प्रवेश गरेको छ । "साझा" भावनाले इतिहासका अनेकौं उतार चढाव सामना गर्दै एउटा निश्चित समाधानको विसौनी फेला पारेको छ । जनता र शासकवर्गका आपसी दृष्टिअन्तर विभिन्न परिस्थितिबाट खडा गरिएको हुकुमी परखाल हरु भत्किएका छन् । प्रजातन्त्रको नयाँ सूर्यदिप उदाएको छ । राजा र जनतामा संवैधानिक विश्वासका जगहरू लगाइएका छन् । राष्ट्रले ज्ञातअज्ञात असंख्य देशभक्तहरूको रक्त सिञ्चनबाट निर्माण गरिएको यस विश्वासको चौतारीको रक्षार्थ आत्म विश्वाश र आत्म निर्णयको शक्ति पैदा गराउनु छ । यसर्थ प्रजातन्त्रका पक्षमा जनताको मनोबल र उत्सर्ग शक्ति सिर्जना गर्नु आजको जिम्मेवार नागरिकहरूको पुनीत दायित्व हो भन्ने बोधगर्दै गोरखा गौरव लाई अगाडि उपस्थित गर्ने कार्य गोरखाबाट काठमाण्डौंमा आई विभिन्न पेशा र ब्यवसायमा रहेकाहरूको संगठन गोरखा काठमाण्डौं प्रजातान्त्रिक समाजबाट भएको छ ।

निश्चयनै यस प्रयाशको परिणाम स्वरूप हामीहरूमा आफ्ना पूर्खाको विवेक र साहसबाट पूर्ण जागरणको शक्ति संचारभई नयाँ हाँकका सामु प्रस्तुत रहन सक्ने संरचना शक्ति र देश भक्तिको बलिवेदीमा समर्पण र उत्सर्ग शक्ति सिर्जना गरेर लक्षित प्रयासको सफलता शिद्ध गराउन प्रेरक हुनेछ । वर्तमानको गोरखा र यसका सन्ततिहरूमा आफ्ना पूर्खाहरूको सन्देशले प्रजातन्त्र र समाजवादको संस्थापनामा आफ्ना मौजुदा प्रतिभा र साधनहरूको उपयोगका लागि प्रेरणा प्रदान गर्ने नै छ भन्ने हाम्रो अभ्यन्तरको अभिलाशा छ । किनभने कुनै पनि ऐतिहासिक गौरवले उसका उपासकहरूलाई अवश्य प्रेरणा गर्दछ । यही आज समयको बोली छ । समयका बोली संगै कर्तव्यका बालीहरू रोप्नु पर्दछ । यस प्रयत्नले हामीलाई त्यसै लक्षतर्फ उन्मुख गराउने छ ।

: २ :

विचारको यात्रा आनन्त्य हुन्छ । मानवजातिले हजारौं वर्षदेखि विभिन्न क्षेत्रमा विभिन्न किसिमका विचारहरूको संकलन र सम्पादन गर्दै आइरहेको छ । त्यसैले पूर्वमा 'अनन्तं प्रज्ञानं ब्रह्म' भन्ने सूक्ति परम्परित र चर्चित भएको होला । पूर्वमा वैदिक संहितादेखि र पश्चिममा होमरदेखि नै ज्ञानको भण्डारलाई लिखित रूपमा नै सुरक्षित गर्ने परम्परा भएको देखिन्छ । दर्शन, भाषा, साहित्य, विज्ञान राजनीति आदि क्षेत्रमा मत मतान्तरहरू देखिन थाले । यो राम्रो कि त्यो राम्रो भन्ने भाव पनि पैदा भयो । त्यसैले विचारकहरूले "वादे वादे जायते तत्त्व बोध" भनेर चिन्तन र मननको लागि सदा सर्वदा ढोका खुला गरिदिए । चिन्तन र मननबाट विचार र छलफलको निचोडमा नै तत्त्वको बोध हुन्छ भन्ने विचार प्रस्तुत गरे । यस्तै विचार संकलन सम्पादनको एउटा प्रयास हो प्रस्तुत गोरखा गौरव, जसले वर्तमानलाई स्पर्श गर्ने प्रयास गरेको छ ।

मानिस विचार र दर्शन द्वारा संञ्चालित

तत्व हो । पूर्वमा मनु, याज्ञवल्य, बृहस्पति, शुक्र, व्यास, कौटिल्य आदिले राजनैतिक आर्थिक सामाजिक र धार्मिक पक्षमा विचार विमर्श गरेका छन् । ती पुस्तकाकार कृतिहरू अद्यापि उपलब्ध छन् । मनु प्रथम चिन्तक हुन् र कौटिल्य निकै पछिका मानिन्छन् । यी सबैले समय सापेक्ष नयाँ नयाँ विचार दिदै गएका छन्। पश्चिममा सुकरात, प्लेटो, अरस्तु हुँदै मार्क्स, हिगेल, एन्जेल्स, लेनिन, माओ सम्मन अनेक विचार आए । एक शताब्दी जति साम्यवादीसिद्धान्तले मानिसलाई स्वर्णमय संसारको सपना देखायो । तर थन्दै एक शताब्दीको प्रयोग र परीक्षणले यस सिद्धान्तलाई असत्य सावित गरिदियो । स्वर्णमय समाज, राष्ट्र र संसारको सपना बोकेर आएको कम्युनिष्ट सिद्धान्त अहिले रूसमा र पूर्वी युरोपमा गरीबी भोकमरी असन्तोष र असन्तुष्टि छाडेर समाप्त भएको छ । साम्यवादी विचारको विरोध साम्यवादी मुलुकबाट नै शुरू भएको हो । योगोस्लाभाकियाको कम्युनिष्ट नेता मिलोमान जिलास, रूसी बुद्धीजीवी अलेक्जेण्डर सोल्जेनित्सिन, रूसी वैज्ञानिक सखारेभ, रोजा लक्जेमवर्ग आदि चिन्तकहरूले कम्युनिष्ट तानाशाही व्यवस्था माथि कडा प्रश्न चिन्ह उठाएर नयाँ चिन्तनको सूत्रपात गरे । यही क्रममा प्रजातान्कि समाजवादको धारणा विकसित भएको पाइन्छ । प्रजातान्त्रिक समाजवादी चिन्तनलाई महात्मागान्धी विलीब्रान्ट, फाँस्वामितरां, डा. राम मनोहर लोहिया, जय प्रकाश, विश्वेश्वर प्रसाद कोइराला आदिले व्यवहारिक व्याख्या गर्दै अगाडि सारेको पाइन्छ । एकतिर पूँजीवादी देशहरूमा आर्थिक अस्थिरताको भूकम्प आएको छ भने अर्को तिर साम्यवादी पर्खाल एकपछि अर्को ढल्दै गएका छन् । संसारका साम्यवादी चिन्तकहरूका अगाडि बी.पी.ले मानिस "अण्डबाट होइन अन्नबाट संचालित हुन्छ" भनेर चुनौति दिदै वर्तमान विश्वलाई 'प्रजा-तान्त्रिक समाजवाद अपरिहार्य बाटो भएको घोषणा गर्नु भएको थियो । वर्षदिन यताका संसारका घटना चक्रले यही सिद्ध गरि दियो । १९९० संगसंगै 'तानाशाहहरूको स्वर्णीम युग' संसारबाट करीब करीब समाप्त भएको छ । गोरखाली चिन्तनमा पनि यी यथार्थताहरूको छाप पर्नु बान्छनीय छ ।

प्रस्तुत संगालोले यही प्रजातान्त्रिक समाजवादी चिन्तनलाई र यही चिन्तनको आन्दोलनलाई अगाडि बढाउने नेपालको एउटै मात्र प्रजातान्त्रिक शक्ति नेपाली कांग्रेसका अस्तिता र अस्मितालाई उपस्थापित गर्ने जमर्को गरेको छ । त्यस्तै गोरखाको विगतको मूल्याङ्कनको लेखा जोखा वर्तमान भविष्यको विकासका सभाव्यताहरूलाई पनि प्रस्तुत गर्ने प्रयास गरिएको छ । आगामी अङ्कहरूमा गोरखाको अतीतको गौरव र वर्तमानको उन्मेषलाई प्रस्तुत गर्दै त्यसै मार्फत राष्ट्रिय चिन्तनको भावधारालाई अगाडि बढाउने जमर्को गर्नेछौं ।

गोरखा-गौरवलाई अमूल्य प्रेरणादायी सन्देश दिनुभई हामीलाई अरू उत्साहित गर्नु भएकोमा सर्वोच्च नेता श्री गणेशमान सिहज्यू प्रति र नेपाली कांग्रेसका कार्यवाहक अध्यक्ष एवं प्रधान मन्त्री श्री कृष्णप्रसाद भट्टराई [गोरखाका गौरव— किन भने उहाँको पुर्खौंली थलो गोरखा नै हो]। प्रति हृदयदेखि नै कृतज्ञता ज्ञापन गर्दछौं ।

(बाँकी ८५ पेजमा).



# सामाजिक विकृति र त्यसको निराकरण

—मकर पोखरेल
पालुमटार, गोरखा

मानिसलाई सदगुण अपनाउन केही असजिलो हुन्छ तर दुर्गुण सजिलै र छिटै सिक्न सकिन्छ । हाम्रो समाज पनि यो उक्तिबाट मुक्ति पाउन सकेको छैन । समाजमा सृजनात्मक सामाजिक काम गर्न कसैले जमर्को गऱ्यो भने या त ऊ उपहासको पात्र बन्दछ वा एकाङ्गी हुन्छ काम गर्ने भन्दा वादविवादमा नै लामो समय सकिने गर्छ । होस्टेमा हैंसे गर्ने भन्दा खुट्टा तान्ने प्रवृत्ति राम्रै फस्टाई सकेको अनुभव गर्नेको पनि कमी छैन । देश व्यापी रूपमा भएको यो महारोग साँचै भनु भने खास रूपमा १५,२० वर्ष यता यसले माराथुन दौड दौडयो ।

(१) हाम्रो समाजमा के के विकृति छन् त्यसलाई सरसर्ती नियाल्दा गाउँ तराई पहाडका गाउँहरूमा कुना कुनामा पनि गाउँको वीच पर्ने ठाउँमा चिया पसल, (दुकान) जुन दुकानमा चिया चुरोट, रक्सी, दुईचार जोर तास र सामान्य गृहस्थीका दैनिक उपभोगका सामान राखिन्छन् । हुन त यसरी गाउँ घरका कुना कुनामा पसल हुनु गृहस्थी जीवनका लागि राम्रो पनि हो तर त्यस्को सदुपयोग भन्दा दुरूपयोग भएको पाइन्छ । प्राय वर्ष भरी नै चिया पसलमा चिया पिउने निहुँमा पसल जाने गर्छन् । दुई चार जनाको जमघट पश्चात् तासको खाल सुरू हुन्छ कोही खेल्नमा व्यस्त त कोही हेर्नमा त कोही अनुत्पादक गफमा सुनौलो बिहानि यही क्रममा सकिन्छ । खाना खान हतारमा घर पुग्छन् । घर परिवारलाई दिन भरिको कामको बाडफाँड गरी पुनः उही चिया पसलमा जमघट शुरू । जब साँझ, पर्छ, अनि घेरै जसोले २,४ गिलासारक्सी लगाउदै घर फर्कन्छन् । यसरी हाम्रो समाजमा वर्षों वर्ष बित्ने गरेको छ । खास गरेर वर्ष भरिमा वंशाख, जेष्ठ, असार र मंसीरमा २,४ दिन खेती पाती गर्ने नाउँमा जमघट कम होला अन्यथा द्रुततर गतिमा बढिरहेछ जमघट

(८४ पेजको बाँकी)

त्यस्तै आफ्नो व्यस्तताको बावजूद पनि हाम्रा केही जिज्ञासाहरूको प्रत्युत्तरमा आफ्ना अमूल्य विचार हाम्रा पाठक समक्ष राखिदिनु भएकोमा महामन्त्री श्री गिरिजा प्रसाद कोइराला प्रति पनि कृतज्ञता प्रकट गर्दछौ । सम्पादन र प्रकाशन कार्यमा ठोस सहयोग गर्ने गो.का.प्र.स.का, सल्लाहकार समितिका र आर्थिक उप समितिका पदाधिकारीहरू र विज्ञापन संकलन गर्न दौडधूप गर्ने मित्रहरूप्रति धन्यवाद ज्ञापन गर्दछौं । लेख संकलन गर्न सहयोग गर्ने सहयोगीहरूको श्रम र मिहिनेतलाई आभार प्रकट गर्नु हामो हाम्रो कर्तव्य ठान्दछौं गोरखा गौरवलाई निरन्तरता दिन सहयोग सद्भावना र सुझावको अपेक्षा राख्दै यो प्रथम प्रयास पाठक समक्ष प्रस्तुत छ ।

चिया पसलमा। यो जमघठका सदस्य नोग्ने मानिस नै हुने गर्छन। एक क्षण सही रूपमा हिसाव लगाउं त ३६५ दिनमा कति दिन हामी कटिबद्ध भएर काम गर्छौं। अनि हामी गरिव र दु:खी नभए को हुने ?

हाल नेपालका महिलाहरूले नै घर गृहस्थीको संपूर्ण कार्य धानिरहेछन्। यिनै महिला वर्ग सब भन्दा शोषित छन्। यसरी बरालिने को हुन त ? यसो अध्ययन गर्दा जो जागिरे छन् वा जो अन्य कुनै पेशामा लागेका छन तिनीहरूलाई यो फुर्संद कमै छ तर जुन मानिस आफ्नो पारिवारिक वा अन्य कुनै कारणले पढ्न सकेन वा २,४ कक्षा अध्यन गरी अध्ययन रोकिन गयो यिनीहरूको संख्या यस्मा धेरै छ जुन मानिस शैक्षिक योग्यताको कमीले कुनै जागिरमा पनि हुँदैन वा कुनै अन्य व्यवसाय गर्न पनि सक्दैन तर अनपढ पनि होइन र सबै सरह खान लगाउन र खर्च गर्ने गर्छ। हाल नेपालमा यही वर्गनै परिवारका बोझ आफैमा बोझ भै रहेछन।

(२) आय श्रोत नहेरी खर्च गर्ने प्रवृत्ति अर्को छ जस्ले समाजमा विकृति पैदा गरिरहेछ। कुनै पनि चाड पर्व आउंछ खर्च गर्ने प्रवृति आय श्रोत हुने भन्दा नहुने जोडका तोडमा गर्छन्। दैनिक खर्च गर्ने बानी हुने नहुने सबैको एउटै स्तरमा छ। सामाजिक चलनमा अर्को विकृति छोरा छोरीको बिवाहा गर्दा हुने आडम्बरीपन हो। हाम्रो समाजमा सस्तो सुलभ विवाह कसैले गर्न खोजेर पनि गर्न नपाउने भै सकेको छ। फोस्रो इज्जतको लागि आफै बन्दगी बसेर पनि दाइजो र अन्य भोज भतेरमा धुम धाम मच्चाउनै पर्छ। धनी समूह आफ्नो रवाफ देखाउन खर्च बेजोड गर्छन भने निम्न वर्ग लहै लहैमा वा परिस्थितिले बाध्य बनाएर पनि। कुनै परिवारको वार्षिक आम्दानीको अनुपातमा वार्षिक खर्च घाटामा नै चल्ने गर्छ। वर्षेनी ऋणको बोझ बढ्दै जान्छ र केही वर्ष भित्रै ठूलो ऋण एकठ्ठा हुन्छ।

हालका केही वर्षदेखि वित्तीय संस्थाहरूले केही मात्रामा तिनै वर्गको आर्थिक उन्नति गर्ने मूल उद्देश्य लिई ऋणहरू उपलब्ध गराउन शुरु गरे। ती संस्थाहरूमा कृषि विकास बैंक, नेपाल बैंक लि०, वाणिज्य बैंक र साझा, सहकारी आदि हुन्। कागजी रूपमा अति उत्तम खालको उद्देश्य देखिए तापनि व्यवहारिक रूपमा तिनै संस्थाको आडमा फजुल खर्च गर्ने प्रवृत्ति बढ्यो। आफ्नो आम्दानीको अन्य उपाय नभए पश्चात कुनै न कुनै निहूंमा घर जग्गा धितो राखी ऋण उपलब्ध गराउने। वास्तविक रूपमा उद्देश्य बमोजिम काम नगरिने कारण कर्मचारीलाई विभिन्न उपायबाट खुशी तुल्याई ऋण उपलब्ध गरिन्छ। कुनै योजना देखाएर लिइएको ऋण दैनिक मसलन्दमा खर्च गरिन्छ र धेरैको घर जग्गा लिलाम भैसकेका छन् भने कति परिवारको लिलामीको मुखमा बसेका छन्।

देश र जनताका विकास चाहनेहरूले योजनाविदहरूले यिनै बेसाहारा र कुलतमा परेर छट्पटाई रहेकालाई मुक्त गराऔं वा होऔं। आत्मा आलोचना हामी आफैं गरौं के यी उल्लेखित क्रियाकलाप हाम्रो समाजमा छ वा छैन यदि छ भने अब सोचौं मुक्त हुने उपाय के ? हाम्रो टाउकामा परेका ऋण कुनै पनि सरकार, विदेशी



वा व्यक्तिले मिनाहा गर्दैनन्। सोच्नोस् अब हामी जीवनभर ऋणी बदमासी भएर नै बाँच्ने त ? के यो ऋणको बोझ सबै अरूहरूकै कारण हाम्रा टाउकोमा आएका हुन वा हामी स्वयं पनि यस्तो अवस्था हुनुमा जिम्मेवार छौं।

त्यसैले यही मौका हो अब हामी कसैको हतौडा नबनौं आफैं सोचौं सोच्न दिउँ अबको परिस्थितिमा को को सँग के के आशा र अठोट गर्ने खर्च हामी र हाम्रा सन्ततीको कल्याण कसरी गर्ने ?

**निराकरण**

(१) पहिलो कुरा कुलतबाट मुक्त हुन व्यक्तिगत रूपमा आत्मा देखिनै बचनवद्ध होऔं। चिया दुकान र भट्टिमा तास र फजुल गफ गरी समय खेर नफालौं।

(२) चियापान, सुरापान कम गरौं र पसलमा खरीद बिक्री पश्चात विना कामका नबसौं।

(३) आफ्नै गृहस्थीं घरमा गै आफ्ना जहान परिवारका काममा सहयोगी बनौं र आफ्ना खेत बारीमा उब्जने संभावित फलफूल, पशुपछी पालन र खेती र तरकारी उत्पादनमा समय लगाऔं।

(४) बिदा र फुर्संदका दिनमा सामाजिक रचनात्मक काम गर्ने परिपाटी बसाऔं।

(५) सरकारले संभाव्यता अध्ययन गरी संभावित ठाउँमा लगानी गर्ने सक्रय योजना बनाओस् र बनाउन सहयोग गरौं।

(६) रोजगारीमूलक व्यवसायलाई गाउँ स्तरमा स्थापना गर्ने सरकारी कार्यक्रम हुनु पर्ने र ग्रामीण स्तरबाट सामूहिक रूपमा सम्बन्धित ठाउँमा आवाज पुऱ्याउने।

(७) वित्तीय संस्थाले ऋण लगानी गर्दा सही ढंगबाट गरिनु पर्ने र निरीक्षण पनि वास्तविक रूपमा हुनु पर्ने।

(८) उत्पादित वस्तुहरूको बजार व्यवस्था नहुनाले कृषकमा हुने निरूत्साह हटाउन बजार व्यवस्था हुनु पर्ने र हाट बजारको व्यवस्था टाउँ परिस्थितिहेरी प्रचलनमा ल्याइनु पर्ने।

(९) ग्रामीण स्तरमा उपलब्ध हुने कच्चा पदार्थमा निर्भर हुने घरेलु व्यवसायमा प्रोत्साहन दिनु पर्ने।

(१०) सामाजिक र सांस्कृतिक कार्यक्रममा फजुल खर्च गर्ने चलन सक्रियताकासाथ वहिष्कार र निरूत्साहित गर्ने।

(११) आलस्य हाम्रो जीवन विरोधी रोग हो। फुर्संद हामीलाई कुलतमा लैजाने बाटो हो। सचेत भै दुबैबाट मुक्त हुन वचन बद्ध बनौं।

अब आउने सरकारले ठूला–ठूला कारखाना र योजना नबनाई आफ्नो देशमा उपलब्ध स्रोत र साधनले ल्याउने प्रकारका ग्रामीण रोजगारी मूलक योजना तय गरी सामाजिक विकृतिलाई निष्क्रय बनाउन नियम कानून बनाई अघि बढेमा अवश्य नै हालको दुर्गतिबाट मुक्त हुनु सकिन्छ। समाजमा एक व्यक्तिले अर्को व्यक्तिलाई सम्मानसाथ बोलीचाली र व्यवहार गर्ने बानी पनि साथ साथै लगेमा अरू समाज सुधारमा टेवा पुग्ने आशा गर्न सकिन्छ।

अन्त्यमा मानवीय हक अधिकारको लागि जीउ ज्यान दिन पनि पछि नपर्नु सच्चा मानवीयता हो भने आलस्य र निष्कर्म वस्नु आफुलाई आफैले गर्ने पाप वा पशुत्व हो।

## ० ० ० ० ० ० ० ०

—सुमन कट्टेल

उकालो ओराली,
जिन्दगी, यात्रा, थकान, विरह, व्यथा, छटपटी,
हामी किन जन्मन्छौं ? किन मर्छौं ?
पूर्व गए पश्चिम, पश्चिम गए पूर्व
सफलता, असफलता, दोभान
भौतिक आध्यात्मिक
+ — × ÷ यही नै त हो
सार्थकता, यही सार्थकताभित्र
म खोज्दै छु, म को हूँ, के हूँ, किन हूँ ।
मेरो उत्तर निस्कन दिदैनन्
श्रीकृष्ण दिदैनन्, क्राइष्ट दिदैनन्,
आइन्ष्टाइन दिदैनन्, गान्धी दिदैनन्
त्यसैले लाग्छ,
म यौटा अजीव शून्य हूँ,
शून्यै शून्य भित्रको शून्य
अगाडि पछाडि सबैतिर शून्य
सबै जना शून्यको अगाडि अङ्क थप्छन्
— + ÷ गर्छन्,
तर सबै व्यर्थ ......... ?
एउटा कल्पित भ्रम पालेर
मान्छे उत्तर खोज्छन्, उत्तर दिन्छन्,
तर . . .
म यौटा शून्यको उपज, शून्यबाट उछिट्टिएर
शून्यको अस्तित्व लिएर,
मेरो शून्यमा विलीन हुँदै जादै
शून्यमा हराउन गैरहेछु ।

(८० पेजको बाँकी)

अवधारणामा विश्वास राख्ने सम्पूर्ण गोरखाली दाजुभाइ तथा दिदी बहिनीहरूलाई यस संगठन भित्र गोल बन्ध हुन पनि हामी हार्दिक आह्वान गर्दछौं । यस समाजको आगामी विविध कार्यक्रम-लाई अहिले जस्तै गरी सहयोग, सद्भावना र सुझावका लागि अपील गर्दै सम्पूर्ण गोरखाली बन्धुहरूको माया ममता र दिशा बोधका साथ यस संगठनको अक्षुण्ण भविष्यको आशा राख्दछौं ।

सचिव:गोरखा का. प्र. समाज ०४७

## बूढी गण्डकी परियोजना : टिप्पणी

—सुमन थापा

अप्रिल १९८४ मा श्री ५ को सरकार जल-विद्युत मन्त्रालयले बूढी गण्डकी जल-विद्युत परियोजनाको पूर्व-सम्भाव्यता अध्ययन गरी सकेको रहेछ । हामीसँग अध्ययन - प्रतिवेदनको Volime No 1 प्राप्त भएकोले यस परियोजनाबारे "गोरखा गौरव" मार्फत जनसमक्ष ल्याएका छौं ।

"बूढीगण्डकी जल-विद्युत परियोजना" को अध्ययन-प्रतिवेदन अनुसार उक्त योजनाको कार्यन्वयन आर्थिक तथा प्राविधिक दुवै पक्षबाट लाभ हुने कुरा उल्लेख गरिएको छ । यसको क्षमता ६०० मेगावाट् विद्युत उत्पादन हुन सक्छ भनिएको छ । यो परियोजनाले १७११ परिवार-लाई पुनर्वास गराउन पर्ने छ तर वन्यजन्तुलाई भने कुनै असर नपर्ने भनिएको छ । मत्स्य-पालन सम्बन्धी भने प्रतिकूल असर कस्तो पर्छ यसको पुनः अध्ययन गर्न पर्ने पनि लेखिएको छ ।

बूढी-गण्डकी योजनाको प्रारम्भिक चरण सकिएर पनि यसलाई गतिदिएर अगाडि बढाउन विगत वर्षहरूमा तत्कालीन जिम्मेदार संस्थाबाट कुनै प्रयत्न भएन । अवश्य पनि यसका कारणहरू हुनपर्छ । अन्यथा यसलाई निष्प्राण गराउनु अरब मुलुकमा हाम्रो पैसा पठाई हामीलाई परावलम्बन बाट निर्मुक्त हुन नदिएको देखिन्छ । "गोरखा गौरव" मार्फत हामीले सुझाव पेश गरेका छौं कि सम्बन्धित संस्था वा निकायले भविष्यमा यस परियोजनालाई अगाडि बढाउने छ ।